# नेपालको धार्मिक इतिहास

(मुख्यतः शिलालेखको आधारमा
शुरुदेखि यक्षमल्लसम्म)

लेखक :-
जगदीशचन्द्र रेग्मी एम्. ए.

नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान
संस्कृति विभाग

प्रकाशक:

नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान
काठमाडौं, नेपाल।

प्रथम संस्करण वि.स. २०३०



मुद्रक:-
आदर्श छापाखाना
रामशाहपथ, थापाथली,
काठमाडौं, नेपाल।



श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव

# समर्पण

यस्येच्छया जगदिदम्पृथु विश्वरूपम्
सर्गस्थितिव्ययजराव्यसनादियोगैः ।
संयुज्यते वत तथा प्रतिमुच्यते च
तस्मै नमः सततमस्तु महेश्वराय ॥




वर्ण–भास्वर अनूभूतिमा नयाँ प्रत्यय जोडिने कल्पनाको प्राचुर्य भएको रचना–सौन्दर्यबाट प्रेरणा ग्रहण गरी बन्ध फुकेको, छन्द मिलेको, प्रशस्तिपूर्ण जीवनलाइ हामीले प्रतिष्ठा दिनुपरेको छ ।

समग्रताको दर्शन र पूर्णताको आनन्द तथा नव–नव सृष्टि–सृजनको आह्लाद अन्तर्निहित गुणको रूपमा समाविष्ट नभएको रचनाले समाजलाइ गति प्रदान गर्न सक्तैन ।

प्रस्तुत विचार–सरणीमा अग्रसर हुँदै नेपाल राजकीय प्रज्ञा–प्रतिष्ठानले श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव सरकारको अभ्युदयमा नेपाली वाङमयलाइ अझ बढी युगानुकूल र समृद्ध बनाउन महत्त्वपूर्ण भूमिका प्रदान गर्ने कुरामा म विश्वस्त छु ।

केदारमान व्यथित

कुलपति

नेपाल राजकीय प्रज्ञा–प्रतिष्ठान

२०३० साल, भाद्र ।

# मन्तव्य–

धर्म र संस्कृतिको दृष्टिले हेर्ने हो भने पनि दक्षिणपूर्वी एशियाली देशहरूमा नेपालको स्थान धेरै महत्त्वपूर्ण छ । इ० पू० अन्दाजी पन्ध्र सय वर्षदेखि बिस्तारै गंगाको मैदानमा फैलिंदै आएको आर्यसभ्यता र संस्कृतिको प्रभाव यस हिमवत्खण्डमा पर्नु स्वाभाविकै हो । भगवान् बुद्धको जन्म पनि नेपालमै भएको हो । यसैबाट नै अति प्राचीन कालदेखि नेपालमा हिन्दू र बौद्ध धर्मको प्रादुर्भाव भएको देखिन्छ ।

आजसम्म कुनै विद्वान्ले नेपालको धार्मिक इतिहासको विस्तृत रूपमा अध्ययन गरी पुस्तकका रूपमा प्रकाशित गर्न सकेका थिएनन् । यस दिशातर्फ डा० जगदीशचन्द्र रेग्मीको ध्यान आकर्षित भएको हुँदा अनेक परिश्रम गरी नेपालमा पाइने कैयन् महत्त्वपूर्ण शिलालेखहरूका आधारमा यस्तो मौलिक ग्रन्थ तयार गर्नु भई विद्वान् लेखकले प्रशंसनीय काम गर्नु भएको छ । प्रस्तुत ग्रन्थमा विभिन्न प्राचीन शिलालेखको अध्ययनद्वारा नेपालका शैव, वैष्णव तथा बौद्ध धर्मको क्रमविकास इतिहासको रूपरेखा राम्रोसँग खिचिएको छ ।

यसमा नेपालको धार्मिक परम्परा, संस्कृति र देव मूर्तिहरूको पनि अध्ययन गरी वैज्ञानिक ढंगले नेपालको धार्मिक इतिहास लेखिएको हुँदा यस किसिमको मौलिक ग्रन्थले यस विषयका बिद्यार्थीहरूलाई ठूलो मद्दत देला भन्ने मलाई पूरा विश्वास छ ।

लैनसिंह वाङ्गदेल
का० मु० उपकुलपति
नेपाल राजकीय प्रज्ञा–प्रतिष्ठान

# भूमिका

नेपाल, यो यस्तो देश छ जसको विन्यास अद्भुत रूपमा प्रस्तुत भएको छ। विभिन्नतामा एकता समादृत भएर यो हिमालयदेखि तर्पेतर्पे परेर तराईसम्म फैलेको छ। यहाँ आवहावा फरक पर्छन्, वनस्पतिहरू फरक फरकका उम्रन्छन्, जरीबूटी थरीथरीका पाइन्छन्, पशुपंछी, कीट-पतङ्ग पनि नाना किसिमका छन् र मान्छे पनि यहाँ अनेक प्रकारका देखापर्छन्। यसैले यहाँ धर्मकर्म सभ्यता संस्कृति पनि धेरै किसिमका छन् जस्तो लाग्छ। तर यहाँको माटोमा एउटा सिद्धान्त टुसाएको छ "ईशावास्यमिदं सर्वम्" भन्ने। त्यही मूल आधारमा आएर अनि सर्वधर्मसमन्वय हुन्छ। हिन्दूधर्मसापेक्षित यो अधिराज्य छ तापनि यहाँ शैव र वैष्णव धर्ममा रहेको विभेद जस्तै शैव र बौद्धमा रहेको भेद त्यति साह्रै फरक देखिंदैन।

यहाँका वर्णाश्रमी राजाहरूले बौद्ध धर्ममा सम्मान दर्शाएका छन्। यहाँ त्यसैले हिन्दू धर्मको अवान्तर भेद जस्तै शैव, शाक्त, सौर, वैष्णव मत छ त्यस्तै भने पनि हुने खालको बौद्ध मत पनि छ। धेरै फूल फुलेको गमलालाई सेतो तन्नाले छोपेर एकै रङ्ग भने झैं भन्न खोजिएको होइन, सत्यको अपलाप गरेर जनतालाई धोका दिन खोजिएको भन्ने कसैले सम्झनु हुँदैन। यहाँ एक दुई कुरा भनेर म आफ्नो कुराको पुष्ट्याइँ गर्दछु।

यहाँको बौद्ध धर्मावलम्बीहरू जो जति छन् तिनीहरूमध्ये धेरै बुद्धको मूर्ति, चैत्य या स्तूपको अर्चना गर्दछन्। त्यो क्रम, त्यो पूजा-पद्धति, त्यसमा गरिएका स्तुति के शैव र शाक्त धर्मबाट उधारो लिएको होइन भनी को भन्न सक्तछ। भगवान् बुद्धले जति भन्नुभो त्यो त विचारपरक सिद्धान्त मात्र छ। यहाँ गरिने बौद्धको श्राद्धमा 'तस्मैस्वधा' भनेर नै पिण्ड दिइन्छ। पञ्चस्कन्धात्मक आत्मा मान्ने दर्शनको पृष्ठभूमिमा नत्र श्राद्ध धर्मको समन्वय कहाँबाट प्राप्त भयो भन्नु! विदेशको धूलो छहारो उडाएर ल्याएको हावाले नेपालको माटो सबै ढाक्छ भन्ने पक्षमा मेरो तर्कले ठाउँ दिंदैन। यहाँ कुन शैव कुन बौद्ध दुवैले आफ्ना रीति-स्थितिअनुसार चाडवाड, आजापूजा, जात्रामात्रा चलाई आउँदा परस्परमा के संघर्ष हुन्छ र। हामीलाई तन्त्रको रसानले जोड़ेर दुवैलाइ ऐक्य गर्ने शक्ति दिएको छ। बाँडाकी छोरी कुमारीलाई राजारङ्कले पूजेको इन्द्रजात्राको

कुमारी रथयात्रा नेपाली पहाडवासीसम्मको जात्रा भएको छ । यसको पूर्वरूप जे होस् भनेर भन्न सकिन्न । यहाँ दशैं कुनचाहिं धर्म मान्नेले मान्दैन र । यसका अतिरिक्त कोही तीज कोही चौथी र कोही छट मान्दछन्, यो त उनीहरूको विचार-स्वातन्त्र्यको प्रबल प्रमाण हो ।

यहाँका राजाले अघिदेखिन् बुद्धधर्मलाई प्रश्रय दिंदै आएका छन् । भगवान् बुद्धअघिका जनक महान् हाम्रो प्राग् ऐतिहासिक दार्शनिक राजा हुन् । उनकै ब्रह्मसभाका योगेश्वर याज्ञवल्क्यले समन्वयको एक महान् शङ्खध्वनि गरे । शुक्ल यजुर्वेदको चालीसौं अध्यायको पहिलो मन्त्रमा "ईशावास्यमिदं सर्वम्" भनेर त्यस वेलादेखि यो सिद्धान्त प्रतिपादित धर्मवादमा नेपालले आस्था राख्तै आएको छ । इदम् शब्दका परिधिभित्र मूर्तैका मूर्तिमा यतिसम्म एकता आयो कि एकै मूर्ति दुई धर्मावलम्बीका विभिन्न आराधनाका पात्र बनेर अगाडि प्रस्तुत हुन्छन् । यहाँ बौद्धले कालरोषण भनी आराधना गरिने मूर्ति शैवको लागि संकटा भएकी छन् । शैवले गोपालेश्वर भनी पूजिने शिवलिङ्ग बौद्धको आर्यावलोकितेश्वर हुन्छ । एउटाले पूजिंदा असंमलु भनिएको यन्त्र अन्नपूर्णा भएकी छन् अर्काको पूजा प्रक्रममा यो के अज्ञान जन्य भएको भनेर म मान्न सक्तिन । यो समन्वयमूलक सिद्धान्तले भावाभिव्यक्ति गरिएको हो । पशुपतिनाथ पनि आर्यावलोकितेश्वर हुन्छन् र मन्जुश्री सिंगुकी सरस्वती बन्दछिन् । यो नङ मासु भई परस्परको पूरक सभ्यतालाई नबुझेर विदेशी धूलोको छहारी उडाएर फूट गर्नेसँग अब नेपाली सचेत भइसकेको छ ।

हाम्रो धार्मिक इतिहासलाई शिलापत्रमा कपिएको प्रमाणद्वारा र धर्मको ऐतिहासिक प्रमेयलाई प्रतिपादित गरी विद्वान् श्री जगदीशचन्द्र रेग्मीले यो नेपालको धार्मिक इतिहास तयार पार्नु भएको हो । यहाँ यो प्राप्त भएपछि उपयुक्त ठानी यसलाई संस्कृति विभागले आज प्रकाश गर्न पाएको छ । नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानबाट यो प्रकाशित भएको धार्मिक इतिहासबाट धर्मप्राण जनतालाई आफ्नो धर्मको समन्वयात्मक परम्परा अवगत हुन केही सकेमा हाम्रो प्रयास सफल हुनेछ । अन्तमा लेखकलाई धन्यवाद प्रदान गर्दै हाम्रो इतिहासले देखाएको बाटो कहिले नभुल्न पनि सबैसँग अनुरोध गर्दछु ।

चूडानाथ भट्टराई
आयोजक
संस्कृति विभाग

प्रज्ञा–भवन
कमलादी

# ग्रन्थ–परिचय

'नेपालको धार्मिक इतिहास' शीर्षक भएको यस लघु–ग्रन्थले प्राचीन र मध्यकालीन नेपालमा धार्मिक स्थितिको अध्ययन प्रस्तुत गरेको छ। ग्रन्थको मूल स्रोत शिलालेख छ तर प्राप्त अरू साक्ष्यहरूको सामञ्जस्य पनि यथास्थान गरिएको छ।

यस ग्रन्थमा साना ठूला गरी जम्मा ५ अध्याय छन्। पहिलो अध्यायमा शैवधर्मको वर्णन गरिएको छ। सामग्री र आकारको दृष्टिले यही अध्याय सबैभन्दा विस्तृत छ। यस अध्यायको परिशिष्ट भागमा नेपालमा शैवधर्म सम्बन्धी अनेक समस्याबारे विचार गरिएको छ। यसैमा दुइ अप्रकाशित मध्यकालीन अभिलेख पनि राखिएका छन् जसबाट तत्कालीन शैवधर्मको एक पक्षको चित्र प्रस्तुत गर्दछन्। यसैमा शैवधर्मको अन्ताराष्ट्रिय सम्पर्कबारे पनि विचार गरिएको छ।

दोस्रो अध्यायमा वैष्णवधर्मको इतिहास र नेपालमा लोकप्रियताबारे विचार गरिएको छ। यसैमा उपत्यकाका वैष्णव मूर्ति र नेपालका वैष्णव तीर्थबारे विचार गरिएको छ।

यस ग्रन्थको तेस्रो अध्यायमा नेपालको बौद्धधर्मबारे विचार गरिएको छ। यसमा बौद्ध सम्प्रदाय र आचार्य तथा बौद्ध विहारहरूबारे विशेष विवेचन गरिएको छ। बौद्ध विहारहरूको नाम र तिनको समय आदि जान्न सुबिधाको लागि केही तालिका बनाइएका छन्। यसको परिशिष्ट भागमा नेपालको बौद्ध-धर्मसम्बन्धी केही समस्याबारे संक्षिप्त विवेचन गरिएको छ। त्यसै प्रसङ्गमा तिब्बत र नेपालको सांस्कृतिक सम्बन्धबारे केही विचार प्रस्तुत गरिएको छ।

अरू सम्प्रदाय नाम अन्तरगत रहेको चौथो अध्यायमा शाक्त, सौर र गणेश, ब्रह्मा र चन्द्रमाको पूजा परम्पराबारे विचार गरिएको छ। पाँचौं अध्याय संक्षिप्त छ। यसमा नेपालमा रहेको सर्वधर्म समन्वयको आदर्शबारे संक्षिप्त बिवरण प्रस्तुत गरिएको छ। यसपछि सामान्य परिशिष्ट अन्तरगत नेपालका धार्मिक

कुराहरूमा महत्त्वपूर्ण जात्राबारे विचार गरिएको छ। यसैमा नेपालका बौद्ध शिलालेखको विशेषताबारे चर्चा गरिएको छ। यसपछि देवमूर्ति र मन्दिरहरूको चित्र प्रस्तुत गरिएका छन्। यसरी यस ग्रन्थको समाप्ति हुन्छ।

यो ग्रन्थ लेख्नाको उद्देश्य नेपालमा कुन कुन धर्मको कस्तो कस्तो स्थान थियो र तिनले राष्ट्रको निर्माणमा कुन रूपमा प्रेरणा दिए भन्ने कुराको उत्तर दिनु छ। आजसम्म नेपालका धर्महरूको यस्तो अध्ययन कुनै रूपमा पनि भएको छैन। अतः यो यस क्षेत्रमा एक मौलिक कार्य हो भन्नमा अत्युक्ति होओइन। यसै प्रसङ्गमा देवमूर्ति कलाको रूपमा नेपालका मूर्तिकला र धर्मको विशेषताको पनि वर्णन गरिएको जुन नेपाली संस्कृतिको एक महत्त्वपूर्ण अङ्ग हो। अनेक प्रसङ्गमा नेपाली धार्मिक परम्पराको मौलिकताको वर्णन गरी आनुषङ्गिक रूपमा नेपाली संस्कृतिको मौलिकताको सर्वप्रथम अध्ययन यस ग्रन्थमा गरिएको छ।

यस ग्रन्थको विशेषता आर्को कुरामा छ। नेपालका शिलालेखहरूको एक पक्ष अनुसार अध्ययन गर्ने काममा यो सर्वप्रथम हो। आर्को शब्दमा भनौं भने अभिलेखको मौलिक अध्ययनको क्षेत्रमा यो एक मौलिक काम हो। अनि शिलालेखहरूको आधारमा नेपालको धार्मिक इतिहास प्रस्तुत गर्ने काममा पनि यस ग्रन्थको मौलिक विशेषता छ।

झण्डै पाँच वर्ष पहिले यस ग्रन्थको रूपरेखा तयार भैसकेको थियो जब मैले एम. ए. अन्तिम वर्ष (प्राचीन इतिहास, संस्कृति तथा पुरातत्त्व-काशी हिन्दू विश्वविद्यालय) मा "नेपालका शैव अभिलेखको अध्ययन" शीर्षकको शोधप्रबन्ध (Thesis) लेखेको थिएँ। शैवधर्मबारे मात्र लेख्दा पुस्तकको आकार अलि सानो हुने हुनाले यस प्रसंगमैं नेपालका अरू धर्महरूको अध्ययन पनि गरियोस् अनि यस क्षेत्रमा एक मौलिक ग्रन्थ नेपाली संस्कृतिका विद्यार्थी र प्रेमीहरूको समक्ष आओस् भन्ने विचार लिई यो किताब तयार पारेको हुँ।

यस ग्रन्थको स्रोत शिलालेख मात्र भएकोले यसमा साहित्यिक साक्ष्यहरू-बारे विशेष ध्यान दिइएको छैन तर नेपाल माहात्म्य र हिमवत्खण्ड जस्ता महत्त्वपूर्ण ग्रन्थहरूको सामञ्जस्य सम्बद्ध स्थलहरूमा गरेर शिलालेखहरूबाट ज्ञात कुराहरूको समर्थन गरिएको छ।

यस ग्रन्थले नेपाली संस्कृतिको सम्यक् अध्ययनमा राम्रो सघावट पुऱ्याउने छ भन्ने आशा गर्न सकिन्छ किनभने हाम्रो देशको संस्कृतिको निर्माणमा धर्महरूकै महत्त्वपूर्ण स्थान रहिआएको छ। यसमा प्रासङ्गिक रूपमा देवमूर्तिहरूको केही संक्षिप्त परिचय प्रस्तुत गरिएको छ जो एक मौलिक कार्य हो। यसै प्रसंगमा

नेपाली मूर्तिकलाको प्राचीनताबारे चर्चा गरिएको छ। किरातकालमा मूर्तिकला थियो कि थिएन भन्ने एक महत्त्वपूर्ण प्रश्न छ जसको यथाशक्य समाधान गर्ने प्रयत्न पशुपतिको प्राचीनताको विवेचन प्रसंगमा गरिएको छ।

यस ग्रन्थको लेखन कार्यमा कतिपय मित्रहरूको सहयोग पाएको छु तिनमध्ये केहीको नाम यहाँ दिनु आवश्यक छ–डा. प्रयागराजज्यूले केही चित्र दिई सहयोग गर्नु भएकोमा उहाँको म आभारी छु। योगी नरहरिनाथज्यूले पनि शैवधर्मसम्बन्धी अध्ययनमा केही सहयोग गरी मलाई आभारी पार्नु भएको छ। यस प्रसङ्गमा ती लेखकहरूलाई पनि धन्यवाद दिनै पर्छ जसको किताबको अध्ययनको फलस्वरूप यस ग्रन्थको आधारशिला रहेको छ।

२०२३ फागुन ७

जगदीशचन्द्र रेग्मी

# विषय-सूची

# अध्याय-१

# शैव धर्म

## १

## नेपालमा शैव धर्मको प्राचीनता

नेपाल आज शैव धर्मको प्रमुख केन्द्रको रूपमा प्रख्यात छ। प्रतिवर्ष विदेशका (भारतका) हजारौं शिवभक्त यहाँ तीर्थयात्रा गर्न आउँछन्। यस कुरामा हामीमा एक प्रश्न उठ्न सक्दछ कि शैव धर्म नेपालमा कति पुरानो हो ?

नेपालमा शैव धर्मको प्रवेश कहिले भयो भन्ने कुरामा निश्चित् सिद्धान्त बनाउनु अलि कठिन छ। नेपाल माहात्म्य तथा हिमवत्खण्ड जस्ता पौराणिक ग्रन्थहरूको अनुसरण गर्ने हो भने नेपालमा यस धर्मको प्राचीनता सत्ययुगभन्दा प्राचीन मान्नु पर्दछ।[१] यी पौराणिक ग्रन्थको वक्तव्यको लाक्षणिकताबाट यही सार निकाल्न सकिन्छ कि नेपालमा शैवधर्म निकै पुरानो हो।

नेपाल माहात्म्य तथा हिमवत्खण्डमा यस्ता अनेक कथा दिइएका छन् जुनले नेपाललाई महत्त्वपूर्ण शैवक्षेत्र सिद्ध गरेका छन्। उक्त ग्रन्थहरूको कथन अनुसार पशुपतिको मन्दिरनेर स्थित मृगस्थली भगवान् महादेवको क्रीडाभूमि हो जहाँ महादेवले मृगको रूपमा क्रीडा गरेका थिए[२] र जुन कारणले त्यस स्थानको नाम नै मृगस्थली रहेको अनुमान हुन्छ।

नेपालको सबैभन्दा पुरानो जनजाति किरातको वंशावली ( इतिहास )

---

[१] नेपालमाहात्म्य-अध्याय, १, श्लोक ६-५६।

[२] नेपालमाहात्म्य अध्याय १. तथा हिमवत्खण्ड अध्याय ८०.

मा पनि शिवलाई किरातहरूको कुलदेवता भनेर वर्णन गरिएको छ।[१] सम्भव छ किरातहरूको समयमा (ईस्वी संवत् पूर्व १००० तिर) नै शैवधर्मले नेपालमा राम्रो लोकप्रियता प्राप्त गरिसकेको थियो। यसैले किरातहरूले त्यसलाई स्वीकार गरी आफ्नो मुख्य देवता मानेका थिए। डा. यदुवंशीको मत छ कि ऋग्वेद र अथर्ववेदका सूक्तहरूको रचनाकाल पछि र यजुर्वेदका सूक्तहरूको रचनाकालभन्दा पहिले कुनै समयमा रुद्रसंग एक आर्येतर देवताको आत्मसात् भयो। श्री यदुवंशीको विचार छ कि यस नवीन देवतालाई हिमालयको उपत्यकामा बस्ने केही जनजातिहरू पूजा गर्दथे। यस देवतालाई उहाँले हिमालयका निम्न पर्वतश्रेणीमा निवास गर्ने किरात आदिसंग सम्बद्ध गर्नु भएको छ।[२]

किरात जाति पनि हिमालयको उपत्यकामा वा त्यसका यताउति निवास गर्ने देखिएकोले उक्त प्रकारको अनुमानबाट यो कुरो पुष्ट हुन्छ कि किरातहरूमा शैवधर्म धेरै पहिले लोकप्रिय भै सकेको थियो। आज पनि पशुपतिनेर किरातेश्वर महादेवको लिंगरूप विद्यमान छ जो स्पष्टतः किरातसंग सम्बद्ध रहेको ज्ञात हुन्छ। हिमवत्खण्डमा पनि किरातेश्वर सम्बन्धी कथाको वर्णन गरिएको छ।[३] उक्त ग्रन्थमा (र अरू पौराणिक ग्रन्थमा पनि) शिवलाई किरातको अवतार ग्रहण गरेको रूपमा वर्णन गरेको पाइन्छ। यस किसिमका कथा साङ्केतिक रूपमा किरातजाति (जो प्राचीन कालमा अति शक्तिशाली जाति थियो) माथि शैव-धर्मको प्रवेश वा लोकप्रियता स्पष्ट्याउँछन्। महाभारतमा वर्णित अर्जुन तपस्याको लागि हिमालयमा बस्दा किरातरूप महादेव सम्बन्धी रोचक कथा[४] पनि किरातसंग शैवधर्मको सम्बन्ध बारे आर्को तथ्य प्रकट गर्दछ।

यसरी किरातकालमा नेपालमा शैवधर्म लोकप्रिय भैसकेको देखिन्छ। यस घटनालाई हामी ईसा पूर्व १००० मान्न सक्दछौं तर प्राप्य प्रमाण नेपालमा शैव धर्म अझ प्राचीन कालमा चलेको सिद्ध गर्दछन्। ब्राह्मणग्रन्थहरूमा उत्तर अथवा उत्तरपूर्व दिशालाई रुद्रको विशेष आवास भनिएकोछ।[५] उत्तरपूर्व भनेर नेपालतिरै सङ्केत गरेको कुरा स्पष्ट छ। यस विवरणबाट पनि नेपालमा

---

[१] द्रष्टव्य-नेपालको सङ्क्षिप्त इतिहास-प्रेमबहादुर लिम्बू

[२] शैवमत-डा. यदुवंशी पृष्ठ-१५

[३] हिमवत्खण्ड अध्याय-७० श्लोक-६७

[४] महाभारत, वनपर्व अध्याय. ३९

[५] ऐतरेय-५,२६; कौशीतकी-२, २; तैत्तिरीय-१,६,१०; शतपथ-४,५,२,१०।

शैवधर्मको प्राचीनता स्पष्ट हुन्छ ।

वैदिककालमै नेपालमा शैवधर्म चलेको कुराका केही आनुषङ्गिक प्रमाण पाइन्छन् । यजुर्वेद अन्तर्गत शतरुद्रीयस्तोत्रमा[१] रुद्रलाई गिरिशन्त, गिरित्र, गिरिश, गिरिचर तथा गिरिशय आदि भनिएको छ र यसरी उनलाई पर्वतीय क्षेत्रहरूसंग सम्बद्ध गरिएको छ । शतरुद्रीय स्तोत्रमा नै रुद्रलाई पुनः पशुपति, वनानां पतिः ( वनका मालिक ) भनिएको छ र पछि रुद्रलाई वनेचरहरूसँग सम्बन्धित देखाइएको छ । यस विषयमा डा. यदुवंशीको अनुमान छ कि यी जातिहरू ( वनेचर जाति ) हिमालयका उपत्यकाहरूमा निवास गर्दथे ।[२] यी प्रमाण हिमालयका उपत्यकातिर शैवधर्मको प्रचार भएको कुरातिर सङ्केत गर्दछन् । नेपाल पनि हिमालयको काखमा रहेको हुनाले ती प्रमाण नेपालमा पनि स्पष्टतः लागू हुन्छन् ।

यसरी विचार गर्दा नेपालमा शैवधर्मको प्राचीनताबारे स्पष्ट ज्ञान हुन्छ ।

---

[१]यजुर्वेद ( तैत्तिरीय संहिता)–४, ५, १ इत्यादि
[२]शैवमतः डा. यदुवंशी पृ. १६

२

# शैव धर्मको इतिहास

प्राचीन कालदेखि शैवधर्म चलिआएको ज्ञात भएर पनि नेपालमा यसको राम्रो गतिविधि ईस्वी संवत्को पाँचौं शताब्दीतिर मात्र थालिएको देखिन्छ। त्यसै वेलामा नेपालको इतिहास पनि स्पष्टिदै आएको देखिन्छ।

मानदेव प्रथमको पालामा नेपालमा शिलालेख लेख्ने काम प्रारम्भ भएको बुझिन्छ। त्यस कालका सात अभिलेख शैवधर्मसंग सम्बद्ध छन्। अतः त्यस कालमा शैवधर्म कत्तिको लोकप्रिय थियो भन्ने कुरा थाहा पाइन्छ। मानदेव स्वयं वैष्णव थिए तर उनका दुई रानी क्षेमसुन्दरी र गुणवती शैवधर्म मान्दथे भन्ने कुरा उनीहरूले शिवलिंग स्थापना गरी लेखाएको शिलालेखबाट ज्ञात हुन्छ।[१] मानदेवकी छोरी विजयवती पनि शैवधर्मकी अनुयायिनी थिइन्। उनीले सूर्यघाटको किनारामा एक शिवलिंग (जसको नाम शिलालेखमा विजयेश्वर दिइएको छ) स्थापित गरी त्यसैमा शिलालेख पनि लेखाएकी छिन।[२] यी उदाहरणबाट के स्पष्ट हुन्छ भने मानदेवको परिवारमै पनि शैवधर्म निकै लोकप्रिय थियो। राजपरिवारमा शैवधर्मको प्रवेश देखिएकोले यसले राम्रो लोकप्रियता पाइसकेको बुझिन्छ।

मानदेवकालिक अरू अभिलेख पनि तत्कालीन नेपालमा शैवधर्मको लोकप्रियता बताउँछन्। ती सबै अभिलेख शिवलिंगमा लेखिएका हुनाले त्यस समयमा शैवधर्मानुयायीहरू आफ्नो धार्मिक अभिवृद्धिको लागि शिवलिंग स्थाप-

---

[१]क. क्षेमसुन्दरीको सं. ३९० को लाजिम्पाटको अभिलेख इ. सं. प्र. प्र. (प्र. भाग) पृ. २४६

ख. गुणवतीको संवत् ४१९ को टुकुचा शिवलिंग अभिलेख, ऐजन–पृ. २६४

[२]अ. सं. भाग—१. पृ. ९३,

नाको आदर्श राख्दथे।[१] मानदेवकालिक लिपिमा लेखिएको पशुपति मन्दिर-बाट प्राप्त शिलालेखमा "राज्यवर्द्धनदेव" को उल्लेख गरी पूजा आज्ञाको उल्लेख गरिएको छ।[२] उक्त नाम पशुपतिलाई नै संकेत गरिएको बुझिन्छ र "राज्य-वर्द्धन" शब्दको अर्थ बुझदा (राज्यको वृद्धि गर्ने देवता) शैवधर्म राष्ट्रिय धर्मको रूपमा रहेको थियो भन्ने अनुमान गर्न सकिन्छ।

मानदेवपछि अंशुवर्माको समयसम्म शैवधर्मको इतिहास त्यति स्पष्ट छैन। तैपनि केही शिलालेख त्यस कालका शैव धर्मानुयायी जनताको क्रियाशीलता बताउँछन्। संवत् ४५५ को भस्मेश्वर अभिलेखबाट त्यस कालमा शैवधर्मको लोकप्रिय रूप स्पष्टिन्छ। उक्त अभिलेखमा त्यसका नायक प्रतीहार (एक सरकारी पदको नाम) ध्रुवसङ्घवार्त्तले भद्रेश्वर, नाघेश्वर, शुभेश्वर, स्थितेश्वर र रवीश्वरको लागि केही जग्गा दिई गुठी बनाइदिएको वर्णन गरिएको छ।[३] यसै गरी गुप्त परिवारकी आभीरीले आफ्ना पतिको पुण्यको लागि अनुपरमेश्वर शिवलिंगको स्थापना गरी मन्दिर पनि बनाइदिएकी थिइन्।[४]

त्यस समयमा पशुपतिनेर नाघेश्वर मन्दिर निकै प्रख्यात थियो।[५] ध्रुवसंघको अभिलेखमा नाघेश्वरको उल्लेखको वर्णन त माथि नै गरिएको छ। यही नाम ४६६ संवत् (शक) को आर्यघाटनेरको शिवलिङ्गाभिलेखमा पनि उल्लेख भएको पाइन्छ। त्यस शिलालेख अनुसार मानमतीले नाघेश्वरको लागि

---

[१]क. नरवर्माको लाजिम्पाट शिवलिंग अभिलेख–नोली पृष्ठ–७

ख. रत्नसंघको धोपाटन शिवलिङ्ग अभिलेख–ऐजन पृष्ठ–६

ग. जयलम्भको पशुपति शिवलिङ्ग अभिलेख–ऐजन पृष्ठ–१०

घ. रत्नसंघ र प्रभुसंघको धोपाटन शिवलिङ्ग अभिलेख ऐजन पृष्ठ–१३

[२]ज्येष्ठशुक्लत्रयोदश्यां राज्यवर्द्धनदेवश्य स्नपनमङ्गपूजा – – ... राज्ञा राज्य-वर्द्धनस्नपनादीनां भूमि मा ६० ... ... ...। अ. सं. भाग ५ पृ. ६

[३]भगवतः पशुपतेः क्षेत्रे स्वयम्प्रतिष्ठापितेभ्यो भद्रेश्वरनाघेश्वरशुभेश्वरस्थितेश्वर-रवीश्वरेभ्यः पञ्चभ्यः कारणपूजानिमित्तं खण्डफुट्टप्रतिसंस्कारनिमित्तञ्च प्रतीहार ध्रुवसंघवार्त्तनस्वपुण्याप्यायनार्थम्मातापित्रोश्चानुग्रहार्थञ्च स्वजनगोष्ठिकाधीनं कृत्वा यूपग्रामस्य दक्षिणेन सँवैद्ये क्षेत्रन्दत्तं भूमि ४०० पिण्डकञ्च मा ४००– अ. स. भाग–१ पृष्ठ २६

[४]नोली पृष्ठ–२३

[५]तुलनीय गोरक्षनाथ अथवा नाथ सम्प्रदाय अध्याय।

शालगम्बीक्षेत्रमा केही जग्गा दिएकी थिइन् ।[1] ध्रुवसंघको अभिलेखको नाघेश्वर र मानमतीको अभिलेखको नाघेश्वर एकै हुन् भन्ने मेरो अनुमान छ ।

अंशुवर्माको समयमा शैवधर्मको विशेष उन्नति भएको बुझिन्छ । शिवदेवको सामन्तको रूपमा नै उनी प्रख्यात शैव थिए । यसैले शिवदेवले आफ्नो खोपासी अभिलेखमा उनलाई "भगवद्भवपादपङ्कजप्रणामानुष्ठानतात्पर्योपात्तायतिहितश्रेयस्"[2] विशेषण दिएका थिए । स्वतन्त्र शासक भएपछि अंशुवर्माले "भगवत्पशुपतिभट्टारकपादानुगृहीतः" उपाधि लिई आफूलाई शैवधर्मको अनुयायीको रूपमा स्पष्टयाए । यो उपाधि सर्वप्रथम उनले नै चलाएका थिए र यस कुराबाट यो स्पष्ट हुन्छ कि उनले नेपालका प्रधान राष्ट्रिय देव पशुपतिलाई राष्ट्रदेवको रूपमा प्रतिष्ठापित गरेका थिए । यिनकै अभिलेखमा कैलासकूटभवनको उल्लेख हुन थालेको देखिएकोले उक्त भवन अंशुवर्माले नै बनाएको अनुमान हुन्छ । आफूले बनाएको महलको नाम पनि आफ्ना कुलदेव महादेवको आवास कैलासकै राखेकोले यो उनको शिवधर्म (शैवधर्म) प्रति रहेको उत्कट आस्था प्रकट गर्दछ ।

शिलालेखको शीर्षभागमा विभिन्न रूपमा साँढे बनाउने परम्परा पनि सर्वप्रथम अंशुवर्माले नै चलाएका थिए । अंशुवर्माको पशुपति अभिलेखको शीर्षभागमा बसेको साँढेको चित्र उत्कीर्ण गरिएको छ ।[3]

अंशुवर्माको समयमा अरू धर्म सरह शैवधर्मको पनि उत्तिकै उन्नति भएको देखिन्छ, तर राजाको धर्म शैव भएकोले यसैको विशेष महत्त्व रहेको कुरा अनुमित हुन्छ । उनले पशुपति चौपाटन अभिलेख प्रसारित गरी पशुपति क्षेत्रमा रहेको शूरभोगेश्वर महादेव ( उनकी (अंशुवर्माकी) बहिनी भोगदेवीले आफ्ना पति शूरसेनको पुण्यप्राप्तिको लागि स्थापना गरिएको ), उनकी भान्जी भाग्यदेवीद्वारा संस्थापित लडितमहेश्वर र उनीहरूको पूर्वजले स्थापित गरेको

---

[1] भगवतः नाघेश्वराय मानमत्या दत्तं दोवग्रामोद्देशे शालगम्बीक्षेत्रपिण्डक मा २८ अत्र देशे खुड्डुस्वामिनः दत्त मा २ सं. स. १–७ पृष्ठ ४८, नोली पृष्ठ ३२

[2] नोली पृष्ठ–४१

[3] भन्साहिटी अभिलेखमा शीर्षभागमा पनि बसेको सांढे बनाइएको छ । इतिहास शिरोमणि बाबुरामज्यूले यस अभिलेखको संवत् ३७ पढ्नु भएको छ (नेपाली पूर्णाङ्क १६, पृ. ७) यदि यो सत्य हो भने यो अभिलेख यस किसिमको यो पहिलो अभिलेख यसैलाई मान्नु पर्दछ ।

दक्षिणेश्वर महादेवको प्रबन्धको लागि केही बरबन्दोबस्त गरी दिएका थिए।[१] उनको शासनकालमा शैव मन्दिरहरूको पुनर्निर्माण कार्य भएको कुरा अंशुवर्माको सुन्धारा पाटन अभिलेखबाट ज्ञात हुन्छ। उक्त अभिलेखमा "माटिन्देवकुल" (माटिन् गाउँको मन्दिर) को पुनर्निर्माणको व्यवस्था गरिएको कुरा वर्णित छ।[२]

त्यस कालमा शैवधर्मका प्रसिद्ध मन्दिरहरूको नामोल्लेख अंशुवर्माको ३२ संवत्को हांडीगाउँ अभिलेखमा भएको छ। त्यसमा लेखिएका देव मन्दिर (?) हरूमध्ये निम्नलाई शैवधर्मसंग सम्बद्ध गर्न सक्दछौं

| | |
|---|---|
| पशुपती | वाग्वतीपारदेव |
| रामेश्वर | पर्वतेश्वरदेव |
| मानेश्वर | धारामानेश्वर |
| कैलासेश्वर[३] | |

तर उक्त मध्ये एक दुइको परिचय प्राप्त गर्न सकिन्छ। बांकीको परिचय पाउन अलि कठिन छ। पशुपति त आज पनि त्यसै नामले प्रख्यात रही आएको मन्दिर हो भन्ने कुरामा केही शङ्का हुन सकोइन। कैलासेश्वर चाहिं पशुपतिनेरको कैलासमा रहेका शिवलिङ्गहरूमध्ये कुनै एक चाहिं हुनु सम्भव छ। सम्भवतः यसै नामले त्यस सानो पहाडको नाम पनि रहेको कुरो धेरै सम्भाव्य छ। उक्त सूचीमा दुई मानेश्वको उल्लेख विशेष चाख लाग्दो छ। एउटा केवल मानेश्वर अर्को धारामानेश्वर। दुई मानेश्वरको राम्रो परिचय पाउन सकिएको छैन। नक्सालबाट प्राप्त एक अभिलेखमा "मानेश्वरराजाङ्गण" को उल्लेख गरिएको

---

[१] पशुपतौ भगवान्छुरभोगेश्वरोऽस्मद्भगिन्याश्रीभोगवर्मजनन्या भोगदेव्या स्वभर्त्तू राजपुत्र शूरसेनस्य पुण्योपचयाय प्रतिष्ठापितो यश्च तद्दुहित्राऽस्मद्भागिनेय्या भाग्यदेव्या प्रतिष्ठापितो लडितमहेश्वरो यश्चैतत्पूर्वजैः प्रतिष्ठापितो दक्षिणेश्वरस्तेषाम् अधः शालापाञ्चालिकेभ्यः प्रतिपालनायातिसृष्टम्...... नोली पृष्ठ–५६

[२] माटिन्देवकुलमर्धविनिपतितेष्टकापंक्तिविवरप्रतिष्ठनकुलकुलाकुलितभूषिकासार्थदूरविघटितनिरवशेषद्वारकवाटवातायनादिजीर्णदारुसंघातं यत्नतः प्रतिसंस्कार्य तस्यदीर्घतरपश्चात्कालसौस्थित्यनिमित्त' तदत्तयनीविप्रतिबद्धम् एव माठिङ्ग्रामस्य दक्षिणतो राजभोग्यतामापन्नं विंशतिकया चतुःषष्टिमानिकापिण्डकं क्षेत्रम् इत्यादि–नोली पृष्ठ–५३

[३] नोली पृष्ठ– ५०–५१

छ[१] यदि यस उल्लेखलाई मानेश्वर मान्न सकिन्छ भने मानेश्वर मन्दिरलाई नक्साल लाजिम्पाट चेत्रतिर रहेको मान्न सकिन्छ। अंशुवर्माले उक्त नामहरूको उल्लेख गरी आर्थिक सहायता दिएका हुनाले यिनै मन्दिरहरू त्यसकालका शैव जनताका आदरका केन्द्र रहेका रहेछन् भन्ने अनुमान गर्न सक्दछौं।

ध्रुवदेव र जिष्णुगुप्तको शासनकालमा पनि शैव धर्मको उत्तिकै उन्नति भइरहेको कुरा त्यसकालका शिलालेखले बताएका छन्। यसै कालका अभिलेखमा सर्वप्रथम विशेष शैव सम्प्रदायको उल्लेख पाइन्छ। अतः यस कालमा ती ती सम्प्रदायहरूको विशेष उन्नति भएको बुझिन्छ। यी सम्प्रदायहरूको अध्ययन सम्प्रदाय सम्बन्धी अध्यायमा गरिने छ। जिष्णुगुप्तको उपाधि पनि अंशुवर्माकै जस्तो "भगवत्पशुपति भट्टारकपादानुगृहीतः" थियो जसबाट स्पष्ट हुन्छ कि जिष्णुगुप्त पाशुपत शैव सम्प्रदायका अनुयायी थिए। ध्रुव र जिष्णुले नाघेश्वरको मन्दिरको लागि केही प्रबन्ध गरिदिएको कुराको वर्णन आदेश्वर फस्कुको अभिलेखबाट थाहा पाइन्छ।[२] यिनीहरूको पालाका केही शिलालेखका शीर्ष-भागमा अंशुवर्माका शिलालेखको जस्तै बसेका सांढेको चित्र उत्कीर्ण गरिएको पाइएको छ। अंशुवर्माले चलाएको यस परम्परालाई ध्रुवदेव र जिष्णुगुप्तले चलाइरहे तर त्यस चिन्हमा पनि केही नवीनता ल्याएको देखिन्छ। आदेश्वरको शिलालेखमा त्यसको शीर्षभागमा बीचमा बसेको सांढे छ तर त्यसको दुईतिर त्रिशूल खडा रहेको देखिन्छ।[३]

भीमार्जुनदेवसंग मिली संयुक्त शासन गर्ने विष्णुगुप्त (जिष्णुगुप्तका छोरा) लाई पनि संयुक्त शासनका शिलालेखमा अंशुवर्मा र जिष्णुगुप्तलाई झैं 'भगवत्पशुपति भट्टारकपादानुगृहीतः' पाशुपत उपाधि दिइएको छ। यसबाट पनि विष्णुगुप्त पाशुपत सम्प्रदायका अनुयायी रहेछन् भन्ने थाहा पाइन्छ।

नरेन्द्रदेवको शैव धर्मको अझ विशेष उन्नति भएको थियो। यिनले पनि

---

[१] नोली पृष्ठ– १२४

[२] ...... श्रीभीमवर्मप्रभृतिनां स्वर्लोकसुखोपभोगपरम्परा विच्छेदहेतोः भगवतो नाघेश्वरस्य प्रतिष्ठानं यद् तद् अस्यैव प्रतिपालनाय विज्ञापितैरसा ...... सलञ्जू-ग्रामेषु .......दक्षिणपश्चिमोत्तरा ...... नोली पृष्ठ–७०

[३] नोलीले यस अभिलेखको परिचयमा केवल बसेको सांढे लेखेका छन् (पृष्ठ–७०) तर उक्त अभिलेखको शीर्षभागको निरीक्षण गर्दा सांढेका दुइपट्टि त्रिशूल स्पष्ट देखिन्छ।

'भगवत्पशुपतिभट्टारकपादानुगृहीतः' उपाधि लिएकाले पाशुपत धर्म मान्ने रहेछन् भन्ने बुझिन्छ। यिनको समयका शिलालेखमा अनेक नवीन शैव सम्प्रदायको उल्लेख भएको पाइन्छ। नयाँ शैव सम्प्रदायको उल्लेख हुनु त्यस कालमा शैव धर्मको विशेष उन्नति भएको कुरा सङ्केतित हुन्छ। नरेन्द्रदेवकै छोरा द्वितीय शिवदेवको पालामा पनि शैव धर्मको उत्तिकै उन्नति भएको थाहा पाइन्छ। उनको पालाको शिलालेखमा एक नवीन शैव सम्प्रदायको उल्लेख पाइएको छ। उनको उपाधि पनि अंशुवर्मा आदिको जस्तै 'भगवत्पशुपतिभट्टारक-पादानुगृहीतः' छ। यसले स्पष्ट हुन्छ कि उनी पाशुपत सम्प्रदायका अनुयायी रहेछन्। यिनका पालाका शिलालेखका शीर्ष भागमा पनि साँढेको चित्र अङ्कित भएको देखिन्छ।

द्वितीय शिवदेवका छोरा जयदेव (द्वितीय) भए। यिनी पनि शैव धर्मानुयायी थिए। यिनको पालामा अपूर्व शैव शिलालेख उत्कीर्ण गराइएको थियो जसमा अपूर्व संस्कृत श्लोकमा शिवको अत्युत्तम स्तुति गरिएको छ। यो अभिलेख जयदेवले पशुपतिलाई चाँदीको कमल बनाएर चढाएको उपलक्ष्यमा उत्कीर्ण गराइएको कुरा त्यसै अभिलेखले बताएको छ। यस अभिलेखका लेखक दुइ जना छन् बुद्धकीर्ति र लिच्छवि राजा द्वितीय जयदेव स्वयम्। राजाले लेखेका श्लोकको अगाडि "राज्ञः" लेखिएको छ। जयदेवको कवित्व र शिव भक्तिको परिचयको लागि ती श्लोक तल उद्धृत गरिएका छन्:—

यं स्तौति प्रकटप्रभावमहिमा ब्रह्मा चतुर्भिर्मुखैः
यञ्च श्लाघयति प्रणम्य चरणे षड्भिर्मुखैः षण्मुखः
यन्तुष्टाव दशाननोऽपि दशभिर्वक्त्रैः स्फुरत्कन्धरः
सेवां यस्य करोति वासुकिरलं जिह्वा सहस्रैः स्तुवन्॥

× ×

तस्येदं प्रमथाधिपस्य विपुलं ब्रह्माब्जतुल्यं शुभं
राजद्राजतपङ्कज प्रविलतप्रान्तप्रकीर्णोर्छलैः।
पूजार्थम्प्रविधाप्य तत्पशुपतेर्य्यत्प्रापि पुण्यम्मया
भक्त्या तत्प्रतिपाद्य मातरि पुनः सम्प्राप्नुयान्निर्वृतिम्॥

× ×

किं शम्भोरुपरि स्थितं ससलितं मन्दाकिनीपङ्कजम्
स्वर्गोद्भिन्नवाम्बुजेक्षणधिया सम्प्राप्तमम्भोरुहं।

देवानां किमियं शुभा सुकृतिनां रम्या विमानावली
पद्मं किं करुणाकरस्य करतो लोकेश्वरस्यागतम् ॥

× ×

स्रोत: स्वर्गापगाया: किमिदमवतरल्लोलकल्लोलरम्य
किं ब्रह्मोत्पत्तिपद्मं तलकमलवरप्रेक्षणायोपयातम्
सम्प्राप्तश्चन्द्रमौलेरमलनिजशिरश्चन्द्रबिम्बं किमत्रे
त्येवं यद्वीक्ष्य शङ्कां वहति भुवि जनो विस्मयोत्फुल्लनेत्रः

× ×

देवं वन्दितुमुद्यतो द्युतिमतो विद्योतमान द्युतिः
किं ज्योत्स्नाधवला फणावलिरियं शेषस्य सन्दृश्यते ।
अन्तर्दूररसातलाश्रितगतेर्देवप्रभावश्रिया
किं क्षीरस्नपनं विधातुमुदिताः क्षीरार्णवस्योर्मयः ॥[१]

× ×

लालित्यले भरिएका उद्धृत श्लोकमा जयदेवको उच्च कवित्वको साथ साथ शिवभक्ति पनि स्पष्टिन्छ । यस उदाहरणबाट उनी (जयदेव) शिवका परमभक्त रहेका देखिन्छन् ।[२]

जयदेवपछि शिलालेख कम पाइने हुनाले शैवधर्मको इतिहासको स्पष्टिकरण गर्न अलि कठीन काम छ । जयदेवपछि जयस्थितिमल्लको पालासम्म हामी शैव धर्मसम्बन्धी शिलालेख कम पाउँछौं तै पनि केही शिलालेखले त्यस व्यवधान काललाई शृंखलित पार्न केही सहायता दिएका छन् ।

संवत् १७२ को चाँगुनारायण शिवलिङ्गाभिलेख पाइएको छ [३] जसबाट शैव धर्मको लोकप्रियता चलिरहेके बुझिन्छ । यद्यपि उक्त शिलालेख भग्न भएकोले शैव धर्मसम्बन्धी केही विशेषता त त्यसमा उल्लिखित भएको छैन तर त्यसले शैव धर्मानुयायी जनताको क्रियाशिलता भने स्पष्ट्याएको छ । यसै वेलातिरको एक भग्न शिलालेखले पाटनस्थित विशाल लोकप्रिय कुम्भेश्वर मन्दिरको तात्कालिन धार्मिक समाजमा कस्तो स्थान रहेछ केही बुझन सकिन्छ । कुम्भेश्वर मन्दिरनेर प्राप्त एक लघु र भग्न शिलालेखमा 'भगवतः प्रतिष्ठान'

---

[१]सं. स. १–१ पृष्ठ–४–५, ६.
[२]जयदेवबारे विशेष कुरा शैवसम्प्रदायसम्बन्धी भागमा वर्णन गरिएको छ ।
[३] नोली पृष्ठ — १३१

'वरं पुण्यमिति मत्वा भगवन्तं त्रैलोक्यगुरुम्' लेखिएको छ [१] । यस विवरणबाट त्यस कालमा कुम्भेश्वर मन्दिर पनि तात्कालिक शैव जनताको भक्तिको केन्द्र रही रहेको थियो भन्ने कुरा स्पष्टिन्छ । यस मन्दिरको चोकमा रहेका पुराना शिवमूर्तिहरू निक्कै पुराना देखिन्छन् । अतः यो मन्दिर पनि निक्कै पुरानो रहेछ भन्ने अन्दाज गर्न सकिन्छ । झण्डै यसै समयको अर्को एक शिलालेख छ । यस अभिलेखमा संवत् १६४ दिइएको छ जो अंशुवर्माका अभिलेखमा प्रयुक्त संवत् हो भन्ने कुरामा सन्देह छैन । यो अभिलेख सीतापाइलामा चट्टानमा लेखिएको छ । त्यसमा 'भगवान् पशुपति चन्द्रेश्वर बनाएको मिति' लेखिएको छ[२] । चट्टानमा यो कुरा लेख्नाको अर्थ के हो बुझ्न सकिंदैन । जेहोस् यस अभिलेखले शैवधर्मको 'क्रिया' को परम्परा कायमै राखेको बुझिन्छ ।

लिच्छविकालिक लिपिमा 'प शु प ति' लेखिएको र सांढे भएका तामाका पैसा नेपालमा प्रशस्त पाइन्छन् । कुनै कुनैमा भिन्न भिन्न चिन्ह र चित्र अङ्कित भएका पनि पाइएका छन् । यी पैसा पनि नेपालमा शैवधर्मको राष्ट्रिय स्वरूपतिर सङ्केत गर्दछन् [३] ।

यसरी हेर्दा लिच्छविकालमा शैवधर्मको राम्रो उन्नति भएको देखिन्छ । हुन त यसको साथ वैष्णव बौद्ध र अरू धर्महरूको पनि उत्तिकै उन्नति भयो तर यसको उन्नति विशेष भएको कुरा धेरै प्रमाण सिद्ध गर्छन् [४] ।

मध्यकालीन नेपालमा पनि शैवधर्मको उत्तिकै उन्नति भएको थियो । केही शिलालेख यस विषयमा हामीलाई सहायता दिन्छन् । यस कालको पहिलो शिलालेख गुणकामदेवको पालाको १०७ नेपाल संवत्को पाटन धार्यँबुको अभिलेख हो [५] । उक्त अभिलेख शिवपरिवारको मूर्तिको पादपीठमा लेखिएको छ । अभिलेखमा 'माणिग्वलकमा देवताको मन्दिर बनाइयो' भनी लेखिएको

---

१ नोली पृष्ठ — १३० र अभिलेख संग्रह भाग — १. पृष्ठ — २१ (भूमिका) । यस अभिलेखमा तिथि पनि छैन राजाको नाम पनि छैन ।

२ नोली पृष्ठ–१३७

३ यसबारे 'पशुपति मुद्रा' सम्बन्धी लेखमा विशेष विवेचन गरिएको छ ।

४ यस कुराको विशेष चर्चा शैवसम्प्रदाय र नेपालको राजधर्म र राष्ट्रिय धर्म सम्बन्धी भागमा गरिएको छ ।

५ अ. सं. भाग ६. पृ. २४ तर श्री रेग्मीले यसलाई २०७ संवत् पढ्नु भएको छ ( Mediaeval Nepal III. p. 9 )

छ र प्रारम्भमा ललितेशको पद्यबद्ध स्तुति गरिएको छ[१]। यस विवरणले मध्यकालीन नेपालमा शिवमूर्तिको स्थापना गर्ने परम्पराको केही बोध गराएको छ। यसै गरी शक संवत् ६६३ को ताम्रपत्र इन्द्रेश्वर मन्दिर पनौतीबाट प्राप्त भएको छ। जसमा 'इन्द्रेश्वर' को उल्लेख भएको छ[२]। यस विवरणबाट त्यस वेला इन्द्रेश्वरले शिव भक्तहरूलाई निकै आकृष्ट गरेको बुझिन्छ।

मध्यकालमा पनि अनेक राजा शिवका अनन्य भक्त थिए। ने. सं. २५४ तिर भएका इन्द्रदेव परमशैव थिए। यसै ताकका राजा आनन्ददेव पनि परमशैव थिए। मानदेव (तृतीय ?) र जयभीमदेव पनि परमशैव थिय[३]। यद्यपि ती शैव राजाहरूका कुनै शिलालेख पाइएका छैनन्। अतः उनीहरूको पालामा शैवधर्मले के कति प्रगति गर्‍यो थाहा पाउन सकिएको छैन तर उनीहरूले शैवधर्मलाई विशेष मान्यता दिएको कुरा उक्त विवरणबाट स्पष्ट हुन्छ।

मल्लकालमा पनि जयस्थितिमल्ल, ज्योतिर्मल्ल तथा यक्षमल्ल जस्ता प्रतापी राजाहरूले शैवधर्म मानेका कुरा उनका शिलालेखले बताएका छन्। जयस्थितिमल्लको द्यौपाटन अभिलेखमा उनको उपाधि "श्रीमत्पाशुपताङ्घ्रिपङ्कजरजः पिंगेस्फीता" (?) लेखिएको छ।[४] जसबाट उनी पाशुपत सम्प्रदायका अनुयायी भएको ज्ञात हुन्छ। यिनैको शासनकालमा जयभीम भन्ने व्यक्तिले कुम्भेश्वर मन्दिरको (पुनः ?) निर्माण गराएका थिए।[५] ज्योतिर्मल्लले पशुपतिमा लक्षहोम गराइ पशुपतिको मन्दिरमा सुनको कलश चढाएका थिए र त्यसै वेलामा उनले एक शिलालेख पनि उत्कीर्ण गराएका थिए।[६] यक्षमल्ल पनि शैवधर्मकै अनुयायी थिए। उनले पनि "श्री श्री श्रीपशुपतिचरणारविन्दसेवापरायण" उपाधि लिएका

---

[१] श्रीमाणिग्वलके सुरालय कृतस्तच्छ्रीवरौपात्मनः। अ सं. भाग–६. पृ. २४

[२] पुरातत्त्व पत्रसंग्रह भाग–२ पृ.–१६०

[३] यस विषयमा शैव राजाहरू लेखमा हेर्नुहोस्।

[४] संस्कृत सन्देश १–८, पृष्ठ–४६–४८

[५] Mediaeval Nepal III. p. 33-35, यसभन्दा पहिले नै लिच्छवि-कालिक लिपिमा लेखिएको शिलालेख पाइएकोले जयभीमले कुम्भेश्वर मन्दिरको पुनर्निर्माण गरेको अन्दाज गरिन्छ तर पछिल्लाको शिलालेखमा "कुम्भेश्वरालयं कर्त्तुं प्रतिज्ञा कृतवांस्ततः" भनिएकोछ। जसबाट त्यसभन्दा पहिले कुम्भेश्वरको मन्दिर नरहेको कुरा पो झलिकन आउँछ।

[६] ऐजन–पृष्ठ–४७ र पछि

थिए।[१] यसरी निरीक्षण गर्दा नेपालमा शैवधर्मको इतिहास निकै गौरवपूर्ण देखिन्छ। शैवधर्मको विशेष उन्नति भएको देखिए तापनि यसको उन्नतिले वैष्णव, बौद्ध, शाक्त, सौर आदि कुनै धर्मको उन्नतिमाथि व्याघात पारेन यसको मुख्य कारण नेपालको सामञ्जस्यको प्रवृत्ति र सहिष्णुता नै रहेको बुझिन्छ। यसैले हामी नेपालमा शैव धर्मको साथ साथ वैष्णव, बौद्ध, शाक्त आदि धर्महरूको पनि निकै उन्नति भएको देख्दछौं।[२]

---

[१] यस विषयमा पाशुपत सम्प्रदायसम्बन्धी प्रकरणमा विशेष विवेचन गरिएको छ।
[२] यस कुराको विशेष विचार सर्वधर्मसमन्वय सम्बन्धी प्रकरणमा गरिएको छ।

३

# शैव सम्प्रदायहरू

नेपाली शैवधर्ममा कुन कुन शैव सम्प्रदाय चलेका थिए यो कुरो जान्न हामीसंग अत्यल्प साधन छन्। केवल शिलालेखको आधारबाट केही शैव सम्प्रदायहरूको नाम जान्न हामी सफल हुन्छौं तर तिनीहरूको राम्रो परिचय दिने समस्या अझ कठिन छ। अधिकांश शिलालेख शिवनमस्कार अथवा राजाहरूको 'पशुपति भट्टारकपादानुगृहीत:' अथवा यस्तै यस्तै उपाधि देख्दछौं तर कुनै विशेष शैव सम्प्रदायको उल्लेख कम पाइन्छ। शिलालेखहरूमा जति शैव सम्प्रदायको उल्लेख छ, त्यहाँ या त अभिलेखै भग्न भैदिएको छ या सम्प्रदायको नामोल्लेख बाहेक अरू केही पनि छैन। यसैले शैव सम्प्रदायको अध्ययन समग्र हुन सकेको छैन। अभिलेखहरूमा शैव सम्प्रदायहरूको उल्लेख कम हुनु यस कुराको समर्थक हैन कि नेपालमा शैव सम्प्रदायहरू छँदै थिएनन्। प्राप्त अभिलेखहरूको भग्न अवस्था तथा पुरातात्विक उत्खनन् आदिको अभावले पनि यस प्रकारको अध्ययन सम्पूर्ण हुन सक्दैन।

तैपनि हामी शिलालेखहरूको निरीक्षण गर्दा निम्न शैव सम्प्रदायहरूको उल्लेख पाउँछौं:

पाशुपत
सोमसिद्धान्त
मिश्र शैवधर्म

यी सम्प्रदायहरूको अलग अलग वर्णन तल प्रस्तुत गरिन्छ।

## पाशुपत सम्प्रदाय

नेपालमा पाशुपत सम्प्रदाय विशेष लोकप्रिय रही आएको कुरा पशुपतिको मन्दिरले नै स्पष्ट बताएको छ। तर यो सम्प्रदाय नेपालमा कहिले प्रविष्ट भयो भन्ने कुरा त्यसै भन्न सकिंदैन। भारतमा ता वैदिक कालदेखि नै "पशुपति"को

पूजा गर्ने परम्परा चलेको थियो । यस प्रसङ्गमा पशुपतिको स्थापना कहिले भयो यसको स्पष्टीकरण हुनु आवश्यक छ ।

पशुपतिको प्राचीनताबारे विद्वान्हरूमा धेरै मतवैभिन्य देखिन्छ । इतिहास शिरोमणि श्री बाबुराम आचार्यज्यूले एक ठाउँमा पशुपतिको स्थापना ५७२ ई. मा भएको मान्नु भएको छ र त्यसैसंग 'पशुपति संवत्सर' पनि चलेको कुरा लेख्नु भएको छ । उहाँले तथाकथित अंशुवर्म सम्वत्लाई पशुपति संवत्सर मान्नु भएको छ ।[१] फेरि त्यसै लेखमा उहाँले त्यसै संवत्लाई ६०६ ई. मा अंशुवर्माद्वारा प्रारम्भ गरिएको मान्नु भएको छ ।[२] उहाँको मत स्पष्ट रूपले बाझिएको देखिन्छ, अझ आर्को लेखमा इतिहास शिरोमणिज्यू पशुपतिको स्थापना ४५० ईस्वीको आसपास भएको मान्नु भएको छ ।[३] यसरी हेर्दा इतिहास शिरोमणिज्यूलाई पनि पशुपतिको स्थापमा बारे पूर्णतया भ्रममा परेको देख्दछौं । मोटो दृष्टिबाट हेर्दा पनि पशुपतिको स्थापना ५३३ ई. भन्दा पछि भान्न सकिदैन किनभने प्रतीहार ध्रुवसंघको पशुपति भस्मेश्वर अभिलेखमा 'भगवतः पशुपतेः चेत्रे' ( भगवान् पशुपतिको चेत्रमा ) भनिएको छ ।[४] यो अभिलेख ( शक ) संवत् ४५५ ( ५३३ ई. ) को हो । यस प्रमाणबाट छैठौं शताब्दीसम्म त पशुपति लोकप्रिय रूपमा रहेको देखिन्छन् । त्यति वेला लोकप्रिय भएको पशुपतिको स्थापना निकै पहिले नै भै सकेको बुझिन्छ किनभने कुनै धर्मलाई लोकप्रिय हुन शयौं वर्ष पनि लाग्दछ ।

पशुपति लिंगको स्थापना बारे विचार गर्दा हामीले वंशावलिहरूको उल्लेख पनि गर्नु आवश्यक छ । वंशावलिको कथनलाई त्यति मान्यता नदिए पनि त्यसको साङ्केतिक अर्थ ग्रहण गर्नु पर्दछ ।

ऐतिहासिक दृष्टिबाट हेर्दा पशुपतिका दुइ लिंग छन् । पहिलो त शम्सुद्दीनको आक्रमण भन्दा पहिलेको र आर्को त्यसपछि स्थापित भएको । शम्सुद्दीनको आक्रमण भन्दा पहिलेको मुखलिंग अति प्राचीन देखिन्छ ( चित्रफलक १ ख ) कलात्मक दृष्टिकोणबाट हेर्दा यसको तिथि निकै पुरानो रहेको बुझिन्छ । जटा बनाउने शैली तथाकथित गान्धार आदर्शानुबादी छ ।

---

[१] लिच्छविकालीन राजनीति र संस्कृति ( लेख-नेपाल पत्रिका ) पृष्ठ- १५३
[२] ऐजन पृष्ठ- १५०
[३] पञ्चायत बाटो ( १-६ ). पृ. ६५
[४] अ. सं. भाग-१ पृ. २६

यसैको आधारमा पनि यस मुखलिंगलाई हामी ईस्वी पूर्व द्वियीत त्रितीय शताब्दी मान्न सक्दछौं । यस किसिमको कलाको अनुसरण गरी बनाइएको कुनै मुखलिंग भारतमा पाइएको छैन अतः यस मुखलिंगको अपूर्व विशेषता स्वतः स्पष्टिन्छ । संक्षेपमा भन्ने हो भने यो नेपाली कलाको सर्वप्राचीन कृति हो ।

नेपाल संवत् ४७० मा बंगालका शम्सुद्दीनले नेपालमाथि आक्रमण गरी आफ्नो पाशविक प्रकृत्ति खूब बढाए । उनले उपत्यकाका अनेक मन्दिर चैत्यहरूमाथि निमर्म प्रहार गरी बिनष्ट पारेका थिए । यद्यपि गोपालवंशावलिमा 'सुरतान समसदिन ·· ··· ··· श्रीपशुपति त्रिखण्डीकृता' भनिएको छ [१] तर वास्तवमा पशुपतिको लिंग चाहिं टुटे फुटेको केही थिएन । मन्दिरमा आगो लगाइएको सम्भव छ तर मुखलिंग टुक्रिएको देखिंदैन । हाल पशुपतिको पश्चिम-द्वारनेर रहेको मुखलिङ्ग (जसलाई प्राचीन पशुपतिलिङ्ग मानिएको छ ) टुटे फुटेको देखिंदैन । कतै कतै पाप्रा उप्किएको चाहिं समयको प्रभावले नै हो । यस लिंगलाई हटाएको कारण आर्कै रहेको बुझिन्छ । विधर्मीले मन्दिरमा आगो लगाइदिएको हुनाले नै उक्त लिंगलाई अशुद्ध भएको मानी हटाइएको बुझिन्छ । जयधर्म्ममल्लको शासनकालमा उनका महामन्त्री जयसिंहरामवर्द्धनद्वारा आर्को पशुपतिको लिंगको स्थापना गरिएको बुझिन्छ ।[२]

यसरी विचार गर्दा त पशुपतिको स्थापना ईस्वीपूर्व तेस्रो शताब्दी बुझियो तर विचार गर्दा पशुपतिको स्थापना अझ पहिले भए जस्तो बुझिन्छ ।

आर्यघाटमा विरूपाक्ष नामले प्रख्यात एक मूर्ति गाडिएको रूपमा देखिन्छ ।[३] यस मूर्तिको निधारमा एक आर्को आँखा बनाइएको छ । शिरमा जटा छ । त्रिनेत्र र जटा भएकोले यो महादेव अथवा पशुपतिको मूर्ति हो भन्ने कुरा स्पष्ट हुन्छ । मूर्तिको आधा अंग गाडिएको अवस्थामा रहेकोले यसका हातमा के के छ जान्न सकिएको छैन । हातमा जे सुकै भए पनि यसको त्रिने-

---

१ गोपाल वंशावलि– Mediaeval Nepal III. P. 124

२ श्री ३ पशुपतिलिंग स्थापनाचार ··· ··· ··· राजलक्ष्मीसमालिंगितमहामंत्राधिराज श्री जयसिंहरामवर्द्धनेन ।

चौपाटन त्यागलटोल अभिलेख संस्कृत सन्देश– १, १०, ११, १२, पृ. ४६

३ चित्रफलक २ क

आत्मक स्वरूपले स्पष्ट गरेको छ कि यो पशुपतिकै मूर्ति हो। यसको कला सरल र सुग्घरी भएकोले यसलाई हामी कममा पनि ईसा पूर्व चौथो पाँचौं शताब्दी मान्न सक्दछौं। यद्यपि यस मूर्तिको तिथि निर्धारणमा कुनै पुष्ट आधार त छैन तर यसको कलाको भिन्न गति देखिएकोले यसलाई त्यति पुरानो मानिएको हो। यो मूर्ति त्यस वेलामा बनेको थियो, जब नेपालमा किरातहरूको शासन थियो। माथि भूमिकामा किरातहरूले शैवधर्म ग्रहण गरिसकेको कुरा हामीले विचार गरी सकेका छौं। अतः उक्त मूर्तिलाई किरातकालमा बनेको मान्न केही गाहारो छैन। त्यस मूर्तिमा किरात शारीरिक गठनको प्रभाव पनि स्पष्ट देखिन्छ। ठूलो टाउको, थ्याप्चो मुख र बाक्ला र मोटा ओठ बनाइएकोले त्यस मूर्तिलाई किरातकालिक मान्नु पर्दछ। यति पुरानो शिवमूर्ति भारतमा पनि पाइएको देखिदैन यस कुराबाट नेपालमा शैव धर्मको विशेषता रहेको स्पष्टिन्छ।

पहिले यही विरूपाक्षमूर्ति पशुपतिको रूपमा पूजिन्थ्यो भन्ने कुरा त्यसैको अगाडि रहेको एक पशुमूर्तिले सङ्केत गरेको छ। लिच्छविहरूको प्रवेश नहुन्जेल अथवा शासन नहुन्जेल यसैको पूजा भैरहन्थ्यो। तर उनीहरू (लिच्छविहरू) को प्रवेश भएपछि त्यस मूर्तिमा विकसित कला र देव प्रतिमा-लक्षण ( Iconography ) नभएकोले त्यसकोसट्टा आर्को मूर्तिको प्राण प्रतिष्ठा गरिएको ज्ञात हुन्छ। यस प्रमाणबाट स्पष्ट हुन्छ कि नेपालमा पाशुपत सम्प्रदाय निकै पुरानो हो।

पाशुपत सम्प्रदाय त्यति पुरानो भएर पनि यसको सर्वप्रथम उल्लेख नरेन्द्रदेवको गहिरी धारा पाटनको अभिलेखमा भएको छ।[१] उक्त अभिलेखमा लिच्छविराजा नरेन्द्रदेव वज्रेश्वर महादेवको पूजाको प्रसंगमा पाशुपत सम्प्रदायका अनुयायी र ब्राह्मणहरूलाई भोजन गराउने आज्ञा दिइरहेका देखिन्छन्।[२] अभिलेखको 'पाशुपतानां ब्राह्मणानां च' शब्द विचारणीय छ। डा. हित-नारायण झाज्यूले यसको भिन्न रूपले अर्थ गर्नु भएको छ। झाज्यूको कथना-नुसार ब्राह्मण शब्द पाशुपत शब्दको विशेषण हो।[३] तर उहाँको विचार च

---

[१] यसभन्दा पहिलेका अभिलेखमा पाशुपत उपसम्प्रदायको उल्लेख पाइन्छ तिनको वर्णन पाशुपत उपसम्प्रदायको प्रसंगमा गरिने छ।

[२] भगवन्तं वज्रेश्वरमुद्दिश्य पाशुपतानां ब्राह्मणानां च यथासम्भवं भोजनं करणीयम्-नोली पृ. ६५

[३] गोरखापत्र, शनिवासरीय परिशिष्टांक, श्रावण १६, २०२२

शब्दले अमान्य गरिदिएको छ । "च" ले 'पाशुपतहरूलाई ब्राह्मणहरूलाई पनि' भन्ने अर्थ गराउँछ । अतः ब्राह्मण शब्द पाशुपतको विशेषण हुन सक्दैन भन्ने स्पष्ट छ ।

यस प्रसङ्गमा शिव धर्म शास्त्रको कथन पनि उल्लेखनीय छ । त्यसमा 'शिव भक्त श्रेष्ठ ब्राह्मणलाई भोजन गराउने' कुराको वर्णन गरिएको छ ।[१] जसबाट शैव धर्ममा ब्राह्मणभोजनको महत्व ज्ञात हुन्छ ।

नरेन्द्रदेवभन्दा निकै पहिले अंशुवर्माले आफ्ना अभिलेखमा 'भगवत्पशुपति भट्टारकपादानुगृहीतः' उपाधि लेखाएका छन् ।[२] यसबाट उनले पाशुपत सम्प्रदाय मानेको कुरा स्पष्ट हुन्छ । उक्त उपाधि उनका सबै अभिलेखमा उल्लिखित भएको पाइन्छ । अंशुवर्मा पछि पनि जिष्णुगुप्त[३], विष्णुगुप्त[४], नरेन्द्रदेव[५] र द्वितीय शिवदेवले[६] पनि उही उपाधि ग्रहण गरेको देखिन्छ । यसबाट उनीहरू पाशुपत सम्प्रदाय मान्ने रहेछन् भन्ने कुरा स्पष्ट बुझिन्छ ।

मल्लकालिक नेपालमा पनि पाशुपत सम्प्रदाय लोकप्रिय रहेको थियो । यस कालका नामी राजा जयस्थितिमल्ल पशुपतिका अनन्य भक्त थिए । पशुपति

---

१ शिवभक्तं द्विजं श्रेष्ठं यः श्रद्धादिषु भोजयेत् ।
कुलसप्तकमुद्धृत्य शिवलोके महीयते ॥

अ. १२ श्लोक ५७ ( खण्ड प्रथम )

२ बुंगमती, हांडिगाउँ (सं.३०), हांडिगाउँ (३२ सं.), सांगा, सुन्धारा पाटन, च्यौपाटन पशुपति, भन्साहिटी वटुटोल, लच्छिटोल किसिपिडि अभिलेखमा यो उपाधि लेखिएको छ ।

३ जिष्णुगुप्तको ध्रुवदेवसंगको संयुक्त शासनका छिन्नमस्ता पाटन, मांलटार बलम्बू, मीननारायण, केवलपुर, आदिश्वर अभिलेख, उनको भीमार्जुनदेव संगको संयुक्त शासनका मुलखु बलम्बू, यैंगाहिटी थानकोट अभिलेखमा यो उपाधि लेखिएको छ ।

४ विष्णुगुप्तको भीमार्जुनदेवसंगका यैंगाहिटी लगनटोल र भृङ्गारेश्वर सोनागुठी अभिलेखमा यो उपाधि लेखिएको छ ।

५ नरेन्द्रदेवका यैंगाहिटी, लुमभ्या पाटन, च्यौपाटन, गैरिधारा पाटन, पशुपति, यैंगुबहाल पाटन, अनन्तलिंगेश्वर अभिलेखमा यो उपाधि छ ।

६ शिवदेवका मुलखु बलम्बू, लगनटोल, भृङ्गारेश्वर सोनागुठी अभिलेखमा यो उपाधि छ ।

(जयवागीश्वरी) अभिलेखमा उनले आफूलाई 'श्रीश्री पशुपतिपादपंकरुहमधुलिह' र 'श्रीमत्पाशुपताङ्घ्रिपङ्कजरजः पिंगै (पिंग ?) स्फीता...' विशेषण लगाएका छन्।[१] यसबाट उनी पाशुपत सम्प्रदायका अनुयायी रहेछन् भन्ने बुझिन्छ। यसै वेलातिर भएका महामन्त्री जयसिंहरामवर्द्धन पनि पाशुपत सम्प्रदाय मान्दथे भन्ने अनुमान गर्न सकिन्छ। पशुपति त्यागलटोल अभिलेखले सङ्केत गरेको छ। उक्त अभिलेखमा उनलाई 'पशुपतिलिङ्गस्थापनाचार (पशुपतिको लिङ्ग स्थापनागर्ने) भनिएको छ।[२] त्यसै अभिलेखमा आचार्य राजध्यशर्माका बाजेलाई पशुपतिको चरणको सेवा गर्ने भनिएको छ।[३] त्यसै शिलालेखमा राजध्यशर्माका बाजेलाई 'पशुपति चरणको सेवा गर्ने' भनिएको छ।

जयस्थितिमल्लका माहिला छोरा ज्योतिर्मल्ल पनि पशुपतिका परम भक्त थिए। नेपाल संवत् ५४३ को काष्ठमण्डपको ताम्रपत्रमा उनलाई "श्री श्री पशुपतिभट्टारकस्य पादपंकजपरागबहलकीर्त्ति" भनिएको छ।[४] यस प्रमाणबाट उनी पनि पाशुपत सम्प्रदायका अनुयायी रहेछन् भन्ने ज्ञान हुन्छ। यक्षमल्लले पनि 'श्री श्री श्री पशुपतिचरणारविन्द सेवापरायण' उपाधि लिएका थिए।[५] यस उदाहरणबाट उनी पनि पाशुपत सम्प्रदायका अनुयायी रहेछन् भन्ने बुझिन्छ।

यसरी हेर्दा नेपालमा पाशुपत सम्प्रदाय लोकप्रिय रहेको बुझिन्छ। यसको

---

[१]संस्कृतसन्देश अंक–८, पृष्ठ–४६–४७; त्यसकालका अरू प्रमाणमा पनि जयस्थितिमल्ललाई यस्तै उपाधि लगाइएको देखिन्छ। मणिककविले लेखेको राघवानन्द नाटकमा जयस्थितिमल्ललाई "श्री श्री पशुपतिचरण म्बुज परागपिञ्जरितशेखर" भनिएको छ। मणिककविले नै खेलाएको भैरवानन्द नाटकमा पनि जयस्थितिमल्ललाई 'भगवत्पशुपतिचरणकमलोपचारचतुर' उपाधि दिइएको छ (वृहत्सूचीपत्र–वीरपुस्तकालय भाग–३)

[२]श्री ३ पशुपतिलिंगस्थापनाचार... .. श्रीजयसिंहरामवर्द्धनः। संस्कृत सन्देश १–१०,११,१२ संयुक्तांक पृ. ४६

[३]ऐजन

[४]संस्कृत सन्देश–१–६, पृ. ६–७

[५]यक्षमल्ल र जीवमल्लको सयुक्त शासनको ५६१ नेपाल संवत् (१४४१ ई.) को ठीमी महादेव मन्दिरको अभिलेख (Mediaeval Nepal III, D. R. Regmi, P. 61.

विशेष उन्नति लिच्छविकालमा भएको थियो तर यही परम्परा पछिसम्म पनि कायमै रहेको बुझिन्छ । अनेक प्रकारका पशुपति मुद्रा पनि पाशुपत सम्प्रदाय-संगै सम्बद्ध देखिएकोले यस सम्प्रदायको विशेष व्यापकता रहेको बुझिन्छ ।

## अष्टपुष्पिका

पाशुपत सम्प्रदायका अनुयायीहरूमा अष्टपुष्पिकाको पूजाको महत्त्वपूर्ण स्थान थियो भन्ने कुरा हामी अनेक धार्मिक ग्रन्थहरूबाट थाहा पाउँछौं । हर्षका समकालिक लेखक बाणले हर्षचरितमा अष्टपुष्पिकाको पूजाको उल्लेख गरेका छन् ।[१] नेपालका वंशावलिहरूमा अनेक राजाहरूको प्रसंगमा 'रजतपद्म चढाए (पशुपतिलाई )' भन्ने विवरण पनि अष्टपुष्पिका हो भन्ने विचार गर्न सकिन्छ ।[२]

द्वितीय जयदेवको पशुपति अभिलेखबाट ज्ञात हुन्छ कि नेपालका पाशुपतहरूमा पनि अष्टपुष्पिकाको पूजा परम्परा विद्यमान थियो । उपर्युक्त अभिलेखमा पशुपतिलाई 'चाँदीको कमल' चढाइएको वर्णन गरिएको छ ।[३] त्यसलाई अष्टपुष्पिका हो भन्ने निश्चय गर्न त्यसै शिलालेखमा कमलको वर्णनमा एकपल्ट "कुलाचल"को उल्लेख भएको छ ।[४] संस्कृत वाङ्मयमा अष्टकुलाचल प्रख्यात भएकोले उक्त रजतपद्मका आठ पात बनाइएका रहेछन् भन्ने बुझिन्छ ।

अष्टपुष्पिकाको वर्णनमा उक्त अभिलेखमा धेरै कुरा लेखिएको छ । पशुपतिलाई चांदीको कमल चढाएर पाइएको पुण्य द्वितीय जयदेवले आफ्नी आमा वत्सदेवीलाई समर्पित गरे भनी उक्त अभिलेखमा लेखिएको छ । वत्सदेवीले पनि त्यो पुण्य आफ्ना स्वर्गीय पति द्वितिय शिवदेवको स्वर्गप्राप्तिको लागि समर्पित गरिदिइन् ।[५] त्यस्तै प्रसंगमा अभिलेखमा 'कमल (अष्टपुष्पिका)को पूजा

---

[१] महतः कार्पटिकवृन्दस्य मध्ये प्रातरेव स्नातं दत्ताऽष्टपुष्पिकम्-हर्षचरित (निर्णयसागर) पृ. १०३

[२] द्रष्टव्य- Mediaeval Nepal III. P. 112 &ff.

[३] रौप्यं पद्ममचीकरत् पशुपतेः पूजार्थमत्युज्ज्वलम्—संस्कृत सन्देश १–१,पृ.५

[४] एषा भाति कुलाचलैः परिवृता प्रालेयसंसर्गिभिः ।

[५] पूजार्थंप्रविधाप्य तत्पशुपतेर्य्यत्तपि पुण्यम्मया ।
भक्त्या तत्प्रतिपाद्य मातरि पुनः सम्प्राप्नुयान्निर्वृतिम् ॥
सर्वं श्रीवत्सदेवी निजकुल धवलाच्चित्तवृत्तिं दधाना ।
प्रादात्कल्याणहेतोश्चिरमवनिभुजे स्वामिने स्वर्गताय ॥

गर्नाले स्वच्छ र कल्याणदायक पुण्य प्राप्त भयो' भनी लेखिएको छ[१] । यसबाट जयदेव र वत्सदेवीको पशुपति-भक्ति स्पष्ट हुन्छ ।

उक्त अभिलेखमा अष्टपुष्पिकाको पूजा गर्ने ढङ्गको पनि केही सङ्केतात्मक वर्णन परेको छ । अभिलेखको एकतीसौं श्लोकमा वत्सदेवीलाई 'कमलले घेरिएर' पूजा गरेको लेखिएको छ ।[२] कमल पूजा प्रसंगमा चाँदी विशेष प्रशस्त रहेको पनि बुझिन्छ किनभने अभिलेखमा 'चाँदीले पूजा गरेर' लेखिएको छ ।[३]

उक्त अभिलेखमा अनेक श्लोकमा त्यस कमलको लालित्यपूर्ण वर्णन गरिएको छ । यस वर्णनका लेखकले कमलको वर्णन यसरी प्रस्तुत गरेका छन्:—

मूर्त्तीरष्टाभिरष्टौ महयितुमतुलैः स्वैद्लैरष्टमूर्त्तेः
पातालादुत्थितं किं कमलमभिनव पद्मनाभस्य नाभेः ।
देवस्यास्यासनायोपगतमिह चतुर्वक्त्रसादृश्यमोहाद्
विस्तीर्णं विष्टरं किं प्रविकसितसिताम्भोजमम्भोजयोनेः ॥

× ×

कीर्णा किं भूतिरेषा सपदि पशुपते-
न्नृत्यतोत्र प्रकामम्
मौलीन्दोः कि मयूखाः शरदमभिनवां
प्राप्य सेवामुपेताः ।
भक्त्या कैलासशैलाद्धिमनिचयरूचः
सानवः किं समेताः
दुग्धाब्धेरागतः किं गलगरसहज-
प्रीतिपीयूषराशिः ॥

× ×

देवं वन्दितुमुद्यतो द्युतिमतो विद्योतमानद्युतिः
किं ज्योत्स्नाधवला फणावलिरियं शेषस्य सन्दृश्यते

---

[१] पुण्यं पुत्रेण दत्तं शशिकरविमलं कारयित्वाब्जमुख्यम् ।
प्राप्तं शुभ्रं शुभञ्च स्वयमपि रजतैः पद्मपूजां विधाय ॥

[२] समं समन्तात् परिवारपद्मैः ।

[३] स्वयमपि रजतैः पद्मपूजां विधाय ।

अन्तर्दूररसातलाश्रितगतेर्द्देवप्रभावश्रिया
किं क्षीरस्नपनं विधातुमुदिताः क्षीरार्णवस्योर्म्मयः ॥[१]

× ×

विष्णोः पातालमूले फणिपतिशयनाक्रान्तिलीलासुखस्था-
दाज्ञां प्राप्योत्पतन्त्यास्त्रिपुरविजयिनो भक्तितोभ्यर्च्चनाय
लक्ष्म्याः संलक्ष्यते प्राक्करतलकलितोत्फुल्ललीलासरोजं
किं वेतीत्थं वितर्कास्पद मतिरुचिरं मुग्धसिद्धाङ्गनानाम्

× ×

नालीनालीकमेतन्न खलु समुदितो राजतो राजतोहम्
पद्मा पद्मासनाब्जे कथमनुहरतो मानवा मानुवामे ।
पृथ्व्यां पृथ्व्यान्न मादृग्भवति हृतजगन्मानसे मानसे वा
भास्वान् भास्वान् विशेषं जनयति नहि मे वासरोवा सरोवा ।

× ×

इतीव चामीकरकेशरालीसिन्दूररक्तद्युतिदन्तपङ्क्त्या ।
राजीव राजीम्प्रति जीवलोके सौन्दर्यदर्पादिव सप्रहासम् ॥

× ×

एषा भाति कुलाचलैः परिवृता प्रालेयसंसर्गिभिः
वेदी मेरुशिलेव काञ्चनमयी देवस्य विश्रामभूः ।
शुभ्रैः प्रान्तविकासिपङ्कजदलैरित्याकलय्य स्वयम्
रौप्यं पद्ममचीकरत् पशुपतेः पूजार्त्थमत्युज्ज्वलम् ।

× ×

य स्तौति प्रकटप्रभावमहिमा ब्रह्मा चतुर्भिर्म्मुखैः
यश्च श्लाघयति प्रणम्य चरणे षड्भिर्म्मुखैः षण्मुखः
यन्तुष्टाव दशाननोऽपि दशभिर्व्वक्त्रैः स्फुरत्कन्धरः
सेवां यस्य करोति वासुकिरलं जिव्हासहस्रैः स्तुवन् ॥[२]

× ×

किं शम्भोरुपरिस्थित ससलिलं मन्दाकिनीपङ्कजम्
स्वर्गोद्भिन्नवाम्बुजेक्षणधिया सम्प्राप्तमम्भोरुहम्

---

[१]यो श्लोक द्वितीय जदेवले लेखेका हुन् ।
[२]यो श्लोक पनि जयदेवको रचना हो ।

देवानां किमियं शुभा सुकृतिनां रम्या विमानावली
पद्मं किं करुणाकरस्य करतो लोकेश्वरस्वागतम् ॥

× ×

स्रोतः स्वर्गापगायाः विमिदमवतरल्लोलकल्लोलरम्यं
कि ब्रह्मोत्पत्तिपद्मं तलकमलवरप्रेक्षणायोपयातम् ॥
सम्प्राप्तश्चन्द्रमौलेरमलनिजशिरश्चन्द्रबिम्बं किमत्रे-
त्येवं यद्वीक्ष्य शङ्कां वहति भुवि जनो विस्मयोत्फुल्लनेत्रः ॥[१]

× ×

यसरी जयदेवले र बुद्धकीर्तिले चांदीको कमलको खूब आलङ्कारिक वर्णन गरेर त्यसको राम्रो स्तुति गरेका छन्। यसबाट कमलको भव्यताको अनुमान गर्न सक्दछौं। हाल पशुपतिमा त्यो कमल देखिँदैन र यसको के स्थिति भयो अज्ञात छ। तर त्यसको यति महत्त्व रहेको थियो कि पशुपतिलाई त्यो चढाएको अवसरमैं जयदेवले उक्त विशाल अभिलेख उत्कीर्ण गराएका थिए। अभिलेखको शीर्ष-भागमा पनि विशाल कमलको आलङ्कारिक चित्र उत्कीर्ण गरेको छ जो सम्भवतः पशुपतिलाई चढाइएको कमलको अनुकृति नै हो।[२]

उक्त अभिलेखमा यस अष्टदलपद्मलाई महादेवको आठ रूपसंग जोडेको छ।[३]

## शिवका आठ स्वरूप

अष्टपुष्पिकाको महादेवका आठ स्वरूपसंग सम्बन्ध भएको कुराको वर्णन माथि नै गरिएको छ। द्वितीय जयदेवको पशुपति अभिलेखमैं अष्टपुष्पि-काको वर्णनमा पशुपतिलाई 'एउटै भएर पनि आठ शरीर भएको' भनिएको छ।[४] अनि आर्को ठाउँमा (त्यसै अभिलेखमा) आठ पात भएको कमलको माध्यमबाट पशुपतिको आठ मूर्त्तिको चर्चा गरिएको छ।[५]

---

[१] यो श्लोक पनि जयदेवको रचना हो

[२] हुन त यसमा कमलका आठ पात भन्दाबढी बनाइएका छन्। अष्टदल भन्नाले आठ पात मात्र हुनु पर्ने हो।

[३] मूर्तीरष्टाभिरष्टौ महयितुमतुलैः स्वैलैदंरष्टमूर्त्तेः।

[४] एकोऽप्यष्टतनुः सुरासुरगुरुः वीतत्रयो नृत्यति।

[५] संख्या २ पादटिप्पणीकै।

भारतीय पाशुपत सम्प्रदायमा शिवका आठ स्वरूपहरूको पूजा र आराधना गर्ने परम्परा थियो । शिवका आठ रूपहरूको कल्पना शिवपूजाको अत्यन्त प्राचीन मान्यता हो र यसको उल्लेख शतपथब्राह्मण (६. १. ३. ७.), कौशीतकी ब्राह्मण (६. १. ८ )मा पाइन्छ । साङ्ख्यायन ब्राह्मण तथा सूत्रसाहित्यमा पनि यसको चर्चा भएको पाइन्छ । शिवका आठ स्वरूपको नामबारे शास्त्रहरूमा मतवैभिन्य देखिन्छ । वायुसंहितामा (अध्याय– ३) अष्टमूर्तिका नाममा शर्व, भव, ईशान, रुद्र, उग्र, भीम, पशुपति र महादेव दिइएका छन् । विष्णुपुराणमा महादेवका आठ मूर्तिमा सूर्य, पानी, पृथ्वी, आगो, हावा, आकाश, दीक्षित–ब्राह्मण र चन्द्रमा गन्निएका छन् । यद्यपि जयदेवको पशुपति अभिलेखमा शिवका यी आठ स्वरूपहरूको नाम एक एक गरी उल्लेख गरिएको त छैन तैपनि अष्टदल-मूर्तिको चर्चाबाट यो स्पष्ट हुन्छ कि नेपालमा रहेका पाशुपतहरूमा पनि शिवका आठ स्वरूपको पूजा आराधना गर्ने परम्परा थियो र साथै भारतीय पाशुपतहरूको मान्यताझैं यहाँ पनि अष्टमूर्तिको अष्टपुष्पिकासंग घनिष्ट सम्बन्ध थियो । तैपनि अष्टपुष्पिका सम्बन्धी शिलालेख भारतमा पाइँदैन जयदेवको पशुपति अभिलेख यस क्षेत्रमा एकमेव छ ।

उक्त अभिलेखमा अष्टपुष्पिकाको विस्तृत वर्णनमा प्रायः अष्टपुष्पिकाको सट्टा खालि पद्म अथवा यसका पर्यायहरूको प्रयोग गरिएको छ ।[१] रुद्राक्षारण्य महात्म्यमा महादेवलाई सहस्रा र कमलमा बस्ने भनी वर्ण गरेर [२] उनलाई कमलसंग सम्बद्ध गरिएको छ । यसै गरी शिवधर्मशास्त्रमा पनि शिवका आठ स्वरूपहरूको चर्चा गरिएको छ ।[३]

---

[१] क. रौप्यं पद्ममचीकरत् पशुपतेः पूजार्थमत्युज्ज्वलम् ।
ख. स्वयमपि रजतैः पद्मपूजां विधाय ।
ग. पुण्यं पुत्रेण दत्तं शशिकरविमलं कारयित्वाऽब्जमुख्यम् ।
घ. रौप्यं हरस्योपरि पुण्डरीकं तदादरैः कारितमत्युदारम् ।

[२] सहस्रारसरोजान्तर्वासिने संविदात्मने (१–४)

[३] क. मूर्ति यो याः शिवस्याष्टौ तासु निद्रां विवर्जयेत् । (खण्ड–१, अध्याय १२)
ख. अष्टमूर्तिं शिवऽष्टापितुर्म्मातुश्च ये द्विषेत् ।
गताम्वा अतिथैर्द्दृष्टा नृशंसा पञ्च एव ते ।
अष्टमूर्तिशिवः साक्षात्पञ्चव्योमलमन्वितः ।
शिवधर्मशास्त्र अन्तर्गत नृपसारसंग्रहको चतुर्थ अध्यायः ।

पाशुपतहरू शिवको अनेकप्रकारले पूजा र प्रार्थना गर्दथे । मानदेवकी छोरी विजयवतीको सूर्यघाट अभिलेखमा महेश्वरलाई निम्न रूपमा स्तुति गरिएको छः

जसको इच्छाले, सृष्टि, स्थिति, प्रलय, बुढ्याइँ र व्यसन आदिको योगले यो विशाल संसार चल्छ र विनष्ट हुन्छ त्यस्ता महेश्वरलाई सधैं नमस्कार छ ।[1]

यसै गरी जयदेव (द्वितीय) को पशुपति अभिलेखमा पशुपतिको विस्तृत र भव्य स्तुति गरिएको छः

'तीन आँखा भएका, तीनै वेदहरूले अविनाशी भनी भनिएका, तीनै समयमा (कालमा) एकै किसिमको रहने, तीन प्रकारद्वारा जानिने भएका, तीनै लोकका रक्षक, त्रेता आदि युगका कारण, त्रिगुणमय हुनाले देवताहरूद्वारा सधैं स्तुति गरिएका, गंगाद्वारा धोइएका शिर भएका, त्रिपुरासुरलाई जित्ने कसैद्वारा पनि नजितिएका ... ... अग्लो त्रिशूल भएका तथा इन्द्रद्वारा स्तुति गरिएका यस्ता महादेव तिमीहरूको रक्षा गरून् ।[2]

अरू स्तुतिश्लोक यस्ता छन:

राजद्रावणमूर्द्ध पङ्क्तिशिखरव्यासक्तचूडामणि-
श्रेणीसङ्गतिनिश्चलात्मकतया लङ्काम्पुनानाः पुरीं ।
(यस्मा) द् बन्ध्यपराक्रमा ... ... ... ... सङ्गताः
श्रीबाणासुरशेखराः पशुपतेः पादार्णवः पान्तु वः ।[3]

× ×

---

[1] यस्येच्छया जगदिदम्पृथु विश्वरूपम् ।
सर्गस्थितिव्ययजराव्यसनादियोगैः ।।
संयुज्यते वत तथा प्रतिमुच्यते च
तस्मै नम सततमस्तु महेश्वराय ।। अ. सं. भाग–१ पृ. २३.

[2] त्र्यक्षस्त्रय्यव्ययात्मा त्रिसमयसदृशस्त्रिप्रतीतस्त्रिलोकी
त्राता त्रेतादिहेतुस्त्रिगुणमयतया त्र्यादिभिर्वर्णितोऽलम् ।
त्रिस्रोतोधौतमूर्द्धा त्रिपुरजिदजितस्त्रिर्निबन्धस्त्रिवर्मो
यस्योत्तुंगस्त्रिशूलस्त्रिदशपतिनुतः (त्र्यम्बकस्त्रायतां वः) ।
सं. स. १–१ पृ. १

[3] ऐजन–पृष्ठ १

ख्यात्या यः परमेश्वरोपि वहते वासो दिशाम्मण्डलम्
व्यापी सूक्ष्मतरश्च शङ्करतया ख्यातोपि सहारकः ।
एकोप्यष्टतनुः सुरासुरगुरुर्वीतत्रपो नृत्यति
स्थाणुः पूज्यतमो विराजति गुणैरेवं विरूद्धैरपि ।[१]

उद्धृत श्लोकहरूमा शिवको भव्य स्तुति गरिएको देखिन्छ। यसबाट पशुपतिका भक्तहरूको भक्ति स्पष्टिन्छ। उनीहरू आफ्ना देवतालाई संसारका सृष्टिकर्त्ता, पालनकर्त्ता र प्रलयकर्त्ताको रूपमा मानेर आफ्नो देवलाई उच्च स्थान दिएर उनलाई संसारका ठूला देव (महा+देव) मान्दथे।

## शिवसायुज्य

शिवका आठ मूर्ति र अष्टपुष्पिका बाहेक पाशुपतहरूको आर्को एउटा विशिष्ट मान्यता 'दुःखान्त' र दुःखबाट मुक्तिको अवस्थामा शिवसंग सायुज्य प्राप्त गर्ने थियो।[२] शैवधर्मको महत्त्वपूर्ण ग्रन्थ शिवधर्मशास्त्र (जो अप्रकाशितै रूपमा छ) मा पनि शिवसायोज्य र रुद्रसायोज्यको वर्णन गरिएको छ।[३] नेपालका केही अभिलेखहरूमा यसको उल्लेख पाइन्छ।

अमृतदेवको पालाको (वि. सं.१२३२) खौमाटोल भदगाउँको अभिलेखमा 'रुद्रत्व संप्राप्तये' उल्लिखित छ।[४] जसबाट ज्ञात हुन्छ कि शिवका भक्त मृत्युपछि शिवलोकप्राप्तिको अभिलाषा राख्दथे। उक्त अभिलेखमा दिवंगत पुत्र जयद्रव्य-जीवको रुद्रत्व प्राप्तिको लागि जलद्रोणी बनाइएको कुरो लेखिएको छ। नेपाल संवत् ३४६ को पशुपति चौपाटन अभिलेखमा पनि 'शिवसायोज्य'को उल्लेख भएको छ।[५] यस्तै उल्लेख हामी जयस्थितिमल्लको पशुपति चौपाटन जयवागीश्वरी

---

[१] सं. स. १-१, पृष्ठ-५

[२] द्रष्टव्य- Saiva Cults. in Northern India-By V. S. Pathak. p. 17

[३] खण्ड-३ अध्याय ६; खण्ड १ अध्याय-११, श्लोक १६-२०; खण्ड-१ अध्याय १२, श्लोक ११२ आदि।

[४] दिवंगत पुत्र जैद्रव्यजीवस्य उदेसेन जलद्रोणीं दानकृता जस्य ... ... ... रुद्रत्व संप्राप्तये।
Mediaeval Nepal III. p. 9; तुलनीय पृष्ठ-

[५] समुत्तिनीषया तस्याः शिवसायोज्यकारणात्।
अ. सं. भाग-२. पृ. १४, तुलनीय पृष्ठ-

मन्दिरको अभिलेखमा पनि पाउँछौं, जसमा मृता रानीलाई शिवले स्वर्गलोकमा लगे भन्ने वर्णन गरिएको छ ।[१] यसै समयमा लेखिएको कुम्भेश्वर पाटन अभिलेखमा पनि गणवर्माकी पत्नी अनन्तलक्ष्मीलाई शिवले स्वर्गमा लगे भनी वर्णन गरिएको छ ।[२] त्यसै अभिलेखमा आर्को प्रसंगमा भनिएको छ 'जो व्यक्ति प्रतिदिन कुम्भेश्वर महादेवको आराधना गर्दछ त्यो शिवलोक जान्छ' ।[३] यो वर्णन 'सायुज्य मुक्ति'कै वर्णन हो भन्ने कुरा निश्चय छ । यक्षमल्ल र जीवमल्लको ५६१ नेपाल संवत्को पशुपति ताम्रपत्रमा संसारदेवीलाई कैलासपुर गइन् भनी वर्णन गरिएक छ[४]- यो पनि सायुज्यकै पर्यायवाची हो जस्तो लाग्दछ ।

उक्त विवरणबाट शिवसायुज्य नेपालको पाशुपत सम्प्रदायमा निकै लोकप्रिय रहेको बुझिन्छ ।

## लिच्छविकालमा पाशुपत सम्प्रदायका अनुयायीहरूको स्वरूप

तात्कालिक शिलालेखहरू यस विषयमा मौन छन् तर त्यस कालमा नेपाल आउने चीनी यात्रीहरूको यात्रा विवरणबाट यस विषयमा केही जोड्न सकिन्छ ।

लिच्छवि राजा नरेन्द्रदेवको समयमा चीनी राजदूत वाङ्-हियुन-शो भारत आउँदा नेपालको बाटो आएका थिए र पछि फर्किंदा पनि यतैबाट फर्केका थिए ।[५] उनले आफ्नो यात्रा विवरणमा नेपालबारे विभिन्न प्रकारका सूचना दिएका छन्, जुनबाट तत्कालीन नेपालका पाशुपतहरूको स्वरूपबारे केही कुरा जान्न सकिन्छ । वाङ्ले नेपालमा यस्ता मानिस देखेका थिए, जो आँखि-

---

[१]संरक्षिता तथाप्येवं नीता स्वर्गे शिवेन सा ।
सं. स. १-८, पृ. ४७

[२]Mediaeval Nepal III p. 34.

[३]नित्यं योऽप्यभिवन्दति प्रतिदिनं श्रीदेवकुम्भेश्वरम्
भुक्त्वा सर्व सुखानि याति नगरीं सोऽन्तेपुरीं शाम्भवीं ।
ऐजन

[४]तत्कैलासपुरं जगाम दिवसे संसारदेवीति सा ।
ऐजन पृष्ठ-५६

[५]India and China- P. C. Bagchi, P. 74.

भौंसम्म खौरन्थे र कानमा प्वाल पारेर बाँस अथवा पशुको सींगका टुक्रा (कुण्डल ?) लगाउँथे ।[१] हुन त चीनी यात्रीले यो कुरा स्पष्ट भनेका छैनन् कि ती मानिसहरू पाशुपतसम्प्रदायावलम्बी थिए तर उक्त विवरणलाई इतिहासकार श्री सूर्यविक्रम ज्ञवालीज्यूले पाशुपतधर्मसंग नै सम्बद्ध गर्नु भएको छ ।[२] यद्यपि त्यस विवरणमा पाशुपतहरूको सुविदित व्रत खरानी लगाउने (भस्म स्नान) कुराको चर्चा गरिएको छैन तर सींगको टुक्रा शरीरमा लगाउने कुराको आधारमा त्यस विवरणलाई पाशुपत सम्प्रदायसंग सम्बद्ध गर्न सक्दछौं । वाङ्भन्दा केही समय पहिले भारतमा आउने चीनका बौद्ध यात्री ह्वेन्सांगले वाराणसीमा खरानी घस्ने र हाडको टुक्रा शिरमा मुकुट जस्तो गरी लगाउने मानिसहरूलाई देखेका थिए ।[३] यस वर्णनलाई विद्वान्हरूले पाशुपतहरूकै वर्णन मानेका छन् । यही कुरा वाङ्का कुरासंग मिलाउँदा वाङ्को वर्णन नेपालका पाशुपतहरूको वर्णन मान्न सकिन्छ । यो कुरा मान्ने हो भने वाराणसीको र नेपालको पारस्परिक सम्पर्क पनि मान्नु पर्ने देखिन्छ । आँखिभौं खौरने कुरा चाहि नेपालका पाशुपत सम्प्रदायावलम्बीहरूको एक विशेषता रहेको बुझिन्छ ।

## लकुलीश पाशुपत

लकुलीश[४] पाशुपत सम्प्रदाय लकुलीश नामका एक व्यक्तिद्वारा स्थापित भएको मानिन्छ । पुराण, आत्मसमर्पण, कारवण माहात्म्य, पञ्चार्थिक टीका र तन्त्रालोक आदि ग्रन्थहरूमा लकुलीशलाई शिवको अवतार मानिएको छ । लकुलीशद्वारा स्थापित सम्प्रदायको नाम संस्थापककै नाममा लकुलीश पाशुपतको

---

[१] The inhabitants have the customs to shave their head just to the level of the eye-brows. They pierce their ears and suspend there in tubes made of bamboo or horn of cattle.
Journal Asiatique (1894) P. 65

[२] नेपाल उपत्यकाको मध्यकालीन इतिहास- पृ. २४८

[३] Life of Hiuantsang-Hwuili, Translated by S. Beal, Vol I. p. 55.

[४] यस नामको अर्को रूप नकुलीश पनि धार्मिक ग्रन्थहरूमा उल्लिखित भएको पाइन्छ ।

रूपमा प्रख्यात भयो। पुराणहरूमा यिनका कुशिक, गार्ग्य, मैत्रेय तथा कौरुष्य नामका चार शिष्यहरूको वर्णन गरिएको छ।

नेपाल शैवधर्मको प्रख्यात केन्द्र भएकोले यहाँ पाशुपत र लकुलीश पाशुपत सम्प्रदाय निकै प्राचीनकालदेखि लोकप्रिय भै आएको देखिन्छ। लकुलीश पाशुपत सम्प्रदाय पाशुपत सम्प्रदायको अभिभाज्य अग जस्तो भै आएकोले पनि यसको नेपालमा अधिक लोकप्रियता भएको कुरा अनुमित हुन्छ।

यो सम्प्रदाय नेपालमा कसरी र कहिले आयो भन्ने कुरा अज्ञात छ। यसको उल्लेख (आनुषङ्गिक रूपबाट) मानदेवकालिक शिलालेखमा पाइए पनि यसको स्थिति जिष्णुगुप्तको पालामा विशेष रूपले स्पष्टिएको देखिन्छ।

जिष्णुगुप्तको पालाको छत्रचण्डेश्वर अभिलेख[१]बाट त्यस वेलामा लकुलीश पाशुपत सम्प्रदाय लोकप्रिय रहेको बुझिन्छ। यद्यपि उक्त अभिलेखमा लकुलीश पाशुपत शब्दको उल्लेख त भएको छैन तर त्यसको राम्ररी अध्ययन गरेमा त्यसमा लकुलीश पाशुपत सम्प्रदायकै कुरा लेखिएको देखिन्छ। उक्त अभिलेख प्रणर्द्दन नाम गरेका एक आचार्य्यले उत्कीर्ण गराएका थिए। यी आचार्यलाई लकुलीश पाशुपत सम्प्रदायका अनुयायी मान्नमा निम्न कारण छन्।

उक्त अभिलेखमा आचार्य प्रणर्द्दनलाई कौशिक विशेषण लगाइएको छ।[२] लकुलीशका एक शिष्य कुशिक थिए भन्ने कुरा माथिको प्रसंगमा आइसकेको छ। प्रणर्द्दनलाई "कौशिक" उपाधि प्रयुक्त गरेको हुनाले कुशिककै परम्पराका मान्न सकिन्छ। यसरी विचार गरेपछि उक्त अभिलेखले कुशिकको इतिहासलाई श्रृङ्खलित पारेको कुरा स्पष्ट बुझिन्छ। उक्त अभिलेख चन्द्रगुप्त द्वितीयको पालाको गुप्त संवत् ६१ (४३८ वि. सं.) को मथुरा अभिलेख[३] र नरवाहनको १०३६ वि. सं को उदयपुर अभिलेखको[४] बीचको व्यवधानमा एक श्रृङ्खला हुन आउंछ।[५]

---

[१]Indian Antiquary vol, IX. P. 174 अथवा नोली पृष्ठ-७६

[२]आचार्य भगवत्प्रणर्द्दनकौशिकेन।

[३]E Pigraphia Indica vol. XXI. p. 8

[४]ऐजन vol. I. p. 281

[५]उक्त छत्रचण्डेश्वर अभिलेखमा तिथिमिति केही पनि छैन। जिष्णुगुप्तको नाम त्यसमा भएकोले यस अभिलेखको तिथि वि. सं. ६६४ तिर मान्न सकिन्छ।

प्रद्युम्नलाई लकुलीश पाशुपत सम्प्रदायका अनुयायी मान्न आर्को प्रमाण पनि हाम्रो समक्ष छ। माथि वर्णित चन्द्रगुप्तको पालाको मथुरा अभिलेखमा जसरी कुशिक आदि आचार्यहरूलाई "भगवत्" भनिएको छ[१] त्यसै गरी प्रद्युम्नलाई पनि दुवै छत्रचण्डेश्वर अभिलेखमा 'भगवत्' भनिएको छ।[२] यस विवरणबाट लकुलीश पाशुपत सम्प्रदायका आचार्यहरूलाई "भगवत्" विशेषण लगाउने परम्परा रहेको बुझिन्छ। यही परम्परा प्रद्युम्नले ग्रहण गरेको देखिएकोले यिनलाई लकुलीश पाशुपत सम्प्रदायका अनुयायी मान्न सक्दछौं। यिनलाई लकुलीश पाशुपतका सिद्ध गर्न आर्को प्रमाण पनि हामीसंग छ। उक्त अभिलेख एक देवमूर्तिको पृष्ठभागसंग सम्बद्ध प्रस्तर छत्रमा लेखिएको छ, जुन मूर्ति लकुलीशको अथवा त्ससंग सम्बद्ध देवताको। यस विषयमा विशेष चर्चा पछि गरिने छ।

लकुलीश पाशुपत सम्प्रदायमा पाञ्चार्थिक दर्शनको धेरै महत्त्व छ। त्यसमा निम्न कुरा हुन्छन्:

कार्य

कारण

विधि

योग

दुःखान्त

यिनमध्ये कार्य, विधि र योगको वर्णन नेपालका अभिलेखहरूमा देखिएको छैन। कारण र दुःखान्तको उल्लेख चाहिं केही नेपाली अभिलेखमा पाइन्छ। जसको वर्णन तल गरिन्छ।

## कारण

पाञ्चार्थिक दर्शन अनुसार शिव सृष्टिका कारण हुन्। छत्रचण्डेश्वरको

---

[१] भगवत् कुशिकाद् दशमेन भगवत् पराशराश्चतुर्थेन...E Pigraphia Indica vol. XXI. p. 8

[२] क. आचार्य भगवत् प्रद्युम्नकौशिकेन

प्रथम छत्रचण्डेश्वर अभिलेख-नोली पृष्ठ. ७६

ख. आचार्यो भगवत्प्रद्युम्न इह श्रद्धान्वितोऽचीकरत्।

द्वितीय छत्रचण्डेश्वर अभिलेख-नोली पृ. ८०

अभिलेखको श्लोकमा पनि यस्तै भावना देखिन्छ । त्यस श्लोकमा छत्रचण्डेश्वर-लाई सम्यग्ज्ञानलेयुक्त तथा सम्पूर्ण विश्वका सृष्टिकर्त्ता भनी वर्णन गरिएको छ ।[१] यसभन्दा पहिले पनि मानदेवको सूर्यघाट अभिलेखमा शिव (महेश्वर) को 'इच्छा'को वर्णन गरिएको छ ।[२] इच्छालाई पनि पाञ्चार्थिक दर्शनभित्रै मानिएको छ ।[३] नेपालका अनेक अभिलेखहरूमा उल्लेख गरिएको कारणपूजालाई पनि यसको शाब्दिक स्वरूपको आधारमा पाञ्चार्थिक दर्शन अन्तर्गत कारणकै अन्तर्गत मान्न सकिन्छ । यस स्थितिमा 'कारण पूजा' को षष्ठी तत्पुरुष समासको रूपमा (कारणस्य = भगवतः-पूजा = कारणपूजा) लिनु पर्दछ । पाञ्चार्थिक दर्शनमा महादेवलाई 'कारण' भनिएको छ । त्यसैले यो अनुमान सत्यको सन्निकट भए जस्तो लाग्दछ ।[४]

## दुःखान्त

लकुलीश पाशुपत सम्प्रदायमा दुःखान्तको स्थानबारे माथि नै चर्चा

---

[१]सम्यग्ज्ञानादियुक्तः सकलगुणगणं क्षोभयित्वा प्रधानम्
ब्रह्मादिस्थावरान्त जगदिदमखिलं योऽसृजद्विश्वरूपम् ।।
आजीव्यं सर्वपुंसां गिरितरुगहनं यः करोत्येकरूपम्
पायात्सोद्य प्रसन्नः स्मरतनुदहनच्छत्रचण्डेश्वरो वः ।।
नोली पृष्ठ–७६

[२]यस्येच्छया जगदिदम्पृथु विश्वरूपम् ।
सर्गस्थितिव्ययजराव्यसनादियोगैः ।।
संयुज्यते व्रत तथा प्रतिमुच्यते च ।
तस्मै नमः सततमस्तु महेश्वराय ।। अ. सं. भाग–१. पृ. २६

[३]Saiva Cults. in Northern India–V. S. Pathak P. 14

[४]यद्यपि कारणपूजाको उल्लेख वैष्णव देवताको सम्बन्धमा पनि भएको देखिन्छ । संवत् ४५२ को वसन्तदेवको पालाको पाटन खपिंछेको अभिलेखमा वेदव्यासको पूजाप्रसंगमा कारणपूजाको उल्लेख गरिएको छ (अ. सं भाग–१. पृ. २५) यसै गरी ध्रुवदेव र जिष्णुगुप्तको संयुक्त शासनको केवलपुर अभिलेखमा पनि नारायणको पूजा आजाको प्रबन्धको लागि जग्गाको उल्लेख गर्दा कारणपूजाको उल्लेख गरिएको छ (नोली पृष्ठ–७१)–यस विषयमा विशेष विवेचन पछि गरिने छ ।

गरिसकिएको छ । छत्रचण्डेश्वर अभिलेखको श्लोकमा 'प्रसन्न भएका, कामदेवलाई भस्म पार्ने छत्रचण्डेश्वर तिमीहरूको रक्षा गरून् ।'[१] यो पाशुपथिक दर्शन अन्तर्गत दुःखान्तको विचारसंग मिल्दो छ ।

उपत्यकाबाट प्राप्त प्राचीन मूर्तिहरू यस सम्प्रदायको अति लोकप्रियता देखिन्छ । जिष्णुगुप्तको समयमा आचार्य प्रणर्द्दनले दुइटा छत्रचण्डेश्वरको मूर्ति स्थापित गरेका थिए । ती मूर्तिहरूको पादपीठमा अभिलेख पनि लेखिएको छ ।[२] ती अभिलेखहरूमध्ये एकमा 'छत्रचण्डेश्वरले रक्षा गरून्' (पायात्सोऽद्य प्रसन्नः स्मरतनुदहनच्छत्रचण्डेश्वरोवः) लेखिएको छ । अभिलेखको यस कथनबाट अभिलेखसंग सम्बद्ध मूर्ति छत्रचण्डेश्वरको रहेछ भन्ने बुझिन्छ । यस प्रकारका असंख्य मूर्ति नेपाल उपत्यकामा पाइन्छन्, जसबाट उक्त सम्प्रदायको लोकप्रियता स्पष्टिन्छ ।

पहिलो छत्रचण्डेश्वर अभिलेखका[३] प्रथम सम्पादक भगवानलाल इन्द्राजी तथा बूहलर छत्रचण्डेश्वर मूर्तिको तुलना मथुराबाट प्राप्त केही मूर्तिहरूसंग गर्दछन् ।[४] तर उक्त महाशयहरूले त्यस मूर्तिको शिवमूर्तिसंग तुलना गरेको चाहिं औचित्यपूर्ण छैन । वास्तवमा छत्रचण्डेश्वर लकुलीशलाई भनिएको कुरामा केही शङ्का हुन सक्दैन । दोस्रो छत्रचण्डेश्वर अभिलेखका प्रथम सम्पादक रेनिइरो नोली अभिलेखमाथि स्थापित मूर्ति कामदेवको हो भनी लेखेका छन् ।[५] उक्त मूर्ति कामदेवको होइन छत्रचण्डेश्वरको हो यद्यपि सामान्य जनता यसलाई यसको बाहिरी स्वरूपको आधारमा भ्रमवश कामदेव नै भनेर पूजा आजा गर्दछन् । मूर्तिसंग सम्बद्ध शिलालेखमैं छत्रचण्डेश्वर लेखिएको र त्यससंग कामदेवको कुनै किसिमको सम्बन्ध रहेको नदेखिएकोले नोलीको कथन अनुचित सिद्ध हुन्छ ।

---

[१] पायात्सोद्य प्रसन्नः स्मरतनुदहनच्छत्रचण्डेश्वरो वः–नोली पृष्ठ–७९

[२] पहिलो छत्रचण्डेश्वर अभिलेख छत्रचण्डेश्वरको मूर्तिको पिठ्यूंसंग सम्बद्ध ढुङ्गाको छाताको डण्डीमा लेखिएको छ ।

[३] नोली शिलालेख संख्या ५९ लाई प्रथम छत्रचण्डेश्वरलाई तन्नामक प्रथम र नोली शिलालेख संख्या ६० लाई तन्नामक द्वितीयको रूपमा यहाँ वारंवार उल्लेख गरिने छ ।

[४] Indian Antiquary Vol. IX. p. 174.

[५] नोली–पृष्ठ–७९

चित्रमा ( चित्रफलक–५ ख )[१] सर्वप्रथम हाम्रो ध्यान मूर्तिको ऊर्ध्व-लिंगात्मक स्वरूपतिर आकृष्ट हुन्छ । ऊर्ध्वलिंगात्मक रूप महादेवको एक विशेषताको रूपमा चलिआएको देखिन्छ । महादेवको ऊर्ध्वलिंगात्मक स्वरूपको उल्लेख महाभारतमा ( १३–१७–४६ ) भएको छ । पछि महादेवको त्यो विशेषता उनकै अवतार मानिएका लकुलीशको मूर्ति ( जो नेपालमा छत्रचण्डेश्वरको रूपमा प्रख्यात छ ) संग सम्बद्ध गरियो । विश्वकर्मावतारशास्त्रको भनाइ अनुसार 'लकुलीश ऊर्ध्वमेढ्र ( Upraised membrum virile ) पद्मासनमा बसेका, दाहिने हातमा मातुलिंग ( बिमिरो ) तथा देब्रे हातमा दण्ड लिएको, यस्तो भनिएको छ।'[२] उक्त विवरणबाट स्पष्ट हुन्छ कि ऊर्ध्व-मेढ्रात्मक स्वरूप लकुलीशकै मूर्तिमा हुन्छ । यस कथनबाट तथाकथित छत्र-चण्डेश्वर लकुलीश नै हो भन्ने पनि स्पष्ट हुन्छ ।

नेपालमा पाइने छत्रचण्डेश्वरको मूर्ति र मथुरामा प्राप्त लकुलीशको मूर्तिमा धेरै मिल्दा कुरा देखिन्छन् । नेपालका छत्रचण्डेश्वर मूर्ति मथुराको लकुलीश मूर्ति जस्तै पद्मासनमा उभिएको छ । प्रस्तुत चित्रमा तथाकथित मातु-लिंग मूर्तिको तिघ्रासंग जोडिएको देखिन्छ ।[३] यसै गरी जटाजूट, त्रिनेत्र तथा मूर्तिको पीठको ढुङ्गामा निर्मित त्रिशूल, हातको स्थिति र हातका वस्तु पनि दुबैको समान रूपमा बनाइएका देखिन्छन् ।[४] उक्त दुइमा केही अन्तर पनि

[१]यस प्रसंगमा पशुपति छत्रचण्डेश्वरकै मूर्तिको चित्र दिई अध्ययन गर्नु पर्ने हो तर त्यसको चित्र लिन नपाइने भएकोले भीमसेनस्थाननेरको छत्र-चण्डेश्वर मूर्तिको चित्र दिई अध्ययन गरिएको छ । ती दुइमा विशेष अन्तर छैन ।

[२]न ( ल ) कुलीशमूर्द्ध्वमेढ्रं पद्मासनमुपस्थितम् ।
दक्षिणे मातुलिंगश्च वामे दण्डं प्रकीर्तितम् ॥

[३]प्रस्तुत चित्रमा बिमिरो हुन शंकै छ बरु यो तुम्बा जस्तो देखिन्छ । तर्क रहस्य दीपिकामा 'दोर्मूले तुम्बकं बिभ्राणाः'को रूपमा लकुलीशलाई तुम्बा धारण गर्ने भनेर बताइएको छ । भारतमा पनि केही मूर्ति ( लकुलीशका ) मा तुम्बा भएको देखिन्छ (Archaeological Survey of India, 1906-7.p.187)

[४]मथुराको लकुलीशको मूर्तिको चित्रको लागि हेर्नुहोस् Annual Report of the Archaeological Survey of India ( New Series 1930–34 [Plate-CXX [c]-J Marshall उक्त मूर्तिको वर्णनको लागि द्रष्टव्य–Epigraphia Indica Vol. XXI. P.8.

छन्। जस्तो मथुराको मूर्तिमा उपर्ना ( उत्तरीय ) तथा अधरीय दुबै बनाइएका छन् तर नेपालको ( उक्त ) मूर्तिमा खालि अधरीय देखिन्छ। चित्रमा मूर्तिको घुंडामाथि लुगा बनाइएको देखिन्छ तर अधो भागमा ( तिघ्रामुनि ) लुगाको ठाउँमा हात छ। छातीमा जनै पनि बनाइएको देखिन्छ।[१] यसरी हेर्दा उक्त दुइ मूर्तिमा केही विषमता पनि छ। यो विषमता त्यहीं मात्र सीमित छैन। लकुलीशको मूर्तिलाई छत्रचण्डेश्वर भन्ने र यसलाई शिवमन्दिरनेर आवश्यक रूपले स्थापना गर्ने कुरा पनि नेपालकै विशेषता रहेको देखिन्छ। यसबाट नेपालमा लकुलीश पाशुपत सम्प्रदाय निकै बलियो र प्रभावशाली रही आएको स्पष्ट बुझिन्छ। आर्को कुरा के भने भारतमा लकुलीशका बसेका मूर्ति प्रायः पाइन्छन् उठेका कम तर नेपालमा भने बसेका लकुलीशको मूर्तिको अभाव छ।

छत्रचण्डेश्वर अभिलेखको अध्ययनबाट सातौं शताब्दीमा नेपालमा लकुलीश पाशुपत सम्प्रदाय महत्त्वपूर्ण स्थितिबारे ज्ञान हुन्छ। उक्त दुबै छत्रचण्डेश्वर अभिलेखका प्रतिष्ठाता आचार्य प्रद्युम्न थिए। यिनी लकुलीश पाशुपत सम्प्रदायका थिए भन्ने कुराको केही वर्णन माथि नै परिसकेको छ। प्रथम छत्रचण्डेश्वर अभिलेखबाट आचार्य प्रद्युम्न नै छत्रचण्डेश्वरको मन्दिर (?) का जिम्मावाल रहेका बुझिन्छन् किनभने उक्त अभिलेखमा प्रद्युम्नले छत्रचण्डेश्वरको कू नामको गाउँमा कुलो बनाउनको लागि मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायको परिषद्मा वाराहस्वामि, सोमखड्डुक ( सोमसिद्धान्त सम्प्रदायका अनुयायी ) हरूलाई केही जग्गा दिएका थिए।[२] यस विवरणबाट लकुलीश पाशुपत सम्प्रदायको निकै माननीय स्थान रहेको बुझिन्छ।

छत्रचण्डेश्वर अभिलेखमा शुरुमा एक श्लोकमा छत्रचण्डेश्वरको स्तुति गरिएको छ। उक्त श्लोक सम्भवतः प्रद्युम्नले नै रचेका हुन्। त्यस श्लोकको व्याख्या गरी त्यसको लकुलीश पाशुपत सम्प्रदायसग कस्तो सम्बन्ध थियो बुझ्नु

---

[१] लकुलीशका मूर्तिमा जनै कम पाइन्छ तर भारतका केही मूर्तिमा जनै बनाइएको पनि पाइन्छ। Development of Hindu Iconography- J. N. Banerjee plate No-X L-4.

[२] आचार्य भगवत्प्रद्युम्नकौशिकेन भगवतश्छत्रचण्डेश्वरस्य कू ग्रामे प्रणालिकायाश्च खण्ड स्फुटित समाधानार्थमुद्दिश्य मुण्डश्रृंखलिक पाशुपताचार्यपर्षद् वाराहस्वामि उमसोम क्रसोमखड्डुकानां च अशीतिपिण्डक मानिकानां भूः प्रतिपादिताः।

आवश्यक छ ।

श्लोकको प्रारम्भमै सांख्यदर्शनसंग मिल्दो विचार व्यक्त गरिएको छ । 'सकलगुणगणं प्रधानं क्षोभयित्वा' मा सकलगुणगणको तात्पर्य तीन गुणहरू (सत्व, रज र तम) संग भएको बुझिन्छ । सांख्यदर्शन अनुसार प्रकृतिमा सत्व, रज तथा तम यी तीन गुण साम्यावस्थामा रहन्छन् ।[१] जब तीनै गुणको साम्यावस्थामा अन्तर आउँछ तब संसारमा सृष्टि हुन थाल्दछ । माथि उद्धृत वाक्यमा संपूर्ण गुणलेयुक्त प्रधान (प्रकृति) लाई क्षुब्ध गरेर तिनको साम्यावस्थामा अन्तर ल्याएर ब्रह्मादेखि स्थावरसम्मको सृष्टि गरे (ब्रह्मादि स्थावरान्तञ्जगदिद-मखिलं योसृजद्विश्वरूपम् ) । भाव यही हो कि पुरुषरूपी छत्रचण्डेश्वरले तीनै गुणहरूलेयुक्त प्रकृतिलाई क्षुब्ध पारेर ब्रह्मादेखि स्थावरसम्मको सृष्टि गरे । त्यसभन्दा अगाडिको चरणमा छत्रचण्डेश्वरलाई प्रलयकर्त्ताको रूपमा वर्णितगरिए-को छ । श्लोकको अन्तिम चरणमा 'पायात्सोद्य प्रसन्नः स्मरतनुदहच्छत्रचण्डेश्वरो वः' मा लकुलीश पाशुपत सम्प्रदायमा पाञ्चार्थिक दर्शन अन्तर्गत दुःखान्त हो भन्ने कुराको चर्चा त माथि नै गरिएको छ ।आचार्य प्रद्युम्नले आर्को एक छत्रचण्डेश्वर मूर्तिको स्थापना गरेका थिए र उक्त मूर्तिको पादपीठमा अभिलेख पनि उत्कीर्ण गराएका थिए ।[२] अभिलेख त निकै भग्न भएको छ तैपनि त्यसबाट प्रथम छत्रचण्डेश्वरको अभिलेख जस्तै केही दार्शनिक शब्द परेका छन् । उक्त अभिलेखको अन्त्यमा 'सुरासुरगुरोः संसारपाशच्छिद." लेखिएको छ । शैवदर्शनमा पनि, पशु र पाशको धारणा छ ।[३] लकुलीशपाशुपत सम्प्रदायमा शैव दर्शनको प्रभाव कसरी पर्‍यो यो एक विचारणीय कुरा छ ।

यसरी हेर्दा नेपालमा लकुलीश पाशुपत सम्प्रदायको इतिहास गौरवपूर्ण र प्रभावकारी देखिन्छ । यसले पनि नेपाललाई प्रमुख शैव तीर्थको रूपमा प्रख्यात गराउन राम्रो सहयोग गरेको बुझिन्छ ।

---

[१] प्रकृतिरिति ... ... सत्वरजस्तमो गुणानां साम्यावस्थाया अभिधानाद् ।- सर्वदर्शन संग्रह पृ. ३११. (भाण्डारकर ओरियण्टल सोसाइटी संस्करण)

[२] नोली-पृष्ठ-८०

[३] Vaisnavism Saivism and other Minor Religious Systems.-R. G. Bhandarker p. 177 र द्रष्टव्य-सर्वदर्शन संग्रह-पृ. १७४

## पाशुपत उपसम्प्रदाय

केही लिच्छविकालिक अभिलेखहरूमा केही विशेषणयुक्त पाशुपत सम्प्रदायको उल्लेख भएको छ, जसलाई पाशुपत उपसम्प्रदायको रूपमा लिनु पर्दछ। अभिलेखमा उल्लिखित पाशुपत उपसम्प्रदाय निम्न हुन्:

मुण्डश्रृंखलिक पाशुपत
श्रृंखलिक पाशुपत
वंशपाशुपत
दानपाशुपत

उक्त नामहरूलाई पाशुपत उपसम्प्रदाय भनिएको कारण पाशुपत नामको अगाडि रहेका शब्द हुन्। यद्यपि क्रमको दृष्टिबाट पाशुपत सम्प्रदायको उल्लेख पाशुपत उपसम्प्रदायभन्दा पछि भएको देखिन्छ तर यसको अर्थ यो हैन कि पाशुपत सम्प्रदाय नरेन्द्रदेवभन्दा प्राचीन होइन। हामीले माथिनै पाशुपत सम्प्रदायको प्राचीनताबारे विचार गरिसकेका छौं।

प्रत्येक पाशुपत उपसम्प्रदायको अलग अलग वर्णन तल प्रस्तुत गरिन्छ।

## मुण्डश्रृङ्खलिक पाशुपत

मुण्डश्रृङ्खलिक पाशुपत सम्प्रदायको उल्लेख जिष्णुगुप्तको पालाको छत्रचण्डेश्वर अभिलेखमा भएको छ।[१] यसबाट विक्रम संवत्को मुण्डश्रृङ्खलिकको शाब्दिक अर्थ मुण्ड (टाउको)को माला हुन्छ र मुण्डश्रृङ्खलिक पाशुपत शब्दले एक यस्तो पाशुपत उपसम्प्रदायको बोध हुन्छ जसका अनुयायीहरूको विशेषता मुण्डमाला लगाउने ज्ञात हुन्छ। मुण्डमाला लगाउने कुराले यसको तान्त्रिक स्वरूप स्पष्टिन्छ।

यस सम्प्रदायको कुनै किसिमको वर्णन उक्त अभिलेखमा छैन। अतः यस विषयमा हामी विशेष जान्ने स्थितिमा छैनौं तैपनि यसबारे अनुमान गर्न सकिन्छ। यस सम्प्रदायको नामले स्पष्ट गर्न खोजेको छ कि यस सम्प्रदायमा मुण्डमालाको विशेष स्थान थियो। अनुमानतः यस सम्प्रदायका अनुयायीहरू मुण्डमालाधारी महादेवको पूजाआजा विशेष रूपमा गर्दथे। यस्तै विशेषता भएको एक शैव सम्प्रदाय भारतमा "कापालिक" को रूपमा प्रख्यात थियो।

[१] मुण्डश्रृङ्खलिकपाशुपताचार्यपर्षदि–Indian Antiquary Vol. ix. p. 174. र नोली पृष्ठ–७६

विचार गर्दा मुण्डश्रृङ्खलिक पाशुपत सम्प्रदाय पनि भारतको कापालिक सम्प्रदाय जस्तै रहेको बुझिन्छ। कापालिक सम्प्रदाय पाशुपत सम्प्रदायकै अतिमार्गी शाखा भएको मानिएकोले[1] भारतीय कापालिक सम्प्रदायसंग नेपालको मुण्डश्रृङ्खलिक पाशुपत सम्प्रदायको तुलना गर्न सकिन्छ। श्रीमद्भागवतमा भवव्रती तपस्वीको रूपमा वर्णन गर्दै यिनीहरूलाई जटा, खरानी र हाड धारण गर्ने भनिएको छ[2]–जो कापालिक सम्प्रदायसंग सम्बन्ध गर्न सकिन्छ।

रुद्रात्तरारण्यमाहात्म्य[3] तथा देवताविमर्षस्तुति[4] (ने. सं. ४६६, ईस्वी संवत् १३४६ मा लेखिएको)मा महादेवलाई मुण्डमालाधारीको रूपमा स्तुति गरिएको छ जो मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायको सिद्धान्त अनुसार रहेको बुझिन्छ। तर छत्रचण्डेश्वर अभिलेखमा मात्र एकैपल्ट उक्त सम्प्रदायको उल्लेख हुनु एक आश्चर्यजनक हो। अरू कुनै अभिलेखमा यसको पुनः उल्लेख नहुनु यस सम्प्रदायको सानो इतिहासको संकेतक त होइन? भन्ने प्रश्न हाम्रो मनमा स्वाभाविक रूपले उठ्न सक्दछ। तर उक्त सम्प्रदायलाई मुण्डमालासंग सम्बद्ध गर्ने हो भने यस सम्प्रदायको इतिहास लामो भएको बुझिन्छ किनभने मुण्डमाला लगाएका शिवका र भैरवका असंख्य मूर्ति[5] नेपाल उपत्यकाबाट प्राप्त भएका छन्। नेपाल उपत्यकामा रहेका मुण्डमाला लगाएका असंख्य भैरवमूर्तिको आफ्नै विशेषता छ। त्यस्ता भैरवमूर्ति अन्यत्र कमै पाइन्छ। यो विशेषता मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायसंग सम्बद्ध रहेको बुझिन्छ।

प्रथम छत्रचण्डेश्वर अभिलेखको अध्ययन गर्दा मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायको उच्च स्थिति रहेको बुझिन्छ। पहिलो कुरा त त्यस अभिलेखमा

---

[1] Vaisnavism Saivism and other Minor Religious Systems–R. G. Bhandarkar. P. 222.

[2] भवव्रतधराः ये च सुमनव्रता, पाखण्डिनस्ते भवन्तु सच्छास्त्रपरिपन्थिनः। नष्टशौचाः मूढधियो जटाभस्मास्थिधारिणः विशन्ति शिवदीक्षायां यत्र दैवं सुरासवम्। (८.६)

[3] क) कुण्डलीकृतनागेन्द्रं मुण्डमालाविभूषणम् (१४.१०)
ख) मुण्डमालाधरं देवं नरास्थिकृतभूषणम् (४.१०)

[4] शम्भुर्विलग्ननृशिरोग्रकपालमाली।
सं स. १–१०,११,१२ संयुक्तांक पृ. ६७

[5] द्रष्टव्य चित्रफलक ६ ख, ७ क र ग, ८ ख

मुण्डश्रृंखलिकपाशुपतहरूको परिषद्को वर्णन गरिएको छ[१] र त्यस अन्तर्गत सोमसिद्धान्त तथा श्रृंखलिक पाशुपत सम्प्रदाय रहेका देखिन्छन्।[२] उक्त विवरण-बाट मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायले तत्कालीन धार्मिक क्षेत्रमा राम्रो प्रभाव जमाइसकेको बुझिन्छ र यसैले त्यसले आफ्नो कार्यक्रम सुचारुरूपले चलाउन एक परिषद् अथवा समिति खडा गरेको थियो। उक्त सम्प्रदायको नामसंग आचार्य शब्द जोडिएबाट त्यस सम्प्रदायको स्वरूपको पनि केही झल्को पाइन्छ। आचार्य शब्द्ले त्यस सम्प्रदायमा आचार्य परंपरा रहेको कुरा स्पष्ट हुन्छ।

यस रूपमा मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायको राम्रो इतिहास रहेको देखिन्छ तर आज नेपालमा यस नामको कुनै सम्प्रदाय नभएकोले मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायको के भयो भन्ने कुरा जान्नु कठिन छ। हुन त आज औघडको रूपमा केही शैव जोगी देखिन्छन् जुनलाई हामी मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायसंग सम्बद्ध गर्न सक्दछौं तर यस विषयमा पनि हामी किटेर केही भन्न सक्ने अवस्थामा छैनौं।

## श्रृंखलिक पाशुपत

लिच्छविकालमा श्रृंखलिक पाशुपत नामको एक पाशुपत उपसम्प्रदाय पनि चलेको देखिन्छ। जिष्णुगुप्तको पालामा आचार्य प्रद्युम्नले उत्कीर्ण गराएको पशुपति छत्रचण्डेश्वर अभिलेखमा पहिलोपल्ट यसको उल्लेख भएको छ।[३] पछि नरेन्द्रदेवको पशुपति शिवलिङ्ग अभिलेखमा पनि यस सम्प्रदायको उल्लेख भएको छ।[४]

---

[१] मुण्डश्रृंखलिकपाशुपताचार्यपर्षदि-नोली पृ ९६

[२] मुण्डश्रृंखलिक पाशुपताचार्यपर्षदि वाराहस्वामि उमसो मकसोम खड्कानां च अशीतिपिण्डकमानिकानां भू प्रतिपादिता:।

ऐजन

[३] शेषा: श्रृंखलिक पा .. नोली पृष्ठ-७६ श्रृंखलिक शब्दपछि पा छ तर त्यसको अगाडिको भाग भग्न भएको छ तर पा पाशुपत शब्दकै हो भन्ने कुरामा कुनै शंका हुन सक्दैन।

[४] ... मिदानश्रृंक (ख) लिकपाशुपतानां ग्लानन्नै: सस्यारि दत्तवर्षकस्तत्रैव नोली पृष्ठ-८७ मिदानभन्दा पहिलेको अभिलेखभाग फुटेको छ। अत: उक्त शब्द फुटेको वाक्यको अर्द्ध अवशिष्टांश हो भन्ने अनुमान गर्न सकिन्छ तर यदि

उपर्युक्त दुवै अभिलेख सप्तम शताब्दीका हुन्। अतः यो अनुमान गर्न सकिन्छ कि उक्त समयमा नेपालमा श्रृंखलिक पाशुपत नामको एक पाशुपत सम्प्रदाय लोकप्रिय थियो। यसको स्थापना कहिले भयो यसबारे हामीलाई ज्ञान छैन।

सर्वप्रथम यस प्रसङ्गमा हाम्रो अगाडि एक महत्त्वपूर्ण प्रश्न उठ्दछ कि यस सम्प्रदायका आदर्श र स्वरूप के के थिए? माथि उल्लिखित दुवै अभिलेख-हरूमा सम्प्रदायको नाम बाहेक अरू केही पनि लेखिएको छैन। अतः यस परिस्थितिमा यस सम्प्रदायको राम्रो परिचय दिनु सम्भव छैन।

'श्रृङ्खलिकपाशुपतानां' मा 'श्रृङ्खलिक' शब्द 'पाशुपतानां' शब्दको विशेषण हो। अतः अनुमानतः उक्त अभिलेखले त्यस शब्दद्वारा यस्तो पाशुपत सम्प्रदायतिर सकेत गरेको बुझिन्छ जो कुनै न कुनै रूपमा श्रृङ्खला अथवा सिक्रीसंग सम्बद्ध थियो। सम्भवतया यस सम्प्रदायका अनुयायीहरू शिवलाई श्रृङ्खलाधारण गर्ने रूपमा पूजा गर्दथे र आफ्नो शरीरमा पनि श्रृङ्खला लगाउँथे। यस्तै कर्मकाण्डको आधारमा सम्प्रदायको त्यस्तो नाम रहेको अनुमान गर्न सकिन्छ।

श्रृङ्खलिक पाशुपत सम्प्रदायको श्रृङ्खला लगाउने धारणामा मुण्डश्रृङ्ख-लिक पाशुपत सम्प्रदायको प्रभाव परेको हुनु सम्भव छ। यसै कारणले प्रारम्भमा यस सम्प्रदायको स्थिति त्यति उच्च नरहेको अनुमान हुन्छ। छत्रचण्डेश्वर अभिलेखमा त लकुलीश पाशुपत सम्प्रदायका आचार्यले मुण्डश्रृङ्खलिकपाशुपत सम्प्रदायका आचार्यहरूको परिषद्लाई सम्बोधन गर्दा यस सम्प्रदायको उल्लेख

---

भग्न वाक्यको मिदान शब्दसंग सम्बन्ध नभए यसलाई श्रृंक (ख) लिक-पाशुपतको विशेषण मान्नु पर्ने स्थिति आउँछ र यस स्थितिमा दानपाशुपत जस्तै दानश्रृंखलिक पाशुपत सम्प्रदाय पनि चलेको मान्नु पर्ने हुन आउँछ। शंकाधीन विषय भएकोले यहाँ केवल श्रृंक (ख) लिक मात्र ग्रहण गरिएको छ। छत्रचण्डेश्वर अभिलेखमा श्रृंखलिकपाशुपत सम्प्रदायको उल्लेख भएको पाइएकोले नरेन्द्रदेवको अभिलेखको श्रृंकलिकपाशुपतलाई त्यसैसंग सम्बद्ध गरिएको हो। दानपाशुपत सम्प्रदाय पनि त्यस कालमा चलेको थाहा पाइएकोले र त्यसलाई "दान लिने पाशुपत सम्प्रदाय"को रूपमा ग्रहण गरिएकोले श्रृंखलिक सम्प्रदायमा पनि दान लिने विशेषता भएको एक उप–सम्प्रदाय गठित भएको मान्नमा केही अप्ठ्यारो पर्दैन तर मिदान शब्दको अगाडिको भाग भग्न भएकोले यही ठीक हो भनी किटान सकिंदैन।

गरिएको छ। अतः स्पष्ट हुन्छ कि यस सम्प्रदायको स्थिति त्यस वेलामा त्यति उन्नत भैसकेको थिएन। यसपछि नरेन्द्रदेवको पालामा यस सम्प्रदायको विशेष उन्नति भएको बुझिन्छ। नरेन्द्रदेवको पशुपति शिवलिङ्ग अभिलेखमा यस सम्प्रदायको उल्लेख भएको छ।[१] त्यस अभिलेखको "शृंखलिकपाशु-पतानांग्लानने:" वक्तव्य विचारणीय छ। ग्लान शब्दको अर्थ त दु:ख हुन्छ त के उक्त अभिलेखका नायक (उत्कीर्ण गराउने) पाशुपत राजा नरेन्द्रदेव शृंखलिक पाशुपत सम्प्रदायका अनुयायीहरूलाई दु:ख दिन्थे भन्ने कुरा मान्ने ? फेरि त्यसै प्रसङ्गमा लेखिएको 'सस्यारिदत्तवर्पकस्तत्रैव' को पनि राम्रो अर्थ गर्न सकिंदैन। यी दुइ शंकाहरूबाट अभिलेखको पाठशुद्धतामा पनि शङ्का उठ्नु स्वाभाविक छ। अभिलेखका सम्पादक रे नोलीले यसको भाषालाई भ्रष्ट संस्कृत भनेका छन्।[२] अतः यसको राम्रो अर्थ यस स्थितिमा गर्न सकिंदैन।

नेपाल उपत्यकामा अनेक भैरवमूर्तिमा शृंखला लगाउने परम्परा पुरानो मानिन्छ। उपत्यकामा हुने अनेक जात्राहरूमा नेवारहरू चाँदीको सिक्री लगाएर हिंड्द छन् जसको सम्बन्ध अनुमानतः शृंखलिक पाशुपत सम्प्रदायसंग रहेको बुझिन्छ।

हनुमान ढोकामा रहेको आकाश भैरवको घाँटीमा सिक्री बनाइएको छ[३] जसको सम्बन्ध शृंखलिक पाशुपत सम्प्रदायसंगै रहेको हुनु असम्भव छैन। भैरव शिवकै आर्को रूप हुनाले भैरवको मूर्तिमा शृंखला हुनु हाम्रो अनुमानलाई केही पुष्टि प्राप्त हुन्छ। नेपाल राष्ट्रिय संग्रहालयमा सुरक्षित गणेशको एक मूर्तिमा घाँटीमा सिक्री बनाइएको देखिन्छ (चित्रफलक ५ क) संग्रहालयमै सुरक्षित एक भैरवमूर्तिको घाँटीमा पनि सिक्री बनाइएको छ (८ क[१] चि. फ.) नेपालको राष्ट्रिय चाड इन्द्रजात्रामा सडक सडक र गल्ली गल्लीमा राखिने भैरव (?) का घाँटीमा पनि सिक्री बनाइएको देखिन्छ। सिक्री लगाएका मूर्तिहरूलाई शृंखलिक पाशुपत सम्प्रदायसंग सम्बन्ध गर्ने हो भने यस सम्प्रदायको अति लोकप्रियता स्पष्ट हुन्छ।

शृंखला लगाउने धारणामा कुन किसिमको धार्मिक भावना थियो यो स्पष्ट छैन। मुण्डशृंखलाको आधारमा यसको विकासको सम्भावनाबारे माथि चर्चा गरिसकिएको छ। शैवदर्शनमा "पाश" शब्द निकै लोकप्रिय छ। अतः

---

[१] नोली पृष्ठ ८७

[२] ऐजन

[३] चित्रफलक–४ ख

सम्भवत: पाशकै कुनै न कुनै सम्बन्ध शृंखलाको दर्शनमा पनि रहेको हुनुपर्दछ। यस रूपमा शृंखला दार्शनिक अर्थ निकाल्न सकिन्छ।

यस प्रसङ्गमा नेपालका वंशावलिहरूमा भएका केही धार्मिक चर्चाको उल्लेख गर्नु आवश्यक छ। अनेक वंशावलिहरूमा अनेक राजा र देवताको उल्लेख गरी ताम्रशृङ्खली संछादन कृतम् या सुवर्णशृङ्खली संछादन कृतम् भनी वर्णन गरिएको पाइन्छ। जस्तो केशरवंशावलिमा शिवदेव नामका राजालाई 'पशुपतिभट्टारकलाई सुवर्णशृङ्खलीले ढाकिदिए' भनी वर्णन गरिएको छ।[1] गोपालवंशावलि अनुसार शिवगुप्त नामका राजाले विष्णुलाई सुवर्णशृंखलाले संछादित गरेका थिए[2]। गोपाल वंशावलिको उद्धृत भागको अनुवादमा शृङ्खला शब्दको अर्थ "पाता" गरिएको छ। तर यस किसिमको अनुवाद गर्नु उचित होइन जस्तो लाग्दछ किनभने नेपालका मन्दिरहरूमा सुनका र तामाका पाता हाल्ने परम्परा देखिंदैन। पित्तलका पाता मात्र नेपालका मन्दिरहरूमा लगाइएका देखिन्छन्। पुन: वंशावलिको उक्त वर्णनप्रसंगमा मन्दिरको उल्लेख कतै भएको छैन केवल विष्णु अथवा पशुपति मात्र भनिएको छ। अत: वंशावलिहरूको वर्णन राजाहरूद्वारा शिव अथवा विष्णुको मूर्तिमा शृङ्खला चढाएको रूपमा लिनु पर्दछ। यस दृष्टिबाट वंशावलिहरूको वर्णनको सम्बन्ध शृङ्खलिक पाशुपत सम्प्रदायसंग रहेको बुझिन्छ। यस प्रसंगमा विष्णुलाई शृङ्खला चढाउने कुराको औचित्यको चर्चा हुनु आवश्यक छ। किनभने शृङ्खलिक पाशुपत सम्प्रदायको कर्मकाण्ड वैष्णव देवताको सम्पर्कमा कसरी आयो भन्ने प्रश्न उठ्न सक्दछ। विष्णुलाई शृङ्खला चढाउने व्यक्तिहरूको आदर्श शृंखलिक पाशुपत सम्प्रदायबाट ग्रहण गरिएको बुझिन्छ अथवा त्यो व्यक्ति हरिहर सम्प्रदायको आदर्शको अनुसरण गर्ने पनि हुन सक्दछ। अथवा शृंखला शृङ्खलिक पाशुपतहरूको विशिष्ट मान्यताको रूपमा प्रख्यात भएकोले यसलाई वैष्णवहरूले पनि ग्रहण गरेको हुनु सम्भव छ। वंशावलिहरूमा पनि विष्णुलाईभन्दा शिवलाई शृङ्खला चढाएको उल्लेख धेरै आएको देखिन्छ।

---

[1] राजा श्री शिवदेव वर्ष २७ मास ७। तेन हि पशुपतिभट्टारकस्य सुवर्णशृङ्खलीछादनकृत। Mediaeval History of Nepal-L. Petech. P. 214.

[2] राजा श्रीशिवगुप्त वर्ष ७४ तेन च नन्दद्वलको निमन्तिलपाल विष्णुभट्टारकस्य सुवर्णसंख (शृङ्ख) लीश्छादन कृत-हिमवत्संस्कृति अंक-१. पृ. १०,

यसरी विचार गर्दा नेपालमा श्रृङ्खलिक पाशुपत सम्प्रदायको इतिहास निकै महत्त्वपूर्ण रहेको ज्ञात हुन्छ। भारतमा पनि धार्मिक परम्पराको लामो इतिहासमा यस नामको कुनै सम्प्रदाय चलेको आजसम्म थाहा नपाइएकोले नेपालीय पाशुपत सम्प्रदायको विशेषता स्पष्टिन्छ। पछि अध्ययन बढ्दै जाँदा यस सम्प्रदायको राम्रो इतिहास बनाउन सकिने आशा गर्न सकिन्छ। किनभने आजसम्म नेपालमा उत्खनन् र पर्यवेक्षण वैज्ञानिक रूपले हुन पाएको छैन।

## दानु पाशुपत

दान पाशुपत सम्प्रदायको उल्लेख नरेन्द्रदेवको पशुपति शिवलिङ्गाभिलेखमा मात्र भएको छ[१]। उक्त अभिलेख ७०२ वि सं. (तथाकथित अंशुवर्म संवत् ६६) को हो। अतः यो कुरा स्पष्ट हुन्छ कि बिक्रम संवत्को आठौं शताब्दीको प्रारम्भमा नेपालमा दानपाशुपत सम्प्रदाय थियो। अभिलेखमा "दान–पाशुपताचार्य" (दान सम्प्रदायका आचार्य) भनिएको छ। अतः उक्त विवरण-बाट उक्त सम्प्रदायको अवस्थितिको ज्ञान हुन्छ।

खालि दान विशेषणको आधारमा विशेष कुरा त केही थाहा पाउन सकिंदैन तर त्यसले यस सम्प्रदायको दान लिने विशेषतातिर सङ्केत गरेको बुझिन्छ। सम्भवतः यस सम्प्रदायका अनुयायीहरू दान लिने (वा दिने ?) काममा विशेष प्रवृत्त रहेका हुन सक्दछन् र यसै विशेषताबाट सम्प्रदायको नाम पनि चलेको हुन सक्दछ।

उक्त अभिलेखमा सम्प्रदायको नामसंग आचार्य शब्द जोडिएको देखिएकोले[२] यस सम्प्रदायमा पनि मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायको जस्तै आचार्य परम्परा रहेको बुझिन्छ। यसका अरू कार्यकलाप अरू पाशुपत सम्प्रदायभन्दा के के कुरामा भिन्न वा समता थियो भन्ने कुरामा हामी पूर्ण अज्ञानमा छौं।

अभिलेखमा यस सम्प्रदायको उल्लेख भएकोले यसको तत्कालीन धार्मिक समाजमा राम्रो स्थिति रहेको बुझिन्छ। यद्यपि उक्त अभिलेखको भाषाको अर्थ राम्ररी गर्न सकिंदैन र जसबाट हामी त्यसको राम्ररी अर्थ गरेर दानपाशुपत सम्प्रदायको राम्रो वर्णन प्रस्तुत गर्न सकौं। त्यस अभिलेखको निरीक्षणबाट दानपाशुपत सम्प्रदायका आचार्य दक्षिणतिलदूकको त्यसै अभिलेखमा उल्लिखित

---

[१]नोली—पृष्ठ-८७

[२]दानपाशुपताचार्यदक्षिणतिलदूकस्य–ऐजन

श्रृङ्खलिक पाशुपतहरूसंग केही सम्बन्ध रहेको बुझिन्छ ।

यस सम्प्रदायको नाम भारतीय पाशुपत सम्प्रदायमा नदेखिएकोले यसको मौलिकता ज्ञात हुन्छ । तर यसको स्थापना विकास र पतन (?) कसरी भयो आजसम्म ज्ञात हुन सकेको छैन । एउटै अभिलेखमा यसको उल्लेख भएकोले यसको अगाडि पछाडिको स्थिति अस्पष्ट हुन गएको हो । आज नेपालमा यस नामको कुनै पाशुपत सम्प्रदाय रहेको थाहा नपाइएकोले यसको पतन कसरी भयो र यो कसरी लुप्त भयो ? भन्ने प्रश्न हाम्रो मनमा उठ्दछ । तर आजसम्म प्राप्य ऐतिहासिक सामग्रीहरूले हाम्रो उत्सुकता मेटाउन कुनै किसिमको सहायता गरेको देखिएको छैन ।

## वंश पाशुपत[1]

यस सम्प्रदायको उल्लेख शिवदेव द्वितीयको लगनटोल अभिलेखमा भएको छ ।[2]

अभिलेखमा वंश पाशुपतको रूपमा यस सम्प्रदायको नाम मात्र पाइन्छ । अभिलेखको "वश" शब्दबाट विशेष अर्थग्रहण नहुने भएकोले यसलाई वंशको रूपमा लिई अध्ययन गर्दछौं । वंश विशेषणको आधारमा हामी यस सम्प्रदाय-लाई अथवा यसका अनुयायीहरूलाई वंशपरम्परात्मक रूपमा रहेको मान्न सक्दछौं । कुनै आर्को किसिमको पाशुपत सम्प्रदायसंग भेद गर्न नै वंश शब्दको प्रयोग पनि भएको हुन सक्दछ । वंश पाशुपत नाममा पाशुपत सम्प्रदायमा नयाँ दीक्षित हुने व्यक्तिहरूसंग भेद गर्ने प्रयत्न पनि यसमा देखिन्छ तर अभिलेखको पाठ अनुसार 'वश पाशुपत' को पनि राम्रो अर्थग्रहण हुन सक्दछ । वशले आफ्ना इन्द्रियहरूलाई वश गर्ने र ध्यान गर्ने कुराको सङ्केत भएको पनि हुन सक्दछ । वश नै ग्रहण गर्नाले यसको राम्रो अर्थ हुन सक्दछ ।

अभिलेखको "व (वं) शपाशुपताचार्येभ्यः" को आधारमा यस सम्प्रदायमा

---

[1] भगवानलाल इन्द्राजी तथा बूहलर वश पढ्दछन् तर त्यसलाई वंशको रूपमा पनि मान्दछन् (Indian Antiquary- vol. IX. P. 174) राधा गोविन्द बसाकले चाहिं अभिलेखको पाठमैं नभएको "वसु" पढेका छन् (History of North Eastern India-P. 265) । अभिलेखमा स्पष्ट रूपले वश भएको ठाउँमा वसु भन्नु अलि असंगत लाग्दो छ ।

[2] नोली-पृष्ठ-१०७

पनि मुण्डश्रृंखलिक र दानपाशुपत सम्प्रदायको झैं आचार्य परम्परा रहेको बुझिन्छ। उक्त अभिलेखमा लिच्छवि राजा शिवदेव (द्वितीय) ले आफूले स्थापना गरेको 'शिवदेवेश्वर भट्टारक' को मन्दिरका प्रबन्धको लागि वश पाशुपत सम्प्रदायका आचार्यहरूलाई अग्रहार दिइएको कुराको वर्णन गरिएको छ[१]। शिवदेवले पनि 'भगवत्पशुपति भट्टारक पादानुगृहीत' उपाधि लिएका थिए। यसैले उनले आफूले स्थापना गरेको मन्दिरको प्रबन्धको लागि एक पाशुपत सम्प्रदायका अनुयायीहरूलाई नियुक्त गरेका थिए। यस किसिमबाट 'वंश' पाशुपत सम्प्रदायले राजा श्रय पाएको बुझिन्छ जसबाट त्यसले राम्रो उन्नति गर्ने अवसर पाएको होला भन्ने अनुमान गर्न सक्दछौं। भारतमा पनि यस नामको कुनै पाशुपत सम्प्रदाय चलेको थाहा नपाइएकोले यसको मौलिकता रहेको ज्ञात हुन्छ यद्यपि यस सम्प्रदायका विशेषता अस्पष्ट नै रहेका छन्।

अरू पाशुपत सम्प्रदायको जस्तै यसको पनि स्थापना, विकास र पतनबारे हामीलाई केही ज्ञान छैन। अतः यस बारे अरू केही भन्ने अवसर छैन।

यसरी अध्ययन गरेर हेर्दा नेपालमा पाशुपत सम्प्रदायको इतिहास निकै गौरवपूर्ण देखिन्छ। अनेक मौलिक उपसम्प्रदायहरूको संघटन गरेर यसले आफ्नो रचनात्मकता पनि देखाएको छ। यी विवरणबाट नेपाल एक प्रख्यात पाशुपत केन्द्रको रूपमा प्रख्यात भएको अन्दाजी गर्न सकिन्छ। यसैले हिमवत्खण्डमा नेपाललाई "पाशुपत महाक्षेत्र" भनी भव्य गुणगान गरिएको छ।[२]

## लकुलीस पाशुपत, मुण्डश्रृंखलिक पाशुपत, सोमसिद्धान्त तथा श्रृंखलिक पाशुपत सम्प्रदायको पारस्परिक सम्बन्ध

प्रथम छत्रचण्डेश्वर अभिलेखमा मुण्डश्रृंखलिक पाशुपत (कापालिक)

---

१ यथायङ्ग्रामः शरीरकोट्टमर्यादोपपन्नः चाटभटानाम् अप्रवेश्येनाचन्द्रक्कांवनिकालिको भूमिच्छिद्रन्यायेनाग्रहारतया मातापित्रोरात्मनश्च विपुलपुण्योपचयहेतो रस्माभिः स्वकारित श्री शिवदेवेश्वरं भट्टारकन्निमित्तीकृत्य तद्दवकुलखण्डस्फुटित संस्कारकारणाय वशपाशुपताचार्येभ्यः प्रतिपादितः ... ... ...

नोली पृष्ठ–१०७

२. क. मध्ये सर्वगिरिष्ठानानेतेषां क्षमाभृतां मुने। पाशुपतं महाक्षेत्रं सन्ततं प्रविराजते ॥ (७०.१२)

ख. त्रैलोक्यानां गरिष्ठोयं नेपाल इति सर्वतः। भुक्तिमुक्तिप्रदं साक्षात् पशुपतिस्थलं महत् ॥ (६६–५१ (६१))

सोमसिद्धान्त तथा श्रृंखलिक पाशुपत सम्प्रदायको उल्लेख भएको छ। यसै अभिलेखमा लकुलीश पाशुपत सम्प्रदायको वर्णन गरिएको कुराको उल्लेख माथि नै गरिसकेको छ। एकै अभिलेखमा एकै कामको सन्दर्भमा चार शैव सम्प्रदायहरूको उल्लेख भएको पाइएकोले तिनीहरूमा परस्परमा केही सम्बन्ध रहेको कुरा स्पष्ट हुन्छ।

एघारौं शताब्दीमा लेखिएको प्रबोध चन्द्रोदय नाटकमा सोमसिद्धान्त तथा कापालिक (नेपालमा यसको नाम मुण्डश्रृंखलिक रहेको कुराको वर्णन माथि नै गरिएको छ) सम्प्रदायमा अभेद देखाइएको छ। यद्यपि तन्त्र ग्रन्थहरूमा ती दुइमा अभेदत्त्व देखाइएकोछ। जस्तै तन्त्राधिकार निर्णयमा कापालिक र सोमसिद्धान्त सम्प्रदायको भिन्न भिन्न नाममा उल्लेख गरिएको छ[१]। डा. विश्वम्भरशरण पाठकले प्रबोधचन्द्रोदय नाटकको कथनलाई समर्थन गर्न छत्रचण्डेश्वर अभिलेख अगाडि सानु भएकोछ। उहाँले प्रबोध चन्द्रोदयमा कापालिक र सोम सिद्धान्तीलाई एक मानिएको कुराको पुष्टि छत्रचण्डेश्वर अभिलेखमा उल्लिखित सोमसिद्धान्त र मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायबाट गर्न खोज्नु भएको छ[२]। एक अभिलेखमा दुबै सम्प्रदायको उल्लेख हुनाले मात्र अभेदको कुरा मान्ने हो भने वैष्णव सम्प्रदाय र श्रृंखलिक पाशुपत सम्प्रदायलाई पनि उनीहरूसंगै अभेद सिद्ध गनु पर्ने स्थिति आउंछ किनभने त्यसै अभिलेखमा वाराहस्वामि (वैष्णव धर्मसंग सम्बद्ध) र श्रृंखलिक पाशुपत सम्प्रदायको उल्लेख भएको देखिन्छ। यस स्थितिमा प्रबोधचन्द्रोदय नाटकको कथनको पुष्टि छत्रचण्डेश्वर अभिलेखबाट प्राप्त गर्न खोज्नु कठिन छ र असम्भव पनि छ। आर्को कुरा छ सातौं शताब्दीको अभिलेखको विषयवस्तुको प्रयोग एघारौं शताब्दीका विषय वस्तुको पुष्टिमा प्रयोग गनु एक कमजोरी हो। चार सय वर्षमा अनेक महत्त्वपूर्ण परिवर्तन आइसकेका हुन सक्दछन्। यस स्थितिमा आर्को विचारणीय कुरा छ अभिलेखको विषय वस्तु। डा. पाठकले अभिलेखको राम्रो अध्ययन नगरीकनै उक्त विचार पोख्नु भएको जस्तो लाग्दछ किनभने त्यस अभिलेखमा स्पष्ट रूपमा आचार्य प्रणर्द्दनले मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायका आचार्यहरूको परिषद्मा सोमसिद्धान्त सम्प्रदायका अनुयायीहरूले केही काम गनु पर्ने देखाइएको छ।

---

१ कपालं नाकुलं चैव तयोर्भेदान् द्विजर्षभाः
तथा पाशुपतं सोमं भैरवप्रमुखागमान् ॥ पृष्ठ – २

२ Saiva Cults in Northern India-P. 25.

अतः स्पष्ट छ कि उक्त अभिलेखमा त्यस किसिमको विचार पोख्न सकिदैन ।

मध्यकालमा आएर मुण्डशृंखलिक पाशुपत, सोमसिद्धान्त तथा शृंखलिक पाशुपत सम्प्रदाय मिश्रित भैसकेका देखिन्छन्। उपत्यकामा रहेका अनेक भैरव मूर्तिहरूमा चन्द्रमा (सोमसिद्धान्तसंग सम्बद्ध) र मुण्डशृंखला (मुण्डशृंखलिक पाशुपत सम्प्रदाय अथवा कापालिक सम्प्रदायसंग सम्बद्ध) अनि शृंखला (शृंखलिक पाशुपत सम्प्रदायसंग सम्बद्ध) बनाइएका देखिन्छन्। जसबाट उक्त सम्प्रदायहरू मिश्रित भएको बुझिन्छ (चित्रफलक– ४ क) ।

यसरी अध्ययन गर्दा उक्त सम्प्रदायहरूको एक संक्षिप्त इतिहास स्पष्टिन्छ ।

४

# सोमसिद्धान्त सम्प्रदाय

छत्रचण्डेश्वर अभिलेखमा सोमखड्डुक शब्दको उल्लेख भएको छ[१]। जो तत्कालीन नेपालमा सोमसिद्धान्त सम्प्रदायको अवस्थितिको संकेतक हो। यस सम्प्रदायमा महादेवलाई विशेष रूपले चन्द्रमासंग सम्बद्ध गरिन्छ।

आधुनिक विद्वान्हरूले सोमसिद्धान्त सम्प्रदायको उत्पत्ति विक्रमको तेस्रो शदीतिर भएको मानेका छन्। आज यस सम्प्रदाय सम्बन्धी साहित्य उपलब्ध भएको छैन तैपनि अरू स्रोतबाट यो सम्प्रदाय भारतमा निकै पुरानो र लोकप्रिय रहेको बुझिन्छ। भारतमा गुजरात यस सम्प्रदायको महत्त्वपूर्ण केन्द्रको रूपमा प्रख्यात थियो। नेपाल माहात्म्य अनुसार नेपालमा सोमसिद्धान्त सम्प्रदाय सत्ययुग-देखि नै चलेको थियो[२]। यस विवरणबाट नेपालमा यस सम्प्रदायको प्राचीनताबारे केही अट्कल लगाउन सकिन्छ।

सैद्धान्तिक दृष्टिबाट यस सम्प्रदायको वैशेषिक सम्प्रदायसंग घनिष्ठ सम्बन्ध रहेको थाहा पाइन्छ। यस सम्प्रदायका अनुयायीहरू शिवको चन्द्रशेखर मूर्तिको पूजा गर्दथे र शिवको चन्द्रमासंग घनिष्ठ सम्बन्धको कल्पना पनि गर्दथे। चन्द्रशेखर मूर्ति पनि तीन ढंगका बनाइन्छन्:

---

[१] वाराहस्वामि उम सोम क्रसोमखड्डुकानां च–

नोली पृष्ट–७६; भगवानलाल इन्द्राजी तथा बूहलरले 'खड्डुकानां' पढ़ेका थिए (Indian Antiquary vol. ix. P.174)। उनीहरूले खड्डुक "शिवको पुजारीको रुपमा उल्लेख भएको छ" भनी लेखेका छन् तर त्यो उल्लेख कहाँ भएको छ लेखेका छैनन्। रामदेवको पालाको ४६६ संवत्को मृगस्थली शिवलिङ्ग अभिलेखमा 'खुड्डुस्वामि' को उल्लेख गरिएको छ (नोली पृष्ठ–२४)। छत्रचण्डेश्वर अभिलेखको 'सोमखड्डुक' को खड्डुसंग यसको केही सम्बन्ध छ वा छैन भन्न सकिंदैन।

[२] २६.४

१. केवलमूर्ति– यस किसिमका मूर्तिमा शिवको मात्र मूर्ति बनाइन्छ ।

२. उमासहित मूर्ति र

३. आलिङ्गन मूर्तिमा शिवजी पार्वतीको साथ उभिएका वा आलिङ्गित रूपमा बनाइन्छन्[१] ।

नेपाल उपत्यकामा २ र ३ संख्याबमोजिम मूर्ति प्रशस्त पाइन्छन । लिच्छविकालको कलाका प्रसिद्ध नमूना शिव पार्वती फलक (हरगौरी फलक) लाई हामी आलिङ्गन र उमासहित दुवै शीर्षक अन्तर्गत राख्न सक्दछौं । यस्ता असंख्य फलक पशुपति, पाटन र काठमाण्डू क्षेत्रमा पाइन्छन् । यस किसिमका फलकमा सबैभन्दा राम्रो र विशाल फलक पशुपतिमा नवदुर्गा मन्दिर नेर रहेको छ । उपत्यकामा रहेका भैरवका केही मूर्तिहरूमा शिरमा चन्द्रमा बनाइएका हुन्छन् । यो पनि सोमसिद्धान्त सम्प्रदायको प्रभावको संकेतक ज्ञात हुन्छ ।

छत्रचण्डेश्वर अभिलेखको विवरणबाट विक्रम संवत्को सातौं शताब्दीमा नेपालमा सोमसिद्धान्त सम्प्रदाय चलेको थाहा पाइन्छ । यहाँ यसको इतिहास निकै पुरानो भएको सम्भावना गर्न सकिन्छ । नेपाल माहात्म्यको कथन पौराणिक ढंगको भए पनि सांकेतिक रूपबाट यस सम्प्रदायको प्राचीनता चाहिं यसले बताएको छ ।

शिवदेव प्रथमको बनेपा अभिलेखमा 'पश्चिम चन्द्रेश्वर' को उल्लेख गरिएको छ[२] जो भदगाउँस्थित सोमेश्वर महादेवतिर संकेत गरेको हुन सक्दछ । बनेपाबाट भदगाउँ पश्चिमै पर्दछ । यदि यो विचार सत्यको सन्निकट मान्न सकिन्छ भने भदगाउँको सोमेश्वर निकै प्राचीन रहेको मान्न सकिन्छ । नेपाल माहात्म्यमा सोमेश्वर लिंगको वर्णन गरिएको छ जसलाई हामी भदगाउँका सोमेश्वर नै मान्न सक्दछौं । उक्त ग्रन्थमा उक्त सोमेश्वर लिंगको स्थापना स्वयं चन्द्रमा (सोम) ले गरेका थिए ।[३]

---

[१] Elements of Hindu Iconography– T. A. G. Rao. Vol. ii. P. 105 र पछि ।

[२] नोली पृष्ठ– ४४

[३] स्वनाम्ना स्थापयामास । लिङ्गं विभव विस्तरैः ॥ (२६.१०)
सोमेन स्थापितं यस्मात् । शिवलिङ्गमनुत्तमम् ॥ (२६.११)
हिमवत्खण्डमा पनि १३२ यौं अध्यायमा सोमेश्वर लिंगको उत्पत्तिको विषयमा अनेक कुराको वर्णन गरेर नेपाल माहात्म्यको कथनको पुष्टि गरेको छ ।

छत्रचण्डेश्वर अभिलेखपछि यस सम्प्रदायको इतिहास नेपालमा अस्पष्ट छ तर त्यसकालका अभिलेखमा शिवजीको स्तुति गर्दा चन्द्रमाको पनि विशेष स्थान भएको देखिने हुनाले सोमसिद्धान्त सम्प्रदायको अवस्थितिको संकेत पाइन्छ। द्वितीय जयदेवको पशुपति अभिलेखमा महादेवको चन्द्रधारण गर्ने रूपमा स्तुति गरिएको छ।[१] रुद्रदेव र भोजदेवको पालाको पाटन त्यागलटोल गचाननी हरगौरी फलकको पादपीठको अभिलेखमा पनि महादेवलाई 'चन्द्रमौलि' भनिएको छ।[२] तथाकथित हरगौरी फलकलाई हामी सोमसिद्धान्त सम्प्रदायमा लिन सक्दछौं भन्ने कुरा माथिनै गैसकेको छ। मूर्ति सोमसिद्धान्त सम्प्रदायसंग सम्बद्ध हुनु र त्यसको पादपीठको अभिलेखमा 'चन्द्रमौलि' हुनु सोमसिद्धान्त सम्प्रदायकै परिचायक सिद्ध भएको देखिन्छ।

प्रथम छत्रचण्डेश्वर अभिलेखबाट त्यस समयमा सोमसिद्धान्त सम्प्रदायका अनुयायीहरूको कापालिक (मुण्डश्रृङ्खलिक पाशुपत) सम्प्रदायसंग राम्रो सम्बन्ध रहेको थाहा पाइन्छ। त्यस अभिलेखमा यस सम्प्रदायका अनुयायीहरू मुण्डश्रृङ्खलिक पाशुपत सम्प्रदायका आचार्यहरूको परिषद्‌को अन्तर्गत काम गरिरहेका देखाइएका छन्।[३]

सोमसिद्धान्त सम्प्रदायको आभिलेखिक उल्लेख भारतमा सर्वप्रथम भीम द्वितीयको बेरावल अभिलेखमा भएको छ।[४] उक्त अभिलेख ईस्वी संवत्‌को दशौं शताब्दी हो। यस दृष्टिकोणबाट छत्रचण्डेश्वर अभिलेख नै सोमसिद्धान्त सम्प्रदायको उल्लेख गर्ने पहिलो अभिलेख हुन आएको छ। यस रूपमा पनि यस अभिलेखको र यस सम्प्रदायको महत्त्व बढेको देखिन्छ। यसैले नेपाल माहात्म्यमा सोमलिङ्गको माहात्म्यको खूब राम्रो र आकर्षक वर्णन प्रस्तुत गरिएको छ।[५]

---

[१] मौलीन्दोः किं मयूखाः शरदमभिनवो प्राप्य सेवामुपेताः– नोली पृष्ठ–११७

[२] क. चन्द्रमांकपालः

ख. पातु वः चन्द्रमौलिः

ग. भगवच्छ्री शंकरसोमौ

Mediaeval Nepal–vol III. P. 3

[३] नोली पृष्ठ–७९; पुनः दर्शनीय अगाडि पृष्ठ मा यसको चर्चा भैसकेको छ।

[४] Bhavanagar Inscriptions–P.P. 186–187

[५] सन्ति लिङ्गान्यनेकानि नेपाले क्षेत्रसत्तमे।
सोमलिङ्गसमं लिङ्गं न भूतं न भविष्यति॥

यस रूपमा सोमसिद्धान्त शैव सम्प्रदायको पनि तत्कालीन नेपालमा राम्रो स्थिति रहेको बुझिन्छ।

---

सोमेश्वरं कृतयुगे त्रेतायां सोमनाथकम् ।
सोमशम्भुं द्वापरे हि सोमलिङ्गं कलौ युगे ॥
युगे युगे नाम तस्य वदन्ति मुनयो द्विज ।
गुप्तं मुने! सोमलिङ्गं न सर्वो वेत्ति मानवः ॥

नेपालमाहात्म्य (२६, ३–५)

तुलनीय– कुमारपालको प्रभासपाटन अभिलेख Bhavanagar Inscriptions-P. P. 186-187

## ५

# माहेश्वर सम्प्रदाय

शंकराचार्यको कथन अनुसार[१] माहेश्वर सम्प्रदायका अनुयायीहरू पशुपतिलाई पाँच तत्त्वहरूका उद्घाटक मान्दछन्। यसैको आधारमा आर. जी. भण्डारकर माहेश्वर सम्प्रदाय थियो भन्ने कुरा मान्नु हुन्छ र पशुपति अथवा शिवलाई यस सम्प्रदायका संस्थापक मान्नु हुन्छ।[२] यो सम्प्रदाय निकै पुरानो हो। इस्वी संवत्को प्रथम शताब्दीमा भएका कुषाण राजा विमा कदफिसस् माहेश्वर सम्प्रदायका अनुयायी थिए भन्ने कुरा उनका पैसाहरूले बताएका छन्। उनका पैसामा उनलाई "माहेश्वर" भनिएको छ।[३]

नरेन्द्रदेवको पशुपति वज्रधर र येंगुबहाल टोल अभिलेखमा उनलाई 'भगवत्पशुपति भट्टारकपादानुगृहीतः' र 'परममाहेश्वर' भनिएको छ।[४] त्यस विवरणबाट नेपालमा माहेश्वर र पाशुपत सम्प्रदाय भिन्न भिन्न थिए भन्ने थाहा पाइन्छ। यद्यपि नरेन्द्रदेव दुवै सम्प्रदायको सम्मान गर्दथे। माहेश्वर र पाशुपत सम्प्रदाय भिन्ना भिन्नै थिए भन्ने कुराको प्रमाणस्वरूप वि. सं. १२७३ तिर सारिएको अमृतेश्वरपूजा नामक ग्रन्थको पुष्पिकावाक्य पनि छ। त्यसमा अरिमल्ललाई पशुपति अनन्य भक्त भनिएको छ र फेरि उनलाई परममाहेश्वर पनि

---

[१] ब्रह्मसूत्र-- २, २, ३७

[२] Vaisnavism Saivism and Minar Religious systems–P. 170 (From the collected works of R. G. Bhandarkar no–IV)

[३] Lahore museum Catalogue of coins (white head) Plate–XVII, No–31–33.

[४] नोली पृष्ठ–८६ तथा १०२; यी दुई अभिलेखमा एक वाक्यबाहेक अरू केही भेद छैन एउटै अभिलेखका दुइ प्रति राखिएको बुझिन्छ।

भनिएको छ ।[१] यस विवरणबाट भण्डारकरको मतको आंशिक विरोध हुन्छ कि पाशुपत र माहेश्वर सम्प्रदाय एकै थिए ।

मध्यकालीन नेपालमा माहेश्वर सम्प्रदाय निकै लोकप्रिय रहेको बुझिन्छ । वि. सं. १३१७ तिर लेखिएको महालक्ष्मीव्रतको पुष्पिकावाक्यमा जय भीमदेवलाई परममाहेश्वर भनिएको छ ।[२] अरिमल्ल पनि माहेश्वर सम्प्रदायका अनुयायी थिए भन्ने कुराको उल्लेख माथि नै भएको छ यद्यपि उनी नरेन्द्रदेव जस्तै पशुपतिलाई पनि मान्दथे । विक्रम संवत्को पन्ध्रौं शताब्दीमा भएका मल्ल राजा ज्योतिर्मल्ल पनि माहेश्वर सम्प्रदायका थिए । ने. सं. ५३७ (वि. सं. १४७४) मा सारिएको आख्यातरत्न कोशमा उनलाई दुइपल्ट माहेश्वर भनिएको छ[३] । जसबाट उनी माहेश्वर सम्प्रदायका अनन्य भक्त रहेको स्पष्ट हुन्छ। धर्ममल्लको पालाको पशुपति त्यागलटोल अभिलेखमा जयसिंहरामवर्द्धनका भाइ

---

[१]श्रीमन्नेपालेश्वरः । समस्तराजावलीविराजित । महाराजाधिराजपरमेश्वरपरममाहेश्वरः । श्रीपशुपतिभट्टारकावधानाद् भक्तिजलप्रक्षालितान्तःकरणसकलशास्त्रपरिमालित । सिद्धान्ततन्त्ररहस्यागमार्थविद श्रीमद् अरिमल्लदेवप्रवर्धमान विजय राज्ये-Medieval History of Nepal -L. Petech. P. 84 यसै गरी ने. सं.४५७ मा लेखिएको "महीरावण वधोपाख्यानम्" मा अरिमल्ललाई "परमदैवताधिदेवपरममाहेश्वररघुकुलतिलकभूपालपरंपरापरिगमित .. .. श्रीपशुपति देवतावरलब्धप्रसादैकमहाराजाधिराज सप्रक्रिय राजराजेन्द्र श्री श्रीजयारिमल्ल देवानाम्विजयराज्ये । बृहत्सूचीपत्र (वीर.पु.) नाटक, पृ. ४४

[२]महाराजाधिराजपरमेश्वरपरममाहेश्वर परमभट्टारक श्रीमज्जयभीमदेवराज्ये । Medieval History of Nepal- L. Petech P. 93

[३]श्रीरघुवंशारविन्दकुण्डप्रकाशने (नै) कमार्तण्डस्य राजाधिराजपरमेश्वरस्य परममाहेश्वर परमभट्टारकस्य ... श्री श्री जयज्योतिर्मल्लदेवस्य विजयराज्ये
चातुर्वर्ह्मविहारचारणपटुः सन्नीतिरत्नार्णवः
श्रीमत्पुण्यकदम्बकेशरिनिभः । प्रत्यक्षविश्वम्भरः ।
सर्वेषाम्प्रतिपालनै कनिपुणःसर्वेण माहेश्वरोः ।
जीयाज्जङ्गमकल्पवृक्ष सुकृतीश्रीज्योतिमल्लः प्रभुः ।
बृहत सूची पत्र (वीर पु.) बौद्ध, पृष्ठ ५१

महामात्य मदनरामवर्द्धनलाई पनि परममाहेश्वर भनिएको छ[१] ।

यसरी अध्ययन गर्दा नेपालमा माहेश्वर शैव सम्प्रदाय पनि चलेको थाहा पाइन्छ तर यसको विशेषता र कार्यक्रम भने थाहा पाइँदैन ।

---

[१]परममाहेश्वर महामात्य श्री मदनराम वर्द्धनेन ।
Medieval Nepal.-D. R. Regmi Vol. III P. 36.

६

# मिश्र शैव धर्म

मिश्र शैवधर्मको इतिहास लामो र विशाल छ । यस्तो कुनै भारतीय धर्म छैन जसमा शैव धर्मको प्रभाव परेको होओइन । यहाँ नेपालमा शैव र अरू धर्महरूमा भएको मिश्रणको संक्षिप्त इतिहासको वर्णन गरिएको छ ।

धर्महरूमा सामञ्जस्यको प्रवृत्ति वैदिक आदर्शको अनुसार हो। ऋग्वेदमा यस किसिमको आदर्श निम्न वाक्यमा पाइन्छः

एकं सद्विपा वहुधा वदन्ति
अग्नि यमं मातररिश्वान माहु: ।[1]

यही आदर्श मिश्र शैव धर्मको मुख्य पृष्ठभूमिको रूपमा रहेको थाहा पाइन्छ ।

मिश्र शैवधर्म शीर्षक अन्तर्गत शैव र वैष्णव, शैव र सौर, शैव र शाक्त र शैव र बौद्ध धर्महरूको पारस्परिक सामञ्जस्यको प्रवृत्ति आदिको प्राप्य सामग्रीहरूको आधारमा अध्ययन प्रस्तुत गरिएको छ ।

## शिव र विष्णु (शैव र वैष्णव)

शैव र वैष्णव सम्प्रदाय भारतीय धर्महरूमा महत्त्वपूर्ण हुन् र यी दुवैको लामो इतिहास अति रोचक छ । यी दुइ धर्मको लामो इतिहासमा पछि आएर सामञ्जस्य हुन शुरु भएको देखिन्छ । भारतमा पनि यस किसिमको इतिहासको राम्रो पक्ष बनेको छ तर त्यस किसिमको अध्ययन प्रसंगमा नेपालका सन्दर्भ नरहे त्यो अध्ययन अपूर्ण रहेको मान्नु पर्दछ । नेपालमा शैव र वैष्णव धर्मको सामञ्जस्यात्मक प्रवृत्तिको गौरवपूर्ण इतिहास बनेको थियो जसको संक्षिप्त इतिहास तल लेखिन्छ ।

---

[1] ऋग्वेद- २, अ, ३, अ २२ व

शिव र विष्णुलाई समान रूपमा मान्ने वर्गको इतिहासमा निकै पुरानो हो। मानदेव प्रथम (विक्रत संवत् ५२१-५६२) को समयदेखि नै यस विचारको राम्रो पृष्ठ भूमि तैयार भैसकेको थाहा पाइन्छ। मानदेव स्वयं वैष्णव धर्मका अनुयायी थिए तर उनका दुइ रानी क्षेमसुन्दरी र गुणवती शैव धर्मानुयायी थिए। एउटै परिवारमा पति र पत्नी विभिन्न धर्म मान्दथे भन्ने कुरा तत्कालीन समाजमा रहेको धर्म सहिष्णुता स्पष्ट हुन्छ। यस्तै अर्को उदाहरण हामी तत्कालीन गुप्त परिवारमा पनि देख्दछौं। भौमगुप्तका बाबु अनुपरम वैष्णव थिए र उनले हांडीगाउँको सत्यनारायण स्थानमा व्यासस्तुति अंकित गरी एक गरुडस्तम्भ गाड़ेका थिए।[१] अनुपरमगुप्तकी पत्नी आभीरीले आफ्ना वैष्णव पतिको स्वर्गप्राप्तिको लागि अनुपरमेश्वर नामको एक शिवलिंगको स्थापना गरेकी थिइन्[२]। यस्तै वातावरणमा शैव र वैष्णव धर्मको मिश्रण भएर एक नवीन सम्प्रदाय 'हरिहर' को रूपमा उपस्थित भयो।

लिच्छवि राजा गणदेवको समयमा (वि. सं. ६२४) हरिहर सम्प्रदायबारे प्रथम प्रमाण प्राप्त हुन्छ। पशुपति त्यागलटोल अभिलेखमा प्रारम्भमा हरिहर मूर्तिको स्तुति गरिएको छ।

> पत्योर्नौ पश्य हे श्रीर्युगलममिथुनं शुलभृच्छाङ्गपाण्योः।
> एकैकस्यात्र किन्तन्न सुकरभनयोस्तौ यदेकत्र पृक्तौ॥
> मूर्तिं त्यक्त्वेव नूनं सखि मदनरिपोरेवमुक्त्वा भवान्या।
> यो दृष्टो जातु तस्मै सततमिह नमोस्त्वर्द्धशौरीश्वराय[३]॥

---

[१] नोली पृष्ठ- १४

[२] आभीरी ख्यातगुणा भार्य्या परमाभिमानिनः सूनोः।
पुण्यविवृद्ध्यै भर्त्तुः देवतामितः प्रयातस्य॥
पुण्येहनि धननिचयैर्द्विजजनमभिपूज्यदानमानाभ्याम्।
पुत्रेणानुज्ञाता चकार संस्थापनं शम्भोः॥

× × ×

अनुपरमेश्वरसंज्ञाञ्च शम्भोर्भुवनमहितस्यास्य॥ नोली-पृष्ठ-२३

[३] संस्कृत सन्देश १-८, पृ. १७; तुलनीय ११६१ वि. सं को नागपुर अभिलेखको निम्न श्लोकः

> वैराग्यश्च सरागतां च नृशिरोमालां च माल्यानि च।
> व्याघ्रानेकपचर्मणी च वसनं बार्हींश्च हारादि च॥

"हे लक्ष्मी ! त्रिशूल र शार्ङ्ग र धनु लिएका जोडा नभएका हाम्रा पतिहरू (शिव र विष्णु) यहाँ एकै भएका छन् र ती दुइमा एकत्व भएकोले संसारमा उनीहरूलाई कुन काम यस्तो छ जो गर्न असम्भव छ। कामदेवका शत्रुको मूर्ति (शिवजी) मसंग छुट्टिनाले (विष्णुसंग) एक भएका छन्। यस्तो भनेर पार्वतीले जुन अर्धशौरीश्वर (आधा विष्णु र आधा शिवको) मूर्तिलाई सधैं नमस्कार होओस्।"

त्यसै अभिलेखमा हरिहरको मूर्तिको स्थापनाको पनि उल्लेख भएको छ।[१] उक्त अभिलेमा हरिहरलाई सम्पूर्ण संसारमा उत्पत्ति, स्थिति र प्रलयकर्त्ताको रूपमा पनि वर्णन गरिएको छ।[२]

उक्त अभिलेख (गणदेवकालीन पशुपति अभिलेख) को अत्यधिक विशेषता छ। यो अभिलेख हरिहर सम्प्रदायको सबैभन्दा प्राचीन अभिलेख हो। यसमा ४८६ शक संवत् छ (वि. सं. ६२४)। भारतमा हरिहर सम्बन्धी वर्णन सर्वप्रथम वि. सं. ८२६ को कृष्णराजको भण्डक अभिलेखमा पाइन्छ।[३] यस विवरणबाट हरिहर सम्प्रदायको उत्पत्ति र विकास नेपालमैं सर्वप्रथम भएको कुरो स्पष्ट हुन्छ।

लिच्छविकालका यशस्वी राजा अंशुवर्माको समयमा (वि.सं. ६६२-६७८) पनि यही परम्परा चलिरहेको थाहा पाइन्छ। अंशुवर्मा आफू पशुपतिका अनन्य भक्त थिए तर उनी अत्यधिक धर्मसहिष्णु थिए। उनको संवत् ३२ को हांडीगाउँको अभिलेखबाट वैष्णव धर्मका मन्दिरहरूलाई उनले आर्थिक सहायता

---

यद्भूतिं च विलेपनं च भजते भीमं च भव्य च यत्।
तद्दिश्याद्वपुमारमणयोर्मुक्तिं चभुक्तिं च यद्॥
Epigraphia Indica Vol. II P. 183

[१] अनादिनिधन भगवन्तमिहशंकरनारायणस्वामिनं प्रतिष्ठापितवान्-ऐजन टिप्पणी संख्या १

[२] सकलभुवनसम्भवस्थितिप्रलयकारिणम् अनादिनिधनं भगवन्तमिह शंकरनारायण स्वामिनं प्रतिष्ठापितवान्।
सं. स. १-८, पृष्ठ-१७

[३] Epigraphia Indica. vol. xiv. P. 121

दिएको कुरा थाहा पाइन्छ ।[१] यस समयमा हरिहर सम्प्रदायको एक नवीन विचार उद्भूत भएको देखिन्छ । हाल नेपाल राष्ट्रिय संग्रहालयमा सुरक्षित अंशुवर्माको अभिलेखमा 'हात मिलाएका शंकर र विष्णुको' (करमेलीती शंकरनारायणस्य)[२] मूर्तिको (?) वर्णन गरिएको छ । अभाग्यवश उक्त अभिलेख भग्न अवस्थामा रहेकोले त्यसबारे सबै कुरा जान्ने साधन अपूर्ण रहन गएको छ तर यति अनुमान त गर्न सकिन्छ कि उक्त अभिलेखले हरिहर सम्बन्धी नवीन कल्पनाको विवरण संरक्षित गरेको छ । त्यसले हरि र हरको यस्तो मूर्तिको वर्णन गरेको छ जसमा उक्त दुइ देवता हात मिलाइरहेका देखाइएका छन् । यस विवरणबाट स्पष्ट हुन्छ कि हरिहर सम्प्रदाय अंशुवर्माको समयमा नवीनतम परिकल्पनामा चित्रित गरिन थालेको थियो । हुन त उक्त अभिलेखमा वर्णन गरिएको जस्तो मूर्ति आजसम्म ज्ञात हुन सकेको त छैन तर पुरातात्त्विक उत्खनन आदि गर्दा त्यस्तो मूर्ति पाउने सम्भावना व्यक्त गर्न सकिन्छ । अभिलेखको उक्त विवरणबाट धार्मिक मूर्ति विज्ञान ( Iconography ) सम्बन्धी नवीन तथ्य पनि ज्ञात हुन्छ । हरि र हरलाई संयुक्त गरेर एकै मूर्ति बनाउने परम्परा त ज्ञात भएकै कुरा हो तर शैव र वैष्णव धर्ममा सामञ्जस्य देखाउनको लागि हात मिलाएको मूर्तिको परिकल्पना यस अभिलेखले मात्र संरक्षित गरेको छ ।

भीमार्जुनदेव र जिष्णुगुप्तको थानकोट अभिलेखबाट शैव र वैष्णव धर्मको पारस्परिक सहिष्णु वातावरणको ज्ञान हुन्छ । उक्त अभिलेखमा प्रारम्भमा विष्णुको स्तुति गरिएको छ । तर त्यस अभिलेखका अन्यतम नायक जिष्णुगुप्तको उपाधि 'भगवत्पशुपतिभट्टारकपादानुगृहीत:' दिइएको छ । अभिलेखको शीर्षभागमा वैष्णव चिन्ह चक्र र दुइ शंखको चित्रण गरिएको छ ।[३] यस्तै कुरा हामी भीमार्जुनदेव र विष्णुगुप्तको येंगाहिटी लगनटोलको संयुक्त अभिलेखमा पनि देख्दछौं । त्यस अभिलेखमा पनि प्रारम्भमा विष्णुको स्तुति गरिएको छ तर त्यस अभिलेखका अन्यतम शासक विष्णुगुप्तको उपाधि 'भगवत्पशुपतिभट्टारक-पादानुगृहीतः' दिइएको छ ।[४] यस विवरणबाट तत्कालीन धर्मसहिष्णु वातावरणको राम्रो परिज्ञान हुन्छ । यी विवरणलाई शैव-वैष्णव धर्मको

---

[१] नोली पृष्ठ–५०

[२] अभिलेख संग्रह–भाग–५ पृ. १४

[३] नोली पृष्ठ–७४–७५

[४] नोली पृष्ठ–८१–८२

संयुक्त रूप हरिहर सम्प्रदायको आर्को पक्षको रूपमा पनि ग्रहण गर्न सकिन्छ ।

मध्यकालीन नेपालमा पनि यस्तै परम्परा कायम रहेको देखिन्छ । नेपाल संवत् ४५७ (१३९४ वि. सं.) मा सारिएको (वा लेखिएको) महारावणवध-नाटकमा त्यस समयका राजा अरिमल्ललाई परमवैष्णव, परममाहेश्वर अनि पशुपतिदेवताबाट वर पाएका भन्ने कुरा लेखिएको छ ।[1] उक्त विवरणबाट अरिमल्ल हरिहर सम्प्रदायबाट प्रभावित भएको कुरा स्पष्ट हुन्छ । उक्त विवरणमा विशेष विचारणीय कुरा साम्प्रदायिक रूपमा देखिन्छ । त्यसमा अरिमल्ललाई परमवैष्णव र परममाहेश्वर भनी लेखिएकोमा वैष्णव र शैव सम्प्रदायको स्पष्ट उल्लेख गरिएको छ । यस्तो उल्लेख कम पाइन्छ ।

धर्ममल्लको पालाको पशुपति त्यागलटोल अभिलेख मध्यकालीन नेपालमा हरिहर सम्प्रदायको राम्रो स्थितिको संकेत गर्दछ । यसमा प्रारम्भमा हरिहरको स्तुति गरिएको छ । जो निम्नत: छ:

यौ तौ शंखकपालभूषणकरौ मालास्थिमालाधरौ ।
देवौ द्वारवतीश्मशाननिलयौ नागारिगोवाहनौ ।।
द्वित्र्यक्षौ बलिदक्षयज्ञमथनौ श्रीवत्सगंगाधरौ ।
पापं मे हरतां सदा हरिहरौ श्रीशैलजावल्लभौ ।।[2]

त्यस अभिलेखमा धर्ममल्लका राजगुरु (?) अथवा अरू कुनै व्यक्तिलाई "श्री ३ शंकरनारायणपादपद्मपरागपिंडालितशिरोरुहै:" उपाधि दिइएको छ ।[3]

---

[1] परमभट्टारकपरमेश्वरपरमवैष्णवपरमदेवताधिदेवपरममाहेश्वररघुकुलतिलकभूपाल-परम्परा परिणमितमौलिशीषप्रसूपितपादारविन्दश्रीपशुपतिदेवतावरलब्ध-प्रसादैकमहाराजसप्रक्रीयराजरत्नेन्द्रश्रीजयारिमल्लदेवानां विजयराज्ये-Catalogue of Palmleaf and selected paper manuscripts belonging to the Durbar Lib. (Nepal) Vol. II. P. 25

[2] Mediaeval Nepal-vol III. D. R. Regmi P. 36; माघ महिनामा नेपालमा प्रत्येक घरमा स्वस्थानी माहात्म्यको पाठ गर्ने चलन छ । त्यसमा पनि यो श्लोक राखिएको छ । यसको कारण अस्पष्ट छ तर यस उदाहरणबाट पनि हरिहर सम्प्रदायसम्बन्धी केही अरू कुरा ज्ञात हुन्छ ।

[3] यो उपाधि जयसिंह रामवर्द्धनको पनि हुनु असम्भव छैन ।

मल्लवंशका प्रतापी राजा यक्षमल्ल पनि शैव र वैष्णव धर्म दुवै मान्दथे । उनको पालामा लेखिएको चान्द्रव्याकरणवृत्तिमा उनलाई पशुपतिका भक्त, महेश्वरका अवतार र लक्ष्मीनारायण भनिएको छ ।[१] यसबाट उनी पनि शैव र वैष्णव दुवै धर्म मान्दा रहेछन् भन्ने बुझिन्छ ।

हरिहर सम्प्रदायले पश्चिमी नेपालपट्टि पनि राम्रो प्रभाव पारेको थियो । जुम्लाका राजा पृथ्वीमल्लको १२८० शाक संवत् (वि. सं. १४१५ ) को ताम्रपत्रमा हरिशंकरी यात्राको वर्णन गरिएको छ[२] । अलिपछि यस यात्राबारे विशेष विवरण पाइँदैन । यसको कसरी लोप भयो यो एक विचारणीय कुरा छ ।

हरिहर सम्प्रदायले नेपालमा राम्रो प्रभाव पारेको कुरा सत्रौं अठारौं शताब्दीका अभिलेख पनि प्रकट गर्दछन् । जयहरिसिंह देवको पालाको लेले सत्तलको अभिलेखमा एक 'शिवहरीश्वर लिङ्ग' स्थापित गरिएको कुराको वर्णन गरिएको छ ।[३] नृपेन्द्रमल्लको पालाको पशुपति अभिलेखमा 'शंकरनारायण डोलयात्रा' को वर्णन गरिएको छ ।[४]

लेले सत्तलको अभिलेखको शिवहरीश्वरलिङ्ग शब्दले एउटा महत्त्वपूर्ण कुरातिर हाम्रो ध्यान आकृष्ट गरेको छ । उक्त अभिलेखले यस्तो शिवलिङ्गको संकेत गरेको हुनसक्दछ जसमा विष्णु र शिवको मूर्ति मुखलिङ्ग प्रकारका शिवलिङ्गमा जस्तै उत्कीर्ण भएको छ । यस किसिमका लिङ्ग नेपाल उपत्यकामा कतै कतै देखिन्छन् । शिव तथा विष्णुलाई अभेद रूपमा पूजा गर्ने भक्तहरूको यो सर्वथा नवीन कल्पना हो । भारतमा हरिहर मूर्ति संयुक्त रूपमा बनाइन्थ्यो तर

---

[१]श्री श्री पशुपतिचरणारविन्दार्चनपरायणरिपुराजदैत्यत्रिपुरासुरमानविनिर्जित श्री श्री संसारतारिणीगौरीश्वरश्रीमहेश्वरावतारश्रीलक्ष्मीनारायणश्रीश्रीजययक्षमल्लदेव अनुजश्रीश्रीजयजीवमल्लदेवसहेव विजयराज्ये ।
Le Nepal–Sylvain Levi, vol. II. P. 398

[२]हाथैको छन्दो मग्शिर मास संक्रान्तिका दिन सोमवार तिँहिँ वैश्वानरँ हरिशंकरी यात्रा करि अक्न्या हुँदा तिले कुसे सहित संकल्प घालि सर्वदोषविशुद्ध सर्वबाधा विनिर्मुक्त ताँबा शासन करि देउराज जोइसि पसा कि अक्न्या हुँ ।

[३]अप्रकाशित

[४]अप्रकाशित

शिवलिङ्गको रूपमा हरिहर मूर्ति बनाउने कुरा थाहा भएको छैन ।[१] यस प्रकारले शैव र वैष्णव धर्ममा सामञ्जस्य ल्याउने प्रवृत्ति अत्यन्त रोचक छ। नेपाल माहात्म्य-मा एक प्रसंगमा प्रद्युम्नले 'शिवनारायण लिङ्ग' स्थापना गरेको कुराबताइएको छ।[२] यो शिवनारायणलिङ्ग र शिवहरीश्वर लिङ्गमा समानता रहेको कुरा स्पष्ट छ ।यस विवरणबाट नेपालमा हरिहर सम्प्रदायले प्राप्त गरेको विशेषता प्रकट हुन्छ ।

नेपालमा हरिहर पूजकहरूको सम्प्रदायको रूपमा धेरै महत्त्वपूर्ण स्थान थियो । अभिलेखहरूको विवरण, नेपाल माहात्म्य तथा हिमवत्खण्ड आदिको वक्तव्यबाट नेपालमा हरिहरको एक भिन्नै सम्प्रदायको रूपमा महत्त्वपूर्ण स्थान थियो भन्ने कुरा स्पष्ट हुन्छ । हरिहर सम्प्रदायले आफ्नै नयाँ दर्शन (Philosophy) पनि प्रतिष्ठापित गरेको थियो जसको उच्च आदर्शले नेपाली संस्कृतिको मौलिक विकासमा महत्त्वपूर्ण योगदान गरेको छ । गणदेव-कालिक पशुपति त्यागलटोल अभिलेखमा हरिहर सम्प्रदायको उच्च दर्शन यसरी प्रस्फुटित भएको छः

भिन्ने पुंसां जगति च तथा देवता भक्ति भावे ।
पक्षग्राह भ्रमितमनसां पक्षविच्छित्तिहेतोः ।।
इत्यर्द्धाभ्यां समुपरचितं यन्मुरारीश्वराभ्याम् ।
एकं रूपं शरदिजघनश्यामगौरं तदव्यात् ।।[३]

"संसारका मानिसहरूमा भिन्न भिन्न देवताहरूमा भक्ति हुनाले

---

[१] भारतका हरिहर मूर्तिहरूको लागि द्रष्टव्यः Development of Hindu Iconography- J. N. Banerjee P. 546-8; र Saiva Cults. in Northern India- V. S. Pathak P. 52.

[२] ततोऽतितुष्टो गोविन्दः सपुत्रो मुनिसंयुतः ।
लिङ्गं संस्थापयामास गोपालेश्वरमुत्तमम् ।।
प्रद्युम्नश्चापि सन्तुष्टः पितृ भक्तिसमन्वितः ।
शिवरानायणनाम्ना स्थापयामास यन्ततः ।।
(१२-१, २)

वल्लो श्लोकमा माथिको लिङ्ग शब्द आहार्य छ । तुलनीय–प्रद्युम्नेश्वर मूर्ति; द्रष्टव्य– Saiva cults, in Northern India–V. S. Pathak–P. 52

[३] सं. स. १-८, पृ. १७

उनीहरू पक्षपातमा परेका छन् र यसैले उनीहरू भ्रममा परेका छन् । यस्ता मानिसहरूको पक्षपातपूर्ण विचार हटाउन विष्णु र महादेवले आधा आधा भएर यस प्रकारको जो (संयुक्त) मूर्ति बनाएका छन् शरद् ऋतुको मेघजस्तो कालो र गोरो रंग भएको त्यो मूर्ति रक्षा गरोस् ।"

आर्को श्लोक यस्तो छ:

योऽसौ सर्वत्रिभुवनगुरुः श्रेयसाञ्चाधिवासो ।
यस्मित् बद्धा नियमितफलाः सम्पदः पुण्यभाजाम् ॥
नानारूपं भुवन मखिलं धार्यते येन चेदम् ।
तस्मिन् भक्तिर्न भवति वृथा शुद्धचित्ताशयानां ॥[१]

"जो (हरिहर) तीनै लोकहरूमा सबैभन्दा ठूला र कल्याणका भण्डार छन् , जसको, पुण्यगर्ने मानिसहरुद्वारा अर्पित सम्पत्ति ठीक ठीक फल दिने हुन्छ , अनेक रूप भएको यस संसारलाई जसले धारण गरेको छ , शुद्ध चित्त र आशय ( भाव ) भएका मानिसहरूको हरिहरमा रहेको भक्ति व्यर्थ खेर जांदैन ।"

हरिहर सम्प्रदायको मीठो दर्शन अझ आर्को श्लोकमा यसरी स्पष्टिएको छः ।

पुण्यानि येप्युभयलोकसुखावहानि ।
कुर्वन्ति हि प्रतिदिनं विगताभिमानाः ॥
कृत्वापि तेऽत्र विधिवद्विषयोपभोगम् ।
स्वैः कर्मभिः सुकृतिनो दिवमावसन्ति ।[२]

"जो मानिस अहंकार नगरेर दुवै लोकमा सुख दिने धर्म दिन दिनै गर्दछन् यस्ता धर्मात्मा व्यक्ति यस लोकमा राम्रोसंग सुखभोग गरेर पनि आफूले गरेको धर्मकर्मद्वारा स्वर्गमा स्थान पाउंछन् ।"

उक्त अभिलेखको अन्त्यमा सत्कर्म र असत्कर्मको परिणामबारे यसरी संकेत गरिएको छ:

पुंसां पापकृत मधः सुकृतिनां उद्ध्र्वस्थितिर्धीमताम् ॥[३]

"पापीलाई अधोगति धर्मात्मा बुद्धिमान्लाई ऊर्ध्व गति (स्वर्ग) ।"

---

[१]सं. स. १–८, पृ. १७

[२]सं. स. १-८. पृ. १७

[३]ऐजन—पृ. १८

उक्त अभिलेखको कुराको पुष्टि नेपाल माहात्म्यले पनि गरेको छ। त्यसमा भनिएको छः

"जो विष्णुलाई शिवरूपले र शिवलाई विष्णुरूपले मान्दछ उही वास्तविक वैष्णव र शैव हो।"[१]

"हरि र हरमा जो अधम मानिसहरू भेद गर्दछन् ती पाखण्डी र वेदका विरोधी हुन्।[२]

भारतका प्रख्यात विद्वान् जितेन्द्रनाथ बनर्जी हरिहर मूर्तिको कुनै पूरा कथा (Mythology) छैन भनी लेख्नुहुन्छ[३]। तर नेपालका उल्लिखित अभिलेख, हिमवत्खण्ड र नेपालमाहात्म्यका विवरण बनर्जी महाशयको विचारको पूर्ण विरोध गर्दछन् भन्ने कुरा माथि वर्णन गरिएका कुराबाट स्पष्ट हुन्छ। यति मात्र हैन त्यागलटोल अभिलेखले त प्राचीन समयमैं हरिहर सम्प्रदायले विकसित गरेको दर्शन र कर्मकाण्डको राम्रो परिचय दिइसकेको छ। उक्त त्यागलटोल अभिलेखमैं हरिहरमूर्ति स्थापित गर्ने उद्देश्य माता, पिता तथा आफ्नै पुण्यप्राप्तिको लागि बताइएको छ।[४] यसबाट हरिहर सम्प्रदायको कर्मकाण्ड पक्ष पनि स्पष्टिन्छ। हरिहर सम्प्रदायको कर्मकाण्डको सकेत जयसिंहरामवर्द्धनको प्रधानमन्त्रित्व कालको त्यागलटोल अभिलेखमा र पृथ्वीमल्लको ताम्रपत्रमा पनि भएको छ। त्यागलटोल अभिलेखमा हरिहरलाई "पाप हर्ने' भनिएको छ।[५] पुण्यमल्लको अभिलेखमा हरिशंकरी यात्राको जो

---

[१]यो हरिं हररूपेण हरञ्च हरिरूपिणम्।
यः पश्यति स एव स्यात् वैष्णवः शैव एव च॥ (११-५२)

[२]हरौ हरे च ये भेदं कुर्वन्ति मनुजाधमाः।
पाखण्डिनो वेदवाह्यास्ते वै निरयगामिनः॥ (११-५३)

तुलनीयः
शिवाय विष्णुरूपाय विष्णवे शिवरूपिणे।
हिमवत्खण्ड (४-३३)

[३]Development of Hindu Iconography. P. 475-6

[४]दिवमुपगतयोर्मातापित्रोरात्मनश्च पुण्योपचितये स्वामिवार्त्त इह शंकरनारायण स्वामिनं प्रतिष्ठापितवान्।

[५]पापं मे हरतां सदा हरिहरौ श्रीवत्सगंगाधरौ। Medieval Nepal Vol III. P. 36

वर्णन गरिएको छ[१] त्यसबाट पनि हरिहर सम्प्रदायको कर्मकाण्ड पक्ष स्पष्ट रूपले देखिन्छ र यी विवरणहरूको संयुक्त संकेत हरिहरलाई एक सम्प्रदायको रूपमा संघटित भएको देखाउनु तिर छ। यस कुराको समर्थन अरू विवरणबाट पनि हुन्छ। कुनै पनि सम्प्रदायको आदर्श आफ्ना पूज्य देवतालाई सम्पूर्ण संसारका सृष्टि र प्रलयकर्त्ताको रूपमा मान्ने पनि हुन्छ र त्यसको लागि केही तीर्थहरूको पनि कल्पना गरिएको हुन्छ। गणदेवकालिक पशुपति त्यागलटोल अभिलेखमा हरिहरलाई 'सम्पूर्ण संसारको उत्पत्ति, स्थिति तथा प्रलयका कारण र आदिरहित अनि अन्तरहित्'[२] भनिएको छ। हिमवत्खण्डमा र नेपालमाहात्म्यमा नेपाललाई महत्त्वपूर्ण हरिहरक्षेत्र घोषित गरिएको छ।[३] नेपाललाई हरिहरक्षेत्र भनिएकोले हरिहर सम्प्रदायको मूल स्थान यही भएको स्पष्ट हुन्छ।

नेपालमा हरिहरको मूर्ति जतातते प्रशस्त मात्रामा देखिन्छन्। हुन त हरिहर मूर्ति उपत्यकाभित्र मात्रै प्राप्त हुन्छन् तर त्यति सानो क्षेत्रमा हरिहरका यति मूर्ति पाइन्छन् जसको तुलना हुन सक्दैन। सम्पूर्ण भारतमा हरिहर मूर्ति दुइ चार मात्र पाइन्छन् तर नेपाल उपत्यकाको सीमित क्षेत्रमा सयौं हरिहर मूर्ति देखिन्छन्। हरिहरमूर्ति विशेष गरेर पशुपतिको मन्दिरको वरिपरि र पाटनको प्रख्यात कुम्भेश्वर मन्दिरको वरिपरि विशेष देखिन्छन्।

नेपालको सबैभन्दा पुरानो हरिहर मूर्ति त्यागलटोल अभिलेखमा उल्लिखित भएको छ तर त्यस अभिलेखमाथि हाल देखिने हरिहर मूर्ति गणदेवको पालाको हो जस्तो लाग्दैन बरु त्यसै मूर्तिनेर रहेको धर्ममल्लकोपालाको अभिलेखमा स्तुति गरिएको हरिहरसंग यसको सम्बन्ध रहेको बुझिन्छ। यस मूर्तिको तेजोमण्डल (Halo) मध्यकालीन नेपाली कलापरम्पराको हो भन्ने कुरामा केही शंका गर्नु परोइन। तर अभिलेखमाथि रहेको मूर्तिसंग अभिलेखमा वर्णित मूर्तिको सम्बन्ध देखाउन सकिदैन भने त्यो मूल मूर्ति के भयो भन्ने प्रश्न हाम्रो समक्ष उपस्थित हुन्छ। अनुमानतः त्यहाँको हरिहरमूर्तिमाथि मुसल्मानी आक्रमणको प्रभाव परेको हुनाले त्यहांको मूलमूर्ति हटाई जयसिंहरामको सहयोगले

---

[१]हरिशंकरी यात्राको तुलना शिवनारायणडोलयात्रासंग गर्न सकिन्छ।

[२]सकलभुवनसम्भवस्थितिप्रलयकारिणमनादिनिधनं भगवन्तमिह शंकरनारायणस्वामिनं ··· सं. स. १–८, पृ. १८

[३]हिमवत्खण्ड–४; ३३–४३ –७१–१२

उक्त सन्दर्भहरूमा हरिहरस्तोत्र र हरिहर क्षेत्रको वर्णन गरिएको छ।

त्यसै स्थानमा हरिहरको अर्को मूर्ति प्रतिष्ठापित गरियो र त्यसै अवसरमा लेखिएको अभिलेख हुनाले त्यसमा प्रारम्भमा हरिहरको स्तुति गरिएको हो भन्ने लाग्द छ ।

नेपालमा निर्मित हरिहरमूर्तिको विशेषता पनि छ ।भारतीय हरिहर मूर्तिमा आधा भागमा लामो धर्सो जस्तो हुन्छ जसको सीमाबाहिर न विष्णुको स्वरूप चित्रित न शिवको जसमा कुनै आदर्श रहेको देखिंदैन तर नेपालका हरिहर-मूर्तिमा केवल शिवको त्रिशूल र विष्णुको चक्र दायाँ बायाँ बनाइन्छन् अरू थोक बनाउने द्रविड प्राणायाम यहाँ देखिंदैन । नक्साल नारायण चौर[१] र आर्ट्स ग्यालरीमा सुरक्षित हरिहर मूर्तिमा (चित्र फलक ८ क) यही कुरा स्पष्ट देखिन्छ । हरिहरको मूर्ति बनाउंदा भावुक मूर्तिकारले अनेक नयाँ उद्भावना पनि गरेको देखिन्छ । पशुपतिमन्दिरको दक्षिण भागमा शीतलाको मन्दिरनेर एक हरिहर-मूर्ति रहेको छ जसमा त्रिशूल भएपट्टिको भागमा चन्द्रमा बनाइएको छ । यद्यपि चन्द्रमा शिवजीको विशेष चिन्ह रही आएको थियो तर हरिहरमूर्तिमा शिवजीको भागमा पनि चन्द्रमा बनाइने परम्परा रहेको अरू उदाहरण पाइदैन ।

यसरी अध्ययन गर्दा नेपालमा हरिहर सम्प्रदायको राम्रो उन्नति भएको कुरा स्पष्ट देखिन्छ जो नेपाली संस्कृतिको विशेषताको एक अंग रही आएको छ ।

## शिव, विष्णु र ब्रह्मा (त्रिमूर्ति)

हिन्दू संस्कृति र धर्ममा त्रिदेवको निकै महत्त्व रहेको छ । यसको नेपाली धार्मिक परम्परामा पनि राम्रो स्थान रहेको देखिन्छ । यो परम्परा निकै प्राचीन हो । महाभारतमा पनि त्रिमूर्तिको कल्पना रहेको देखिन्छ ।[२] आभिलेखिक प्रमाण अनुसार विक्रमको तेन्हौं शताब्दीमा त्रिमूर्तिको राम्रो स्थान नेपाली धार्मिक समाज-मा रहेको देखिन्छ । ने. सं. २९५ (वि. सं. १२३२) को भक्तपुर खौमाटोल अभि-लेखमा 'ब्रह्मत्व विष्णुत्व रुद्रत्व' को उल्लेख गरिएको छ ।[३] त्यसमा एक व्यक्तिको मृत्युपछि त्यसको ब्रह्मत्व विष्णुत्व र रुद्रत्व, प्राप्तिको लागि जलद्रोणी बनाइएको कुराको वर्णन गरिएको छ । उक्त विवरणबाट विष्णु, शिव र ब्रह्मा यी तीनै देवताहरूका मिश्रित कल्पना र पूजा तत्कालीन नेपालमा प्रचलित रहेको थाहा

---

[१] चित्रफलक ७ घ.

[२] द्रष्टव्य: शैवमत–डा. यदुवंशी–पृ–६६

[३] Medieval Nepal-III. D. R. Regmi. P. 9

पाइन्छ ।[१] यस किसिमको विचारधाराले तीनै देवतालाई एकै मूर्तिमा संयुक्त गरी त्यसलाई दत्तात्रेय भनी पूजा आजा गर्ने परम्परा चलाएको थियो । भद्गाउँमा दत्तात्रेयको मन्दिर आज पनि प्रख्यात छ र त्यहाँ सबैजना पूजा आजा गर्दछन् तर यो कति पुरानो हो भन्न सकिंदैन ।

## शैव र सौर (शिव र सूर्य)

नेपालमा शैव र सौर सम्प्रदायमा पनि अभेदको कल्पना गरी उक्त दुई सम्प्रदायमा अभेद देखाउने चेष्टा गरिएको देख्दछौं ।

लिच्छविकालमा प्रचलित पशुपति मुद्रामा अनेकमा सूर्य विभिन्न रूपमा बनाइएका छन् जसको विशेष अध्ययन प्रासंगिक रूपमा गरिनेछ । पशुपति मुद्रामा सूर्य बनाइएकोले हामी विचार गर्न सक्दछौं कि लिच्छविकालमैं शिव र सूर्यमा घनिष्ठ सम्बन्ध देखाउने परम्परा चल्न लागेको थियो । विष्णुपुराणमा शिवका आठ स्वरूपमध्ये एक सूर्य भनी वर्णन गरिएको छ । यसबाट पशुपति मुद्राको सूर्य आकृतिको राम्रो र स्पष्ट अध्ययन गर्न सकिन्छ । लिच्छविकालमै बनेका हरगौरी फलकहरूमा माथिल्लो भागमा सूर्यको आकृति (गोलाकार) बनाइएको देखिन्छ । यसको स्पष्ट आभिलेखिक उल्लेख नेपाल सम्वत् ३८१ (वि. सं. १३१८) को भीमदेवको पालाको फर्पिङ् अभिलेखमा मात्र भएको छ जसमा रहेको एक श्लोकमा 'शिवभास्कर' (शिवरूपी सूर्य) को स्तुति गरिएको छ ।[२] यस विवरणबाट विक्रमका चौधौं शताब्दीमा नेपालमा शिव-सूर्यको एक-रूपको उपासना हुन्थ्यो । यस रूपमा शैव तथा सौर सम्प्रदायमा सामञ्जस्यको प्रवृत्ति स्पष्ट देखिन्छ ।

## शैव र शाक्त

प्राचीन कालमा शैव सम्प्रदाय भिन्न थियो, शाक्त सम्प्रदाय भिन्न थियो तर पछि शैव र शाक्त सम्प्रदाय यसरी संयुक्त भए जसलाई फेरि छुट्याउन सकिंदैन । मानदेवको पालामा विजयस्वामिनीले पलाञ्चोकमा भगवतीको स्थापना गरेकी

---

[१] तुलनीयः
एकमूर्तिस्त्रयो देवाः ब्रह्मविष्णुमहेश्वराः ।
हिमवत्खण्ड (१८८–२४)

[२] मोहान्धकार मग्नानां बनाणां (नां) कृतमुद्धरनं (णं) येन तन्नमामि शिव-भास्करम् । Medieval Nepal Vol. III. P. 12

थिइन्[१] । त्यस वेलासम्म शैव र शाक्त सम्प्रदायमा एकता भैसकेको देखिंदैन । तर अंशुवर्माको समयसम्म शैव र शाक्त सम्प्रदायमा एकता भैसकेको देखिन्छ । उनको साँगा अभिलेखमा शिवको पार्वतीसँग संयुक्त भएको रूपमा स्तुति गरिएको छ । [२]लिच्छविकालमा बनेका उमामहेश्वर फलकहरूमध्ये धेरैजसोलाई यसै सन्दर्भमा अध्ययन गरे असंगत होओइन ।

मध्यकालीन नेपालमा शिव-शक्ति सम्प्रदायको विशेष उन्नति भएको देखिन्छ । ने. सं. ३४६ (वि. सं. १२८३) को थ्यौपाटन अभिलेख (जो भगवतीको मूर्तिको पादपीठमा उत्कीर्ण भएको छ) ले शिवशक्ति सम्प्रदायको संकेत गर्दछ । उक्त अभिलेखमा अमृतश्री नामकी महिलाको शिवसायुज्य भएकोले महागौरीको मूर्ति स्थापित गरिएको कुराको उल्लेख गरिएको छ ।[३] वि. सं. १४३६ को इटंबहाल अभिलेखमा पशुपतिको स्तुतिमा उनलाई (पशुपतिलाई) गौरी-पति भनिएको छ ।[४] त्यसै अभिलेखमा जयसिंहरामवर्द्धनलाई मानेश्वरीबाट वर पाएका अनि पशुपतिको स्थापना गर्ने भनी वर्णन गरिएकोछ ।[५] जयसिंहरामका भाइ मदनरामवर्द्धनलाई पनि त्यस अभिलेखमा 'त्रिपुरसुन्दरीबाट वरप्रसाद पाएका, परममाहेश्वर' भनिएको छ ।[६] अभिलेखको उक्त प्रसंगबाट माहेश्वर र पाशुपत सम्प्रदायमा शाक्त प्रभाव परेको ज्ञात हुन्छ । त्यसै ताकका प्रतापी राजा स्थितिमल्ललाई उनको पालामा सारिएको अमरकोशमा पशुपतिको सेवा गर्ने अनि मानेश्वरीबाट वर पाएका भनी वर्णन गरिएको छ ।[७] यी विवरणबाट शिवशक्ति

---

[१]हिमवत्संस्कृति–१.१, पृष्ठ ४

[२]नोली पृष्ठ–५२

[३]अभिलेख संग्रह--भाग–२, पृष्ठ १४; तुलनीय पाशुपत सम्प्रदायको अध्ययन प्रसंगमा 'शिवसायुज्य' प्रकरण ।

[४]नेपालाधिपतिः प्रभुः पशुपतिः भूतेशगौरीपतिः ।
संवासो सुरदीर्घिका भगवती श्री वाग्वती कूलके ॥
Medieval Nepal–III. P. 24

[५]श्री श्री मानेश्वरीवरप्रतिलब्धस्य श्रीमत् श्री श्री पशुपतिसंस्थापितस्य जयसिंह रामवर्द्धनस्य । ऐजन– पृष्ठ--२५

[६]ऐजन

[७]राजाधिराजपरमेश्वरपरमभट्टारक श्री श्रीपशुपति चरणारविन्दसेवितश्री-मानेश्वरीवरलब्धप्रताप श्री श्रीजयस्थितिराजमल्ल देवस्य... ... ... ...।
Catalogue of the Buddhist Sanskrit MSS. in the

सम्प्रदायको राम्रो प्रभाव रहेको देखिन्छ । पछिल्लो मल्लकालमा राजाहरूको विशेष उपाधि 'श्रीमत्पशुपतिचरणकमलधूलि धूसरित शिरोरुहश्रीमन्मानेश्वरीष्टदेवता वरलब्ध' प्रख्यात भएको थियो जो उनीहरुको आग्रह शिवशक्तितिर भएको कुरा स्पष्टयाउँछ ।

## शैव र बौद्ध धर्म

नेपालमा शैव र बौद्ध दुवै धर्म निकै लोकप्रिय भएका थिए। यहाँको धार्मिकसहिष्णुताको परिणामस्वरूप दुवै धर्म पछि गएर मिश्रित भएका कुरा ऐतिहासिक रूपबाट थाहा पाइन्छ । यस सम्प्रदायलाई हामी शिव-बुद्धको नाम दिन सक्दछौं । जावातिर पनि यस सम्प्रदायले जरो गाडेको देखिन्छ तर नेपाल र जावाको कुनै सम्बन्ध स्पष्ट नदेखिएकोले यस विषयमा केही विशेष भन्न सकिंदैन ।

शिव-बुद्ध सम्प्रदाय तत्कालीन राजाहरूको धार्मिक सहिष्णुताको परिणामस्वरूप उत्पन्न भएको कुरा स्पष्ट छ । वंशावलिहरुमा अंशुवर्माभन्दा अघिका अनेक राजाहरुलाई पशुपति र चैत्यको संस्कार गर्ने अथवा केही चढाउने भनी वर्णन गरिएको छ, जसलाई हामी धार्मिक सहिष्णुताको कोटिमा राख्न सक्दछौं । अंशुवर्माको समयदेखि शिव-बुद्ध सम्प्रदाय स्पष्टिन थालेको देखिन्छ । अंशुवर्मा नै शिव-बुद्ध सम्प्रदायका संस्थापक हुन् भन्ने मेरो अनुमान छ । उनले आफ्नो शासनको पहिलो अभिलेख (बुङ्गमती) मा शीर्षभागमा बौद्ध चिन्ह (धर्मचक्र र दुइ हरिण) उत्कीर्ण गराउन लगाएका थिए र अभिलेखभागमा चाहिं आफ्नो पाशुपत उपाधि 'भगवत्पशुपति भट्टारकपादानुगृहीतः' दिइएको छ ।[१] अभिलेख भागमा आर्को रोचक कुरा छ । सातौं पंक्तिमा शुरुको वाक्य भग्न छ र त्यसपछि "...यदा च पुनर्धर्मसङ्कराणि .." भनिएको छ । धर्मसंकर भनेको धर्मको मिश्रण अथवा सामञ्जस्य हुन्छ । यही शब्दको पुष्टि अभिलेखको शीर्षभाग र अंशुवर्माको पाशुपत उपाधिको संयुक्त संकेतले गरेको छ । यदा च पुनर्धर्मसङ्कराणि भनिसकेपछि अलिकति वाक्य भग्न भएको छ अनि "तदा राजकुलं स्वयं प्रविचारो" भनिएको छ जसबाट सांकेतिक रूपमा शैव र बौद्ध धर्मको सामञ्जस्य गर्ने काममा अंशुवर्माले सरकारी स्तरमा प्रस्ताव उठाएको जस्तो बुझिन्छ । यही कुराको आंशिक समर्थन अंशुवर्माकै पालाको भण्डारखालमा सुरक्षित अभिलेखले

university Lib (Cambridge) C. Bendall. PP. 187-188

[१]नोली पृष्ठ—५४

गरेको छ । त्यस अभिलेखमा 'श्रीकलहाभिमानी राजा'लाई बोधिसत्वको रूपमा वर्णन गरी 'सर्वज्ञपद प्राप्त होओस्' भनी लेखिएको छ ।[१] अंशुवर्माको हाँडीगाउँ अभिलेखमा उनको विशेषण 'श्रीकलहाभिमानी' लेखिएको छ । अतः उक्त भण्डारखाल अभिलेखमा बोधिसत्व भनी वर्णन गरिएको र बुद्धत्व प्राप्त होओस् (श्रीकलहाभिमानीलाई) भनिएकोले (सर्वज्ञतामाप्नुयात्) यो अभिलेख शिव-बुद्ध सम्प्रदायको केही व्याख्या गर्न सक्दछ भन्ने बुझिन्छ । पाशुपत सम्प्रदाय मान्ने अंशुवर्मालाई "बुद्धत्व प्राप्त होओस्" भनिएको कुरा विशेष थिए । उनले विचारणीय छ । लिच्छवि राजा नरेन्द्रदेव पनि अंशुवर्मा जस्तै सहिष्णु व्यक्ति बौद्धहरूको आर्यभिक्षु संघलाई आर्थिक सहायता दिएर ठूलो सहायता गरेका थिए[२] । यद्यपि उनी पाशुपत र माहेश्वर सम्प्रदायका अनुयायी थिए । उनी पनि शिव र बुद्धलाई मान्ने वर्ग वा सम्प्रदायको प्रभावमा परेका थिए भन्ने संकेत पाइन्छ । चीनी वृत्तान्त अनुसार उनको कम्मरपेटीमा बुद्धको मूर्ति अङ्कित भएको थियो ।[३] यस विवरणबाट नरेन्द्रदेव शिव-बुद्ध सम्प्रदायका अनुयायी सिद्ध हुन्छन् ।

शिव-बुद्ध सम्प्रदायको इतिहास नरेन्द्रदेवपछि निकै पछिसम्म अस्पष्ट रूपमा रहेको छ । शक संवत् १२७७ (१४१२ वि. सं.) को दुल्लू अभिलेखबाट शैव तथा बौद्ध धर्मलाई अभेद रूपमा मान्ने सम्प्रदायबारे केही ज्ञान हुन्छ । त्यस अभिलेखमा शुरूमा बौद्धमन्त्र 'ॐ मणिपद्मे हूं" लेखिएको छ र यसपछि भर्गको (महादेवको) स्तुति गरिएको छ ।[४] यस्तै पृथ्वीमल्लको १२७८ शक संवत् (१४१३ वि. सं) को अभिलेखमा (कनकपत्र) साक्षीको रूपमा महादेवको साथै बुद्ध धर्म र संघको पनि उल्लेख गरिएकोछ । [५] पृथ्वीमल्लकै आर्को

---

[१] अभिलेख संग्रह-भाग-६ पृ. २१

[२] बौद्धधर्मसम्बन्धी अध्ययन प्रसंगमा यस कुराको विशेष अध्ययन गरिएको छ ।

[३] Journal of the Bihar and Orissa Research Society (Patna); XXII, P. 238-239

[४] इतिहास प्रकाश २-१, पृ. १६०; महादेवको स्तुति निम्न प्रकारको छः
'आलोकस्तिमिरे विपद्विषमणिः पाते करालम्बनं
थाच्ञाकल्पतरुर्जगज्जयरथः पाथेयमन्नं पथि
दुःखव्याधिमहौषधिर्भवभयोद्भ्रान्तप्रयाणासनं
तापे चन्दनकाननं स्थिरसुहृद्भर्गस्सतां बान्धवः ।

[५] हिमवत्संस्कृति अंक १, पृ. ४०

अभिलेखमा प्रारम्भमा बौद्ध मन्त्र ॐ मणिपद्मे हूँ [1] र यसपछि गणेश (शैव सम्प्रदायका एक सदस्य)को स्तुति गरिएको छ।[2] स्तुतिमा एक शब्द 'शिव भावित:' अलि विवेच्य छ। यसलाई पनि दुइ किसिमबाट लिन सकिन्छ। शिव शब्द कल्याणकारी पनि हुन्छ र शिवभावित शब्दले गणेशलाई शिवसंग सम्बद्ध गरेको बुझिन्छ। उक्त श्लोकमा 'विनायक:' शब्द पनि शिव बुद्ध सम्प्रदायकै दृष्टिकोणले राखिएको स्पष्ट छ किनभने यसका दुइ अर्थ हुन्छन्। पहिलो त विनायक भनेको गणेश हुन्छ अनि आर्को अर्थ बुद्ध[3] पनि हुन्छ। यी विवरणबाट स्पष्ट हुन्छ कि पृथ्वीमल्ल शिव-बुद्ध सम्प्रदायका अनुयायी थिए वा त्यसका पृष्ठपोषक थिए।

नेपाल उपत्यकामा पनि यस सम्प्रदायले राम्रो क्षेत्र बनाएको थाहा पाइन्छ। तत्कालीन नेपालको राजनीतिमा राम्रो स्थान भएका जयसिंहमल्ल वर्मा शिव बुद्ध सम्प्रदायका अनुयायी देखिन्छन्। उनले नेपाल संवत् ४५७ (वि. सं. १३९४) मा सारेको (वा लेखेको ?) महीरावण वधोपाख्यान (महारावणवधनाटक)को पुष्पिकामा आफूलाई 'उत्तर विहार वंशमा उत्पन्न भएको र न्होल (न्हाल ?) विहारको प्रधानाङ्ग महापात्र' लेखेका छन्, जसबाट उनी बौद्ध विहारमा बस्ने गर्दथे भन्ने कुरा स्पष्ट हुन्छ तर त्यस किताबकै प्रारम्भमा 'नम: नाट्येश्वराय' भनेर शिवलाई स्तुति गरिएकोले[4] उनी शिव-बुद्ध सम्प्रदाय मान्दथे भन्ने स्पष्ट छ। यसभन्दा अलि पछि भएका राजा राजदेव शिव--बुद्ध सम्प्रदायकै प्रभावमा परेका थिए भन्ने अनुमान गर्न सकिन्छ किनभने सिम्भूको नेपाल संवत् ४९२ (वि. सं. १४२९)को अभिलेखमा उनलाई 'दुई धर्म' मान्ने भनी वर्णन गरिएको

---

[1] चित्रफलक १० क, ख, घ, ङ,

[2] सेवे पद्मोल्लसद्वक्त्रं ।
दातृ (न) शौण्डं विनायकम् ॥
यो दोषश्चतुरो धत्ते ।
प्रजानां शिवभावित: ॥
हिमवत्संस्कृति, १-१. पृ. ४०

[3] षडभिज्ञो दशबलोऽद्वयवादी विनायक: ।
अमरकोश, प्रथमकाण्ड, स्वर्गवर्ग, श्लोक. १४

[4] बृहत्सूचीपत्र (वीर पुस्तकालय), नाटक-पृ. ४४ र Medieval History of Nepal-L. Petech P. 109

छ।[१] दुई धर्म भनी संकेत गरिएको शैव र बौद्धलाई नै हो भन्ने अनुमान गर्न सकिन्छ। नेपाल संवत् ५०२ (वि. सं. १४३९) को इटंवहाल अभिलेखमा शिव--बुद्ध सम्प्रदायको आर्को रूप देखिन्छ। त्यसमा प्रारम्भमा बुद्ध सहित त्रिरत्न र तारालाई नमस्कार गरिएको छ तर अभिलेखको मध्य भागमा शिव र पार्वतीको स्तुति गरिएको छ।[२] अलि पछिका अभिलेखहरूमा त यस सम्प्रदाय सम्बन्धी धेरै कुरा भेटिन्छन्।

नेपाल माहात्म्यले उक्त अभिलेखका विवरणको राम्रो पुष्टि गरेको छ। उक्त ग्रन्थमा एक प्रसंगमा बुद्धले नेपालमा तपस्या गरेको वर्णन गरिएको छ र उनको तपस्याबाट पार्वतीले प्रसन्न भएर भनिन् 'हे बुद्ध ! शिवले बनाएको यस क्षेत्रमा तपाईंले पनि तपस्या गर्नु भयो। अतः यस उत्तम क्षेत्रमा शैवहरू अवश्य नै बौद्ध आचार विचारका हुनेछन्।'[३] अनि पार्वतीले बुद्धलाई वाग्वती र मणिमतिको संगममा शिव धर्म मानेर एक शिवलिंग स्थापित गर्ने आज्ञा दिएको वर्णन पनि गरिएको छ।[४] पार्वतीको आज्ञानुसार बुद्धले कारुणिकेश्वर लिंगको स्थापना गरेको वर्णन पनि त्यहां गरिएको छ। त्यस लिंगको धार्मिक महत्त्वको वर्णन गराएर त्यस लिंगको महत्त्व पनि दर्शाइएको छ।[५]

---

[१] आसीद्धर्मनिधिद्वयैक जलधिर्न्नेपाल भूमण्डले
ख्यातः श्री जयराजदेवनृपतिः तेनैव राज्ञी कृते।
Medieval Nepal- D. R. Regmi P. 21

[२] ऐजन– पृष्ठ २४–२५

[३] शिवेन रचितं क्षेत्रं भवताऽपि तपः कृतम्।
अतः क्षेत्रोत्तमे बुद्ध ! शैवाचारपरायणाः
बौद्धाचारपरा लोकाः भविष्यन्ति न संशयः॥ (१-६२)

[४] वाग्वत्या मणिमत्याश्च संगमे क्षेत्रसत्तमे
शिवधर्मपरो भूत्वा लिगं संस्थापय प्रभो॥
इत्यादि, (१-६३-६७)

[५] भाद्रमासे सिताष्टम्यां लिंगं कारुणिकेश्वरम्।
ये द्रक्ष्यन्ति नराः भक्त्या ते च नै स्वर्गगामिनः।
(१-६५-६६)

स्वयम्भू पुराणमा पनि शिव–बुद्ध सम्प्रदायबारे धेरै कुराको वर्णन गरिएको छ। तर त्यसमा काल्पनिक कुरा विशेष लेखिएका हुनाले त्यसबाट केही ऐतिहासिक महत्त्वका कुरा छान्न गाहारो पर्दछ।

नेपालमा शिव बुद्ध सम्प्रदायले राम्रो इतिहास बनाएको छ। अतः यसका केही स्पष्ट प्रभाव अनेक कुरामा परेको देखिन्छ। पशुपतिमैं वर्षमा एकपल्ट बुद्ध मुकुट पहिराएर छाँया दर्शन गराइन्छ। यसमा स्पष्टतः शिव–बुद्ध सम्प्रदायको प्रभाव देखिन्छ।

यस सम्प्रदायले तत्कालीन धार्मिक कलामा पनि राम्रो प्रभाव पारेको देखिन्छ। नेपालको सर्वैभन्दा पुरानो बौद्ध तीर्थ स्वयम्भू स्तूपको चोकमा अनेक चैत्य तथा बुद्ध मूर्तिहरूमा शैव तत्त्व स्पष्ट रूपमा देखिन्छ। यहाँ पूजामा चढाइएका केही चैत्य ( Votive Chaitya ) शिवलिंगको अर्घ्य जस्तो अर्घ्यमाथि बनाइएका छन् ( चित्र फलक ६ ख )। यस्तै प्रकारले शिवलिंगका मुखलिंगहरूद्वारा प्रभावित एकै प्रस्तर स्तम्भमा उत्कीर्ण चतुर्मुखी बुद्ध मूर्ति पनि यस प्रकरणमा आउंछ ( चित्र फलक ६ क, छ )।

यसरी अध्ययन गर्दा नेपालमा शिव–बुद्ध सम्प्रदायको राम्रो र महत्त्वपूर्ण स्थान भएको देखिन्छ। यस किसिमबाट धार्मिक कटुता कम गर्ने उद्योगको तारीफ नगरी सकिंदैन। यस सम्प्रदायको कारणले नेपालमा विभिन्न धर्म र उनका अनुयायीहरूमा मेल राख्नमा राम्रो सहायता दिएको कुरा स्पष्ट छ।



# शैव सम्प्रदायका आचार्य[1]

शिलालेखहरूमा र हस्तलिखित ग्रन्थका पुष्पिकाहरूमा केही शैव आचार्यहरूको उल्लेख भएको छ, तिनको बारेमा यस प्रसङ्गमा अध्ययन गरिन्छ ।

## आचार्य प्रणर्द्दन[2]

यी आचार्य विक्रम संवत्को सातौं शताब्दीमा भएका थिए । यिनले दुइटा अभिलेख लेखाएका थिए[3] जुनबाट हामी उनको विषयमा केही कुरा जान्न सक्दछौं । प्रथम छत्रचण्डेश्वर अभिलेखबाट यिनको गोत्र कौशिक रहेको बुझिन्छ । कौशिक शब्द लकुलीश पाशुपत सम्प्रदायको कुशिक परम्परासंग सम्बन्ध राखी अर्थ गरेमा राम्रो अर्थ ग्रहण हुनेछ । अभिलेखमा यिनलाई आचार्य र भगवत् विशेषण लगाइएका छन् जुन आधारमा हामी उनको उच्च स्थितिको अनुमान गर्न सक्दछौं ।

अभिलेखका विवरण र उनले स्थापित गरेका मूर्तिहरूले[4] प्रणर्द्दनलाई लकुलीश पाशुपत सम्प्रदायका अनुयायी सिद्ध गरेको कुरा माथि नै अध्ययन

---

[1] यहाँ शैव सम्प्रदाय शब्द विस्तृत रूपमा प्रयुक्त भएको छ ।

[2] भगवानलाल इन्द्राजी तथा बूहलरले यस नामलाइ प्रणर्द्दन मात्र पढेका छन् (Indian Antiquary Vol. IX. P. 174) तर रे. नोलीले यसैलाई प्रणर्द्दनप्रण पढेका छन् (नोली–पृष्ठ–७६) ।

[3] नोली पृष्ठ–७६ तथा ८०

[4] प्रथम छत्रचण्डेश्वर अभिलेखमा अभिलेखसंग सम्बद्ध मूर्ति प्रणर्द्दनले स्थापना गरेको कुराको उल्लेख छैन । यद्यपि अभिलेखको अन्त्यभाग भग्न छ । दोस्रो छत्रचण्डेश्वर अभिलेखमा उनले मूर्ति स्थापना गरेको कुराको स्पष्ट उल्लेख छ । (आचार्यो भगवत्प्रणर्द्दन इह श्रद्धान्वितोऽचीकरत्)–यस विषयमा पछाडि पाशुपत सम्प्रदायको अध्ययन प्रसंगमा लकुलीश पाशुपत प्रकरणमा पनि अध्ययन गरिएको छ ।

गरिसकिएको छ। प्रथम छत्रचण्डेश्वर अभिलेखको विवरणबाट ज्ञात हुन्छ किं छत्रचण्डेश्वरको मन्दिर (?) को व्यवस्था गर्ने काम प्रणर्द्दनकै अधीनमा थियो र त्यसको व्यवस्थाको लागि उनले एक अभिलेखै लेखाएका थिए, उक्त अभिलेखबाट प्रणर्द्दनको आज्ञा भिन्न भिन्न सम्प्रदायका आचार्य र अनुयायीहरू शिरोधार्य गर्दथे भन्ने कुरा थाहा पाइन्छ। त्यस अभिलेखमा प्रणर्द्दनले छत्रचण्डेश्वरको 'कू' गाउँमा कुलो (प्रणालिका) को पुनर्निर्माणको लागि मुण्डश्रृंखलिक पाशुपत सम्प्रदायका आचार्यहरूको परिषद् अन्तर्गत वाराहस्वामि (सम्भवत: एक वैष्णव) तथा सोमसिद्धान्त सम्प्रदायका अनुयायीहरूलाई आज्ञा दिएको कुरा लेखिएको छ।[१] पशुपतिको आँगनमै यिनले एक छत्रचण्डेश्वर मूर्ति स्थापित गरेका थिए जसको पादपीठमा अभिलेख पनि उत्कीर्ण भएको छ।[२]

आचार्य प्रणर्द्दनका दुबै अभिलेखमा संवत् नभएकोले उनको निश्चित तिथि दिन अलि कठिन छ। तर ती अभिलेखहरूमा तात्कालिक शासक जिष्णुगुप्तकोनाम दिइएकोले उनको समय निर्धारित गर्न सजिलो परेकोछ। तात्कालिक सयुक्त शासनमा अन्यतम जिष्णुगुप्तको समय नवीन संवत् (तथाकथित अंसुवर्म संवत्)को ५६ यौं वर्षसम्म (अन्दाजी) मात्र सकिन्छ अर्थात् विक्रम संवत्को ६६२ वर्षसम्म जिष्णुगुप्त थिए त ती अभिलेखमा पनि केवल उनकै नाम दिइ भीमार्जुनदेव (त्यस समयका लिच्छवि शासक)को नाम नदिइएकोले यी अभिलेख वि सं. ६६२–६४ तिरको मान्नमा केही बाधा परोइन। अतः प्रणर्द्दनको समय पनि यस विचारको आधारमा वि. सं. ६६२–६४ तिर पर्न आउँछ।

---

[१]आचार्य भगवत्प्रणर्द्दनप्रणकौशिकेन भगवतश्छत्रचण्डेश्वरस्य कू ग्रामे प्रणालिकायाश्च खण्डस्फुटितसमाधानार्थ मुद्दिश्य मुण्डश्रृंखलिकपाशुपताचार्यपर्षद् वाराहस्वामि उम सोमा–क्रसोमखड्‌कानाञ्च अशीति पिण्डकमानिकानां भूः प्रतिपादिता:। श्री डिल्लीरमण रेग्मीज्यू छत्रचण्डेश्वर अभिलेख छत्रचण्डेश्वरको मन्दिरको पुनरुद्धारको खागि मुण्डश्रृंखलिक पाशुपताचार्यपरिषद्‌लाई भूमि दिइएको कुराको वर्णन गर्दछ भनी लेख्नु हुन्छ। (Ancient Nepal P. 149) तर अभिलेखमा स्पष्ट रूपले "प्रणालिकायाश्च खण्डस्फुटित समाधानार्थमुद्दिश्य" भनिएकोले कुलोको पुनर्निर्माणको लागि भन्ने कुरा सत्य हो भन्ने थाहा पाइन्छ।

[२]नोली पृष्ठ–८०

## आचार्य दक्षिणतिलदूक[१]

लिच्छवि राजा नरेन्द्रदेवको पशुपति अभिलेखबाट आचार्य दक्षिणतिल-दूकको परिचय पाइन्छ ।[२]उक्त अभिलेखमा उक्त नामको अगाडि दानपाशुपत शब्द राखिएकोले यिनी दानपाशुपत सम्प्रदायका आचार्य रहेछन् भन्ने थाहा पाइन्छ । अभिलेखको भग्नावस्था र भ्रष्ट संस्कृत भएकोले यी आचार्यबारे अरू विशेष कुरा भन्न सकिंदैन । अभिलेखमा राजाले यिनको नामोल्लेख गरेकोले यिनको निकै महत्त्व रहेको कुराको अनुमान गर्न सकिन्छ ।[३]

## आचार्य अमृतमित्र

मध्यकालीन नेपालमा अमृतमित्र प्रख्यात शैव आचार्य थिए । उनको नाम स्मरण गराउने एकमात्र प्रमाण नेपाल संवत् २८६ (१२२६ वि. सं.) मा लेखिएको कुलोत्तरतन्त्र हो जसको पुष्पिकामा लेखिएको छः

> यङ्गलदक्षिणटोलकेधिवासिनः
> भट्ट श्री शैवाचार्य अमृतमित्रेण
> वाराणस्यां लिख्यापित[४]

उद्धृत वाक्यबाट अमृतमित्रको थर भट्ट थियो र शैव सम्प्रदायका आचार्य थिए । उनले कुलोत्तरतन्त्र बनारसमा लेखाउन लगाएको कुराले उनको बाराणसीसंग सम्पर्क रहेको देखिन्छ । बनारस शैव धर्मको महत्त्वपूर्ण केन्द्र रही आएकोले अमृतमित्रले त्यताबाट राम्रो प्रेरणा पाएको अनुमान गर्न सकिन्छ । यिनका विषयमा अरू जान्ने कुरा नभएकोले अरू केही भन्न सकिंदैन ।

## आचार्य विजयधरवर्मा

आचार्य अमृतमित्रका समकालिक अर्का शैव आचार्य विजयधरवर्मा थिए । यिनको विषयमा जान्ने एक मात्र प्रमाण नेपाल संवत् २६४ (वि. सं

---

[१]यिनको नाम संस्कृतेत्तर भाषाको छ जसको अर्थ गर्न सकिंदैन । नामको आधारमा यिनलाई किरात मान्न सकिन्छ ?

[२]नोली–पृ. ८७

[३]यस विषयमा पाशुपत उपसम्प्रदाय सम्बन्धी अध्ययनमा प्रासंगिक विवेचन गरिएको छ ।

[४]Medieval Nepal Vol. I., D. R. Regmi. P. 181

१२३१) मा सारिएको पिङ्गलामत (ब्रह्मयामल)हो जसको पुष्पिका वाक्यमा लेखिएको छः

श्रीमन्महाविजकरथ्यां श्रीचन्दनमण्डपरथ्यधिवासिना श्रीशैवाचार्यविजयधरवर्मणा लिखापितं पुस्तकं लेखक पशुपति इत्यादि ।[1] उद्धृत वाक्यबाट विजयधरवर्मा बारे विशेष जान्न सकिंदैन ।

## आचार्य श्रीधर

वीर पुस्तकालयमा सुरक्षित क्रियाकालगुणोत्तर नामको एक हस्तलिखित ग्रन्थको पुष्पिका वाक्य आचार्य श्री धरबारे केही कुरा बताउँछ । त्यसमा श्रीधरबारे लेखिएको छ :

नेपालदेशीय संवत् ३०४ ज्येष्ठ सुदी १३ गुरौ धवलस्रोतपुरे । महासामन्त श्री रत्नदेवराज्ये । मङ्गलं महा श्री । मृक[2]षडन्वयशैवाचार्य श्री श्रीधर राजगुरुणां लिखापितम् ।[3]

उद्धृत विवरणबाट उनी राजगुरु थिए भन्ने थाहा पाइन्छ । अनुमानतः त्यस बेलाका शासक सोमेश्वर देव (ने. सं. २९६-३०१ सम्म अन्दाजी) अथवा गुणकामदेव (ने. सं. ३०७-३१६) का उनी राजगुरु थिए । पुष्पिकाको तिथि अनुसार यिनी वि. सं. १२४१ तिर भएका थिए । लुशियानो पेटेकले धवलस्रोतपुर आधुनिक धुलिखेल हो भनी लेखेका छन्[4] । अतः श्रीधर धुलिखेलतिरका निवासी थिए भन्ने कुरा थाहा पाइन्छ । यिनीबारे अरू कुरा जान्न सकिएको छैन ।

## आचार्य नरेन्द्रपालजीव

देवलदेवीको राज्यकालमा शैव आचार्य नरेन्द्रपालजीव प्रख्यात थिए ।

---

[1] बृहत्सूचीपत्र (वीर. पु.), तन्त्र, पृ २४४

[2] पेतेकले 'त्रिक' पढेका छन् ।

[3] बृहत्सूचीपत्र (वीर पुस्तकालय); तन्त्र, पृ. ९८; र Medieval History of Nepal-L. Petech P. 72 पेतेकले पुस्तकको नाम 'त्रियकल गुणोत्तर' दिएका छन् जो अशुद्ध छ ।

[4] ऐजन

नेपाल संवत् ४७२ मा लेखिएको नित्यान्हिकतिलकको पुष्पिकाबाट यिनको नाम थाहा पाइन्छ ।[१] त्यसमा नरेन्द्रपाललाई "श्री श्री भवभूतेश्वर शैवाचार्य" विशेषण दिइएको छ जसमा भवभूतेश्वर नाम किन दिइएको हो ठीक ठीक भन्न सकिँदैन । उक्त नाम उनको इष्ट देवता वा सम्प्रदाय सम्बन्धी देवताको हुनु पनि सम्भव छ ।

## आचार्य जोतिराम[२]

नेपाल संवत् ५२५ ( १४६२ वि. सं. ) मा सारिएको गुह्यकालीतन्त्रको पुष्पिकामा लेखिएको छ :

श्रीभवभूतेश्वर चत्तुठ्ञ्ज शिवाचार्जजोतिरामे -- .. ।[३]

शिवाचार्ज शब्द शैवाचार्य शब्दको अपभ्रष्ट रूप हो । अतः जोतिराम एक शैवाचार्य रहेछन् भन्ने थाहा पाइन्छ । उद्धृत वाक्यमा अलि बिचारणीय कुरा "भवभूतेश्वर चत्तुठ्ञ्ज" शब्द छ । भवभूतेश्वर शब्द माथि वर्णित नरेन्द्र-पालजीवको नामको विशेषणको रूपमा देखिएको छ । अतः सम्भव छ यस शब्दले तात्कालिक शैवहरूको केही विशेषता संकेतित गरेको हो । यद्यपि हाल त्यसबारे केही भन्न सकिएको छैन । चत्तुठ्ञ्ज शब्दको अर्थ गर्न सकिएको छैन जसको सम्बन्ध भवभूतेश्वरसंग भएको देखिन्छ ।

यसरी अध्ययन गर्दा नेपालको इतिहासमा सात जना मात्र शैव आचार्य-हरू थाहा पाइन्छन् । नेपाल जस्तो महत्त्वपूर्ण शैव क्षेत्रमा शैव आचार्यहरू प्रशस्त भए होलान् तर उनीहरूबारे जान्ने साधन हामीसंग छैन ।

## शैव आचार्यहरूको क्रियाशीलता

शैव आचार्यहरूको कार्यकलाप आदि बारे कम कुरा थाहा पाइन्छन् । सर्वप्रथम हामी प्रथम छत्रचण्डेश्वर अभिलेखबाट मुण्डश्रृङ्खलिक पाशुपत सम्प्रदायका आचार्यहरूको एक परिषद्को उल्लेख भएको पाउँछौं ।[४] यस प्रमाणको आधारमा

[१] बृहत्सूचीपत्र ( वीर पुस्तकालय ); तन्त्र, पृ. ११६

[२] शुद्ध नाम ज्योतिराम हुनुपर्दछ ।

[३] बृहत्सूचीपत्र ( वीर पुस्तकालय ) तन्त्र, पृ. १०४

[४] आचार्य भगवत्प्रणर्दनप्रणकौशिकेन भगवतश्छत्रचण्डेश्वरस्य कू ग्रामे प्रणालि-कायाश्च खण्डस्फुटित समाधानार्थमुद्दिश्य मुण्डश्रृङ्खलिकपाशुपताचार्यपर्षदि वाराहस्वामि उमसोमा-क्रसोम खड्कानां च अशीति पिण्डक मानिकानां भूः प्रतिपादिताः । नोली-पृष्ठ—७६

यो अनुमान गर्न सकिन्छ कि त्यस समयमा मुण्डश्रृङ्खलिक पाशुपत उपसम्प्रदायका आचार्यहरूले आफ्नो सुविधाको लागि आफ्नो एक संगठन गरेका थिए। हामीलाई उक्त परिषद्को उद्देश्यबारे विशेष कुरा त थाहा छैन तैपनि अभिलेखको प्रसङ्गको आधारमा त्यो परिषद् शैव देवता सम्बन्धी काममा प्रवृत्त हुन्थ्यो भन्ने थाहा पाइन्छ। उक्त अभिलेखमा मुण्डश्रृङ्खलिकपाशुपताचार्यपर्षद् छत्रचण्डेश्वरको खेतमा कुलोको पुनर्निर्माण गर्ने काममा सम्बद्ध गराइएको छ जसबाट त्यस बेलाका शैव आचार्यहरूको क्रियाशीलताबारे केही कुरा थाहा पाइन्छ। यस्तै कुरा द्वितीय शिवदेवको लगनटोल अभिलेखबाट पनि थाहा पाइन्छ जसमा शिवदेवेश्वरको देखरेख आदिको लागि वश पाशुपत सम्प्रदायका आचार्यहरू नियुक्त भएको कुरा लेखिएको छ।[१] उक्त विवरणबाट तात्कालिक राजा शैव आचार्यहरूलाई शैव मन्दिर सम्बन्धी काम दिएर उनीहरूलाई आर्थिक सहायता गर्दथे भन्ने संकेत पाइन्छ।

आचार्य प्रणर्द्दनको उदाहरण लिच्छविकालिक शैव आचार्यहरूको राम्रो क्रियाशीलताको परिचय दिन्छ। उनले दुइटा छत्रचण्डेश्वरमूर्ति स्थापना गरी धार्मिक क्षेत्रमा प्रभावशाली काम गरेको थाहा पाइन्छ।

शैव आचार्यहरूको साहित्यिक अथवा दार्शनिक गतिविधि त्यति स्पष्ट छैन। आचार्य प्रणर्द्दनले दुवै छत्रचण्डेश्वर अभिलेखमा दार्शनिक श्लोक लेखाएकाले उनी शैव दर्शनका ज्ञाता रहेछन् भन्ने अनुमान गर्न सकिन्छ। मध्यकालिक शैव आचार्यहरूले मौलिक काम केही नगरे पनि धार्मिक ग्रन्थहरू सार्न लगाई आंशिक रूपमा पुस्तक लेखन कार्यमा सहायता दिन्थे भन्ने थाहा पाइन्छ।

---

[१] स्वकारित श्रीशिवदेवेश्वरं भट्टारकन्निमित्तीकृत्य तद्देवकुलखण्डस्फुटितसंस्कार-कारणाय वशपाशुपताचार्येभ्यः प्रतिपादित:—नोली पृष्ठ-१०७

# शैव मन्दिर

नेपालका शैव मन्दिरको इतिहास निकै पुरानो छ । मानदेव प्रथमको पालादेखि शैव मन्दिरबारे आभिलेखिक प्रमाण पाइन्छन् । मानदेवकी रानी क्षेम-सुन्दरीको लाजिम्पाट शिवलिङ्ग अभिलेखमा एक शिव मन्दिरको उल्लेख भएको छ[१] । मानदेवकी आर्की रानी गुणवतीको टुकुचा शिवलिङ्ग अभिलेखमा एक शिव मन्दिर बनाएको कुराको उल्लेख गरिएको छ[२] ।

पशुपतिको मन्दिरको स्थापना धेरै पहिले भैसकेको भए र पनि त्यसको ऐतिहासिक प्रमाण ४५५ संवत्को अभिलेखबाट पाइन्छ । यो अभिलेख हो भस्मेश्वरको जसमा 'भगवत: पशुपतेः क्षेत्रे'[३] उल्लिखित भएको छ । उक्त प्रमाणले आनुषङ्गिक रूपबाट पशुपतिको मन्दिरको संकेत गरेको छ ।

मन्दिरको एक अंगको उल्लेख आभीरीको अभिलेखबाट थाहा पाइन्छ । त्यस अभिलेखमा अनुपरमेश्वर महादेवको मन्दिरको वप्र (पर्खाल) को उल्लेख भएको छ ।[४] त्यस विवरण अनुसार मन्दिरको चारैतिर पर्खाल बनाइन्थ्यो भन्ने थाहा पाइन्छ ।

अंशुवर्माको सुन्धारा पाटनको अभिलेखमा माटिन् गाउँको मन्दिरको केही वर्णन पाइन्छ । त्यस वर्णनमा भत्केको मन्दिरका ईंट, ढोका, कपाट, वातायन र काठको उल्लेख गरिएको छ ।[५] उक्त विवरणबाट त्यस कालका मन्दिर काठ र ईंटको बनाइन्थ्यो भन्ने थाहा पाइन्छ ।

यसै समयमा भारत-यात्रा गर्ने र नेपालमा अलि दिन बसेका चीनी राजदूत वांग हिउन शोको यात्रा विवरणबाट पनि तत्कालीन मन्दिरहरूको

---

[१] इतिहास संशोधनको प्रमाण प्रमेय-पृ २४६

[२] ऐजन पृ. २६४

[३] अ. सं. भाग-१, पृ. २६

[४] नोली पृष्ठ-२३

[५] माटिन्देवकुलमर्धविनिपतितेष्टकापङ्क्तिविवरप्रविष्टनकुलकुलाकुलितमूषिकासार्ध-दूरविघटितनिरवशेषद्वारकवाटवातायनादिजीर्णदारुसघातम्-नोली पृष्ठ-५३.

स्वरूपको केही परिचय पाइन्छ। उनले लेखेका छन् "मन्दिरहरूमा क्रमतः अनेक खण्ड बनाइन्छन् जुनलाई बादलको मुकुटको रूपमा सोच्न सकिन्छ"।[१] उक्त विवरण तत्कालीन मन्दिर पगोडा शैलीका भएको प्रमाण प्रस्तुत गर्दछ। यसबाट स्पष्ट हुन्छ कि सातौं शताब्दीसम्म नेपालमा पगोडा शैलीको विकास भैसकेको थियो।

मल्लकालको एक अभिलेखमा कुम्भेश्वर मन्दिरको तात्कालिक स्वरूपको वर्णन गरिएको छ। स्थितिमल्लको पालाको कुम्भेश्वर शिलालेखमा लेखिएको छः

"बीस ढोका भएको रमाइलो मन्दिर बनाएर, पर्खालहरूले घेरिएको भुईंलाई चोखो पारेर, सुन र रत्नले जडिएको चारमुखे कोश (कोठा) बनाएर, अनि सखाना घण्टाले राम्रो पारिएको (यस्तो मन्दिरमा) ईश्वरलाई ल्याई स्थापना गरेर, त्यहाँ सुनको कलश र ध्वजा गाडे।"[२]

यस्ता आभिलेखिक प्रमाण सांकेतिक विवरण मात्र प्रस्तुत गर्दछन् जो तत्कालीन मन्दिरहरूको समग्र चित्र प्रस्तुत गर्न सक्दैनन्। यस विषयमा हाम्रो ज्ञान अति अल्प छ। तर आजका मन्दिरमा र पुराना मन्दिरका स्वरूपमा विशेष परिवर्तन भएको छैन भन्ने अनुमान गर्न सकिन्छ किनभने पुरानो समयदेखि नै मन्दिरहरू भत्किएपछि तिनीहरूको पुनर्निर्माण गर्दा पुरानै स्वरूप रहन दिने परम्परा विशेष चलेको देखिन्छ। यस रूपमा विचार गर्ने हो भने लिच्छविकालमा मन्दिर र आजका मन्दिरको बाह्य स्वरूपमा कुनै मौलिक परिवर्तन भएको छैन।

यस लेखको अन्त्यमा प्रस्तुत गरिएको शैवमन्दिरको सूचीमा राखिएका अनेक मन्दिरहरू आज त्यसै नाममा छैनन्। सम्भवतः ती भत्किएर पुरिइसकेका छन्। तैपनि अनेक मन्दिरहरू उही नाममा अथवा परिवर्तित नामको रूपमा

---

[१] Temples are disposed there in numerous storeys which one would take for crown of clouds—Missions of wang Fragment II and III (drawn from Fa-Youen-tchou-lin) Chapter XVI. P. 15 b

[२] कृत्वा देवालयं रम्यं प्रसादं विंशतोरणम्।
विशोधीकृत्य भूमिं वप्राकारैः परिवेष्टितम्॥
कृत्वा चातुर्मुखं कोशं सुवर्णरत्नमण्डितम्
किं किणीसुविचित्रं च ढौकित्वा परमेश्वरम्।
... ... ... ... ... ... ... ...
समारोपितवांस्तत्र सुवर्णकलशध्वजम्॥
Medieval Nepal III P. 34

आज पनि विद्यमान छन् यद्यपि समय समयमा तिनको स्वरूपमा बराबर परिवर्तन र परिवर्द्धन भएको पनि हुन सक्दछ। सं. ४५५ को भस्मेश्वर अभिलेखमा उल्लिखित पशुपति आज विद्यमान विख्यात पशुपति मन्दिरै हो भन्ने कुरामा कुनै शंका छैन। पशुपतिको मन्दिरको प्राचीन स्वरूप कस्तो थियो भन्ने कुरा थाहा पाउन सकिएको छैन तर आज विद्यमान मन्दिर[१] प्राचीन स्वरूप कै आदर्श अनुसार रहेको मान्न सकिन्छ।

प्राचीन कालका शिलालेखमा उल्लिखित अनेक शैव मन्दिर लुप्त भैसकेका पनि छन् जस्तो भुवनेश्वर, मानेश्वर, भद्रेश्वर, चूडिकेश्वर, लडित-महेश्वर आदि तर इन्द्रेश्वर चाहिं आज पनि यसै नामले प्रख्यात भई आजसम्म विद्यमान छ। यस मन्दिरको उल्लेख शक संवत् ६६३ को पनौती इन्द्रेश्वरको ताम्रपत्रमा भएको छ।[२]

## मन्दिरहरूको सञ्चालन

प्राचीन समयदेखि नै शैव मन्दिरहरूको सञ्चालन गर्नाको लागि विशेष ध्यान दिइन्थ्यो। मन्दिर भत्के बिग्रेमा पुनर्निर्माण गर्ने र त्यसमा पूजा आजा गर्नाको लागि मन्दिर बनाउने व्यक्ति पहिले नै गुठी अथवा पाञ्चालीको संघटन गर्दथ्यो।

प्राचीन अभिलेखहरूमा प्रायः मन्दिरको स्थापना गरेको अवसरमा लेखिएको शिलालेखमैं मन्दिरको पुनर्निर्माण आदिको लागि जग्गा आदि दिइ गुठी बनाइन्थ्यो अथवा जग्गा मात्र दिइ पहिले नै प्रबन्ध गरिन्थ्यो।[३]

---

[१] हेर्नुहोस् चित्र फलक १ क

[२] श्री श्री श्री इन्द्रेश्वरप्रीतये कांस तांम्र लोहपात्र ” ” इन्द्रेश्वरप्रीतिरस्तु–पुरातत्त्व पत्रसंग्रह भाग २, पृ. १६०

[३] क. खण्डफुट्टप्रतिसंस्कारनिमित्तञ्च स्वजन गोष्ठिकाधीनं कृत्वा यूपग्रामस्य दक्षिणेन संवैद्ये क्षेत्रं दत्तं भूमिः ४०० पिण्डकं च मा ४०० -भस्मेश्वर अभिलेख, अ. सं. भाग-१, पृ. २६

ख. आनुपरमेश्वरसंज्ञिताय ··· खण्डफुट्टप्रतिसंस्कारार्थं च पुष्करोपेतनदीक्षेत्रखण्ड-द्वयंदत्तमिति–पशुपति आमीरी अभिलेख–नोली पृष्ठ-२३

ग. श्री शिवदेवेश्वरं भट्टारकन्निमित्तीकृत्य तद्देव कुलखण्डस्फुटितसंस्कारकारणाय ···प्रतिपादितः (अयं ग्रामः) द्वितीय- शिवदेवको लगनटोल अभिलेख नोली पृष्ठ-१०७

यसबाट मन्दिरहरूको सुरक्षाको लागि कत्तिको विशेष ध्यान दिइन्थ्यो भन्ने कुरा स्पष्ट थाहा पाइन्छ ।

मन्दिरको स्थापना गर्ने मानिस मन्दिरको आवश्यक खर्च वर्चको लागि गाउँ अथवा जग्गाको दान गरी तिनलाई आर्थिक रूपबाट सन्तुलित गराउँथ्यो ।[१]

नरेन्द्रदेवको अनन्तलिंगेश्वर अभिलेखमा मन्दिरको (अनन्तलिंगेश्वरको मन्दिरको) आँगन सफा गर्ने कामको लागि व्यवस्था गरिएको कुरा लेखिएको छ ।[२] यसबाट मन्दिरको सफाइको राम्रो व्यवस्था हुन्थ्यो भन्ने थाहा पाइन्छ ।

अरू धर्म र सम्प्रदायका मन्दिरहरूको जस्तै शैव मन्दिरको आर्को आयको स्रोत राजकीय सहायता पनि थियो ।अशुवर्माले अनेक शैव मन्दिरहरूलाई आर्थिक सहायता दिएका थिए ।[३]

नरेन्द्रदेवको अनन्तलिगेश्वर अभिलेखमा देवताका नोकर तथा दासीहरूको उल्लेख गरिएको छ ।[४] यस विवरणबाट मन्दिरहरूमा त्यस सम्बन्धी काम गर्नको लागि भरियाहरूको राम्रो व्यवस्था हुन्थ्यो भन्ने थाहा पाइन्छ । ती मानिसहरूलाई ज्यालाको रूपमा धान अथवा जग्गा दिइने चलन थियो ।

नरेन्द्रदेवको अनन्तलिगेश्वर अभिलेखमा "कुलपति" शब्दको उल्लेख गरिएको छ[५] र लोकपालस्वामि (आधुनिक अनन्तलिगेश्वरको प्राचीन नाम)

---

[१]क. प्रभुकेश्वरस्य क्षेत्राभिलेख्य यथा प्रङ् प्रिङ् प्रदेशे–रत्नसंघको पशुपति अभिलेख–नोली पृष्ठ १३.

ख.भगवतच्छत्रचण्डेश्वरस्य कूग्रामे–नोली पृष्ठ–७६ (छत्रचण्डेश्वर अभिलेख)

ग.भगवतो नाथेश्वरस्य प्रतिष्ठानं यद् तद् अस्यैव प्रतिपादनाय विज्ञापिते…सलञ्जू ग्रामेषु–जिष्णु + ध्रुवदेवको आदीश्वर अभिलेख–नोली पृष्ठ ७०,

[२]अंगन शोधनार्थं तण्डुलमानिका—अ सं. भाग १. पृ. ३५

[३]पशुपतेः पु ७ प २ रामेश्वरस्य पु ३ प १ मानेश्वरस्य पु ३ प १ वाग्वतीपारदेवस्य पु ३ प १ धारामानेश्वरस्य पु ३ प १ पर्वतेश्वरदेवस्य पु ३ प १ कैलाशेस्वरस्य पु ३ प १ श्री भट्टारकपादानां पु ७ प १ हाँडीगाउँ अभि. नो. पृ. ५०

[४]क. देवभृत्यानान्दशानामेकतो भुक्तिका धान्यमानिका १४०

ख. दासीनां विंशतीनामेकतो मानिका शतत्रयम्—अ. स. भाग १, पृ. ३७

[५]प्रसादश्चिरस्थितये शिलापट्टकाभिलेख्येन प्रसादीकृतोऽत्र च मर्यादा कुलपतिना देया–अ. सं भाग १, पृ. ३६

को व्यवस्था आदि र अरू धार्मिक कार्यहरूको उल्लेख गरिएको छ। उक्त शब्द (कुलपति) धार्मिक कार्यहरूसंग सम्बद्ध अर्ध सरकारी पद रहेको हुनु धेरै सम्भव छ। अभिलेखको प्रसंग अनुसार कुलपति धार्मिक कार्यहरूको सञ्चालन कार्यमा निर्देशन गर्दथ्यो भन्ने थाहा पाइन्छ। नरेन्द्रदेव पशुपतिका परमभक्त थिए। यसैले उनले शैव मन्दिरहरूको सञ्चालन गर्नको लागि उक्त कुलपति पद बनाएको हुन सक्दछ। त्यसै शिलालेखमा कुलपतिलाई पारिश्रमिक पनि दिइने कुराको संकेत गरिएको छ किनभने त्यसमा "१३० मानिका कुलपतिको" भनी लेखिएको छ।[१]

अभिलेखहरूबाट मन्दिरहरूको रेखदेख गर्ने काम पाञ्चाली र तत्सम्बद्ध पाञ्चालिकहरू गर्दथे भन्ने थाहा पाइन्छ। केही शिलालेखहरूमा देवताको नाम-संग सम्बद्ध पाञ्चाली र पाञ्चालिकहरूको उल्लेख गरिएको छ।[२] कहिले मन्दिरको देखरेख गर्ने काम गोष्ठीको अधीनमा पनि रहन्थ्यो।[३] तर यी पाञ्चाली र गोष्ठी-हरू कुन कुन रूपमा मन्दिरसम्बन्धी काम गर्दथे भन्ने कुरा शिलालेखहरूमा स्पष्ट उल्लेख पाइँदैन।

मध्यकालमा शिव सम्बन्धी अभिलेखमा मन्दिरको प्रशासन सम्बन्धी विशेष कुरा उल्लेख भएको पाइंदैन। यस बेलाका शिलालेखमा शिवकी पूजा आदि गरिएको र केही दान गरिएको वर्णन पाइन्छ।

## मन्दिर–स्थापनाको उद्देश्य

अभिलेखहरूमा मन्दिर बनाउने कार्यको उद्देश्यबारे पनि उल्लेख भएकोपाइन्छ।

शिव मन्दिर स्थापित गर्ने र त्यसमा शिवलिङ्ग स्थापित गर्ने उद्देश्य अनेक अभिलेखहरूमा भिन्न भिन्न रूपमा पाइन्छ। जस्तो गुणवतीले मन्दिरमा शिवलिङ्गको स्थापना 'पिताको शुभ इच्छा' को लागि गरेकी थिइन्। अनि लिङ्ग स्थापना गरेर प्राप्त भएको पुण्यधन अक्षय्य होओस् भनी वर्णन गरिएको पनि

[१] यत्पूरणीय मानिकाशतं त्रिशदुत्तर तत्कुलपतेः अ. सं. भाग १, ३७

[२] क. तेषामधः शाला पाञ्चालिकेभ्यः–अंशुवर्माको पशुपति अभिलेख— नोली पृष्ठ ५६,

ख. भगवतश्चूडिकेश्वरस्य पांचालिकैः- शिवदेव प्रथमको लेले अभिलेख–अ. सं. भाग–१ पृ. ३१

ग भृङ्गारेश्वरपांचा(लिकैः)—शिवदेव द्वितीयको भृङ्गारेश्वर अभिलेख- नोली पृष्ठ–१०६

[३] पंचभ्यः... खण्डफुट्टप्रतिसंस्कारनिमित्तं च प्रतिहार भ्रुवसंघवार्त्तेन... स्वजन-गोष्ठिकाधीनं कृत्वा यूपग्रामस्य—अ. सं. भाग– १, पृ. २६

छ[१]।यस्तै उदाहरण क्षेमसुन्दरीको शिवलिङ्गाभिलेखबाट पनि थाहा पाइन्छ। उनको लाजिम्पाट शिवलिङ्ग अभिलेखमा भनिएको छ "धर्मकर्म मात्र काम भएकी क्षेमसुन्दरीले ठूलो राम्रो र बलियो भवन (मन्दिर) बनाएर त्यसमा प्रमुख ईशान लिङ्ग भक्तिले स्थापना गरिन्।"[२] जिष्णुगुप्त र ध्रुवदेवको आदीश्वर अभिलेखबाट थाहा पाइन्छ कि राजपुत्र जनार्दनवर्माले आफ्ना पिता जिष्णु वर्मा, माता वत्स-देवी र भीमवर्मा आदि भाइहरूको स्वर्गप्राप्तिको लागि नाघेश्वर (आधुनिक आदेश्वर–आदीश्वर) को मन्दिर बनाएका थिए।[३] द्वितीय शिवदेवले पनि आफ्ना माता पिताको तथा आफ्नो पुण्यवृद्धिको लागि शिवदेवेश्वर मन्दिर बनाएका थिए।[४] ने. सं. १०७ को पाटन धार्यँबु अभिलेखबाट थाहा पाइन्छ कि कसैले (अभिलेखमा कर्त्ताको नाम दिइएको छैन) आफना आमा बाबु, गुरु र भक्तहरूको स्वर्ग र मोक्षको लागि ललितेश महादेवको मन्दिर बनाएका थिए।[५] स्थितिमल्लको पालाको कुम्भेश्वर अभिलेखमा पनि यस्तै कुराको वर्णन गरिएको छ। त्यस अभिलेखमा भनिएको छ कि जयभीम नामका व्यक्तिले आफ्नी बिरामी पत्नीको नाममा (उनी ठीक भएपछि?) कुम्भेश्वर मन्दिरको जीर्णोद्धार गराउने प्रतिज्ञा गरेका थिए।[६] जयभीमकी पत्नी महाशीला मरिन् तर उनले आफ्नो प्रतिज्ञा पूरा गरे।

---

[१]भक्त्या स्थापितं लिङ्गङ्गुणवत्या
शुभेच्छया शैवन्देवालयस्थस्य पितु: किन्नरवर्मण:
लिङ्ग संस्थाप्य यत्पुण्य घनश्चाक्षय्यमास्त्विति–
इतिहास संशोधनको प्रमाण प्रमेय–पृ. २६४

[२]संचिन्त्य क्षेमसुन्दर्यनुपमगुणधीर्धर्मकार्यैककार्या श्रीमत्संस्थानरूपम्भवनमिह दृढं कारयित्वानुरूपम् ऐशानं लिङ्गमग्र्यं विधिवदनुपमं स्थापयामास भक्त्या– इतिहास संशोधनको प्रमाण प्रमेय–पृ. २४६

[३]विदितम्भवतु भवतां राजपुत्रनन्दनवर्मणा स्वपितू राजपुत्र जिष्णुवर्मणो मातुर्वत्स-देव्या भ्रातृनां(णां)च श्रीभीमवर्मप्रभृतीनां स्वर्लोकसुखोपभोगपरम्परा–नोली पृ-७०

[४]मातापित्रोरात्मनश्चविपुलपुण्योपचयहेतोरस्माभि: स्वकारित शिवदेवेश्वरं भट्टार-कमिमित्तीकृत्य — नोली पृष्ठ–१०७

[५]श्रीमाणिग्वलके सुरालयकृतच्छ्रीवरीपात्मन: पित्रोर्वन्द (न्द्य) गुरोश्च भक्तजगतां स्वर्गापवर्गाप्तये–श्र. सं. भाग ६, पृ. २४

[६]तस्यांगना महाशीलाऽनन्तलक्ष्मीति विश्रुता।

अरू मन्दिर जस्तै शैव मन्दिर पुरानो समयदेखि अहिलेसम्म समाजलाई ठूलो प्रेरणा दिने केन्द्रको रूपमा रही आएको छ । मन्दिर नै वास्तुकला र मूर्तिकलाका प्रमुख केन्द्र थिए र नेपालको कलालाई क्रमागत र पारम्परिक रूप दिनमा पनि यसैको प्रमुख स्थान रही आएको छ ।



पीड़िता ज्वररोगेन मुमूर्च्छ शयने च सा ॥
तां जीवयितुं प्राज्ञोऽसौ जयभीमो विचक्षणः ।
कुम्भेश्वरालयं कर्त्तुं प्रतिज्ञा कृतवांस्ततः ॥
संरक्षिता तथाप्येवं नीता स्वर्गे शिवेन सा ।
स्वां वाचं प्रतिरक्षार्थं करोति स्म शिवालयम् ।
Medieval Nepal III. P. 34

# शिलालेखबाट ज्ञात शैव मन्दिरहरूको सूची

| क्रम संख्या | मन्दिरको नाम | अभिलेख | तिथि | राजाको नाम | सन्दर्भ |
|---|---|---|---|---|---|
| १ | पशुपति | भस्मेश्वर (पशुपति) | ४५५ संवत् | × | अ. सं. १. पृ. २६ |
| २ | भद्रेश्वर | ऐजन | ऐजन | × | ऐजन |
| ३ | नाथेश्वर | ऐजन | ऐजन | × | ऐजन |
| ४ | स्थितेश्वर | ऐजन | ऐजन | × | ऐजन |
| ५ | रतीश्वर | ऐजन | ऐजन | × | ऐजन |
| ६ | शुभेश्वर | ऐजन | ऐजन | × | ऐजन |
| ७ | अनुपरमेश्वर | पशुपति | ४६२ संवत् | × | नोली पृ. २३ |
| ८ | विजयेश्वर | पशुपति | ४२७ संवत् | मानदेव | अ स. १, पृ. २४ |
| ९ | पश्चिमचन्द्रेश्वर | बनेपा | × | शिवदेव | नोली पृ. ४४–४५ |
| १० | दक्षिणेश्वर | ऐन | × | ऐजन | ऐजन |
| ११ | विश्वेश्वर | जलेले | ५२६ सवत् | ऐजन | अ स. १, पृ. ३० |
| १२ | चूडिकेश्वर | ऐजन | ऐजन | ऐजन | ऐजन पृ. ३१ |
| १३ | रामेश्वर | हांडीगाउँ | ३२ सवत् | अंशुवर्मा | नोली पृ. ५० |
| १४ | मानेश्वर | ऐजन | ऐजन | ऐजन | ऐजन |
| १५ | धारामानेश्वर | ऐजन | ऐजन | ऐजन | ऐजन |

| | | | | | |
|---|---|---|---|---|---|
| १६ | पवतेश्वर | ऐजन | ऐजन | ऐजन | ऐजन |
| १७ | कैलासेश्वर | हाडी गाउँ | ३२ संवत् | अंशुवर्मा | नोली पृष्ठ–५० |
| १८ | शूरभोगेश्वर | ग्यौपाटन | ३६ संवत् | ऐजन | नोली पृष्ठ–५६ |
| १९ | लडितमहेश्वर | ऐजन | ऐजन | ऐजन | ऐजन |
| २० | दक्षिणेश्वर | ऐजन | ऐजन | ऐजन | ऐजन |
| २१ | नाथेश्वर | फस्कु | × | ध्रुवदेव + जिष्णुगुप्त | नोली पृष्ठ- ७० |
| २२ | शिवगल | यँगाहिटी लगन | ६६ संवत् | नरेन्द्रदेव | नोली पृष्ठ-८८–८६ |
| २३ | भुवनेश्वर | ऐजन | ऐजन | ऐजन | ऐजन |
| २४ | शिवदेवेश्वर | लगनटोल | ११६ संवत् | शिवदेव | नोली पृष्ठ- १०७ |
| २५ | भृङ्गारेश्वर | सोनागुठी | १२५ संवत् | ऐजन | नोली पृष्ठ–१०६ |
| २६ | चन्द्रे श्वर | सीतापाइला | १६४ संवत् | × | नोली पृ. १३७ |
| २७ | इन्द्रे श्वर | पनौती | ६६३ शक संवत् | × | पुरातत्व पत्र संग्रह |
| २८ | ललितेश | पाटन धायँबु | १०७ ने. सं. | गुणकामदेव | २, पृ. १६० |
| २९ | यूथेश्वर | फर्पिङ् | ५२७ ने. सं. | धर्ममल्ल | अ. सं. ६, पृ. २४ |
| ३० | धनेश्वर | पाटन | ५१२ ने. सं. | स्थितिमल्ल | रेग्मी ३, पृ. ४२ |
| ३१ | कुम्भेश्वर | ऐजन | ऐजन | ऐजन | ऐजन पृ. ३४ |
| ३२ | मणिकेश्वर | पाटन | ५६५ ने. सं. | ज्योतिर्मल्ल | ऐजन |
| | | | | | ऐजन पृ. ५२ |

# शैवहरूको धार्मिक कार्य

## क्रिया

पोखरी, जलद्रोणी, मन्दिर तथा मठहरूको निर्माण र मूर्ति (सम्बद्ध देवताको) को स्थापना गर्नु आगम अनुसार क्रिया अन्तर्गत आउंछ। यो क्रिया सिद्धान्त शैव सिद्धान्त सम्प्रदायको लोकप्रिय स्वरूप रही आएको देखिन्छ।[१] नेपालका पाशुपतहरू पनि शैव सिद्धान्तको क्रिया गर्दथे भन्ने कुरा थाहा पाइन्छ।[२]

नेपालमा मानदेवको पालाका अभिलेखले क्रियाको लोकप्रियता देखाएका छन्। मानदेवका दुइ शैव रानीहरूले क्रियाको सम्पादन गरेका थिए।

---

[१] Saiva Cults in Northern India-V. S. Pathak. P. 43

[२]जयस्थितिमल्लको पशुपति अभिलेखबाट यो कुरा थाहा पाइन्छ। त्यस अभिलेखमा राजाको पाशुपत उपाधि दिइएको छ तर उनी शैव सिद्धान्त सम्प्रदायको क्रिया सम्पादित गरिरहेका देखिन्छन्। शैवसिद्धान्तको यस विशेषताको प्रवेश एक वैष्णव सम्प्रदाय पाञ्चरात्रमा पनि भएको थाहा पाइन्छ (Introduction to the Pan charatra and the Ahirbudhnya Samhita-F. Otto Shrader. P. 22)। यही कुरा हामी मानदेवको विषयमा पनि देख्दछौं। उनको केलटोल अभिलेखमा 'जनताको सुखको इच्छा गरेर पानी ल्याएर धार्मिक क्रिया' गरिएको कुराको वर्णन गरिएको छ (तेनेदं श्रुतिधर्मशास्त्रविहितां धर्मक्रियाङ्कुर्वता लोकानां सुखकाम्यया सुविमलस्पानीय-मागाय्य-पूर्णिमा, पूर्णाङ्क ६ पृ. २) उक्त विवरणमा शैव सिद्धान्तकै विशेष शब्द "क्रिया" को उल्लेख गरिएको छ। यस्तै कुरा हामी संवत् २०७ को हनुमान ढोका अभिलेखबाट थाहा पाउंछौं। उक्त अभिलेख पत्थरको पानी राख्ने भांडोमा लेखिएको छ। त्यसमा 'भक्त्या विष्णो समुद्दिश्यः " दत्तं अमृतवर्मणा' लेखिएको छ (अ. सं. भाग-५ पृ. १२)। यो क्रिया पनि शैवसिद्धान्तको पाञ्चरात्रमाथि परेको प्रभाव स्पष्ट गर्दछ।

क्षेमसुन्दरीले लाजिम्पाटमा र गुणवतीले टुकुचामा शिवलिङ्ग स्थापित गरी त्यसैको जलहरीमा अभिलेख लेखाएका थिए।[१] मानदेवकी छोरी विजयवतीले पनि पशुपतिमा सूर्यघाटमा शिवलिङ्ग स्थापित गरेकी थिइन्।[२] अभिलेखमा विजयवतीलाई 'पुण्य क्रियाको काममा मात्र चाख लिने' भनेर शैवशिद्धान्त सम्प्रदायको क्रिया सम्पादित गरिएको कुरा स्पष्ट देखाइएको छ। त्यसै बेलामा जयलम्भ[३] रत्नसंघ,[४] प्रभुसंघ[५]ले शिवलिङ्ग स्थापित गरी अभिलेख कुँदाएका थिए जसबाट उनीहरूले पनि क्रियाको सम्पादन गरेको कुरा थाहा पाइन्छ। मानदेवका नाति भारविले जलद्रोणी अथवा धारा बनाई राखेको संवत् ४७२ (वि. सं. ६०७) को हांडीगाउँ अभिलेखलाई पनि क्रियाकै संकेतक मान्न सकिन्छ। उक्त अभिलेखमा भारविले 'मीठो, चीसो र शुद्ध पानी (ल्याउने) कीर्ति गरे' भनी वर्णन गरिएको छ।[६] शक संवत् ५०३ तिर चौपाटन जयवागीश्वरी मन्दिरनेरको

---

[१]क. संचिन्त्य क्षेमसुन्दर्य्यनुपम गुणधीर्धर्मकार्यैककार्या
श्री मत्संस्थानरूपम्भवनमिह इदं कारयित्वानुरूपम्।
ऐशानं लिङ्गमग्र्यं विधिवदनुपमं स्थापयामास भक्त्या
इतिहास संशोधनको प्रमाण प्रमेय, पृ. २४६

ख. भक्त्या स्थापितं लिङ्गं गुणवत्या शुभेच्छया।
शैवन्देवालयस्थस्य पितुः किन्नवरर्मणः ॥
लिङ्गं संस्थाप्य यत्पुण्य धनञ्चाक्षय्य मास्त्विति।
ऐजन-पृ. २६४

[२]तीव्रप्रसादजलधौतमनः कलङ्का।
पुण्यक्रियापरिचर्यैकरसानुरक्ता ॥
लिङ्गन्तदत्र विजयेश्वरमन्वयाय ॥
सातिष्ठिपज्जनमनो नयनाभिरामम् ॥
अ. सं. भाग- १. पृ. २४

[३]नोली पृष्ठ- ११

[४]ऐजन पृष्ठ- ६

[५]नोली पृष्ठ- १३; यसमा शुरुको भग्न श्लोकमा रत्नसंघको पनि उल्लेख गरिएको छ। अतः रत्नसंघ र प्रभुसंघले संयुक्त रूपमा शिवलिंग स्थापना गरेको अन्दाज गर्न सकिन्छ।

[६] सुस्वादुशीतलविशुद्धजलाभिरामा कीर्तिः कृतेयमिह भारविना (णा) न [वीना]
अ, सं भाग-१. पृ.२८

धारोको पुनर्निर्माण गराइ त्यस अवसरमा अभिलेख लेखाउन लगाएका थिए।[१] पशुपतिनेर उक्त धारो रहेकोले रूपधर्माको उक्त कार्यलाई शैवसिद्धान्त सम्प्रदायको क्रिया अन्तर्गत मान्न सकिन्छ।

नेपाल (उपत्यका) मा धारो र जलद्रोणी बनाउने काम निकै लोकप्रिय थियो। आज पाटन, काठमाण्डू, भदगाउँ र कीर्तिपुरमा जताततै पुराना धारा र जलद्रोणीहरू देखिन्छन्। हुन त जलद्रोणी राख्ने काम बौद्धहरूमा पनि प्रचलित भएको कुरा केही प्रमाणले प्रमाणित गरेका छन्। टेबहालमा एक जलद्रोणीमा एक बौद्ध अभिलेख कुँदिएको छ।[२] बौद्धहरूले पनि शैव सिद्धान्तको परम्परा ग्रहण गरेको मान्नु पर्दछ।

जयस्थितिमल्लको पशुपति चौपाटनको अभिलेखबाट प्रणालिका (धारो)को निर्माणको उद्देश्य र त्यस अवसरमा गरिने कर्मकाण्डको परिचय पाइन्छ। उक्त अभिलेख अनुसार जयस्थितिमल्लले मृत पत्नी राजल्लदेवीको नामबाट धारोको पुनर्निर्माण गरेका थिए।[३] अभिलेख अनुसार धारोको पुनर्निर्माणको अवसरमा एक धार्मिक उत्सव गरिएको थियो। त्यस अवसरमा जलयज्ञ गरेर पाँच प्रकारका रेशमी वस्त्रले युक्त भाँडाहरूद्वारा ठूलो उत्सव गराएर धारोको प्रतिष्ठापन गरिएको

---

[१] अंशुवर्मा एक ऐतिहासिक अध्ययन—जगदीशचन्द्र रेग्मी—पृ. ३.

[२]. कूपञ्जलद्रवणिकञ्च शुभाय पित्रोः।
शाक्यो यतिर्विहितवान प्रियपालनामा ॥
नोली—पृ. ८५

[३] राजल्लदेव्यास्त्रिदिवं गताया-
स्तस्याः सुधापान समृद्धयेस्या
नाम्नाऽकरोत् श्रीस्थितिराजमल्लः
प्रणालिकां हेममयीं सुदीनाम्
महाप्रयत्नेन जलं सुदूराद्
भगीरथो गाङ्गमिवेशमूर्द्धनः
आनीय चाष्टागगुणैरूपेताम्
सुदुर्ल्लभां दिव्यजलप्रवाहाम्
जीर्णां भग्नां दिव्यस्वर्णशोधिता पूर्बजैरियम्।
पुनः संस्थाप्य बिधिवद् श्री जयस्थितिभूभुजा ॥
तस्याः देव्याः समुद्देशात् क्रियतेस्म प्रणालिका।
सं. स. १—८, पृ. ४७—४८

थियो ।[१] त्यस धार्मिक कार्यबाट प्राप्त पुण्य स्थितिमल्लले मृता रानी राजल्लदेवीको स्वर्गप्राप्तिको लागि अर्पित गरिदिएका थिए ।[२]

## कारणपूजा

लिच्छविकालका अनेक शैव अभिलेखहरूमा कारणपूजाको उल्लेख भएको पाइन्छ । यसको अर्थ विद्वान्हरूले भिन्न भिन्न रूपमा गरेका छन् । भगवानलाल इन्द्राजी तथा बूहलरले कारणपूजाको अर्थ प्रासंगिक पूजा अथवा नैमित्तिक पूजाको रूपमा लिन्छन् र यसलाई विना प्रमाण शुक्लपक्ष र उत्सवको ऋतुसंग सम्बद्ध गर्दछन् ।[३] यसै गरी राधा गोविन्द बसाक यसलाई उत्सवको दिन र अरू दिनमा (वा अवसरमा) गरिने पूजाको रूपमा लिनु हुन्छ ।[४]

हालसालै डा. हितनारायण झाज्यूले पनि यसबारे आफ्नो विचार व्यक्त गर्नु भएको छ । उहाँ लेख्नुहुन्छः

"तर वास्तवमा हेतु र कारण शब्दहरूको अर्थ तान्त्रिक साहित्यमा अमृतरूपा सुरा हो"[५]

तान्त्रिक प्रमाणको आधारमा झाज्यूले कारण पूजालाई सुरा पूजा सिद्ध गर्नु भएको छ । वास्तवमा कारणपूजाको वास्तविक अर्थ गर्न तान्त्रिक ग्रन्थको सहायता लिने आवश्यकता कतै पनि देखिदैन, तात्कालिक शिलालेखहरूकै राम्रो अध्ययन गरेमा त्यसको ठीक र उचित अर्थ गर्न सकिन्छ ।

नरेन्द्रदेवको गहिरीधारा पाटनको अभिलेखमा कारणपूजाको उल्लेख यस रूपमा भएको छः

वर्षवर्धनवर्षाकालवादित्रजपकादिका (प्रकारिका ?) कारणपूजा कर्त्तव्या ।[६]

---

[१] जलयागपुरस्सरम् ।
पञ्चपट्टयुतैः पात्रैः कारयित्वा महोत्सवम् ।
प्रतिष्ठा च कृता तस्या महासम्भारविस्तरा ॥
सं. स. १–८ पृ ४७

[२] अनेन पुण्येन च देवलोके ।
राजल्लदेवी सुचिरं स्थितास्तु ॥

[३] Indian Antiquary. vol. IX. P. 163

[४] Histoy of North Eastern India–P. 268

[५] गोरखापत्र, श्रावण शनिवार १६ गते, २०२२, पृ. ५

[६] नोली– पृष्ठ– ६५

जसको अर्थ यस्तो हुनुपर्दछ: वर्षवर्धन; वर्षाकालमा बजाइने बाजाहरू (को प्रयोग गरी) को साथ कारणपूजा गरिनु पर्दछ।

अभिलेखको उक्त विवरणबाट कारणपूजा मन्दिर अथवा मन्दिरमा प्रस्थापित मूर्तिको वर्षवन्धन (जन्मोत्सव ?) को अवसरमा प्रतिवर्ष गरिने पूजाको आर्को नाम हो भन्ने अन्दाजी गर्न सकिन्छ। एक प्रकारले कारणपूजालाई निमित्त पूजा अन्तर्गत पनि मान्न सकिन्छ किनभने यो पनि कुनै कारण (निमित्त) ले नै गरिन्थ्यो तर अभिलेखहरूमा त्यसको लागि स्पष्टतः विशेष शब्द प्रयुक्त भएको देखिएकोले यसलाई नैमित्तिक या निमित्तपूजा भन्नु भन्दा कारणपूजा भन्नु नै उचित लाग्ने छ।

कारणपूजालाई सुरापूजा मान्न अर्को बाधा पनि छ। यसको उल्लेख शैव देवताको पूजा प्रसंगमा मात्र हैन वैष्णव देवताहरूको पूजा आदिको वर्णनमा पनि यसको उल्लेख पाइन्छ। वसन्तदेवको पालाको खपिंछेको अभिलेखमा वैशम्पायन (व्यास) को कारण पूजा गर्ने कुराको उल्लेख भएको छ।[१] जिष्णुगुप्त र ध्रुवदेवको केवलपुर अभिलेखमा नारायणको कारणपूजाको उल्लेख भएको छ।[२] उक्त विवरणबाट कारणपूजा वैष्णव धर्ममा पनि लोकप्रिय भएको देखिएकोले यसको अर्थ पनि दुवैतिर मिल्ने गर्नु आवश्यक छ। शैव देवताको प्रकरणमा मात्र कारणपूजाको उल्लेख भएको भए झाज्यूको मत मान्ने केही बाटो पाइन्थ्यो तर त्यसको वैष्णव सम्प्रदायमा पनि प्रयोग देखिएकोले कारणपूजा सुरापूजा हुन सम्भव छैन भन्ने निश्चित छ। वैष्णव धर्ममा सुरालाई धार्मिक महत्त्व दिइएको कुरा आजसम्म ज्ञात भएको छैन। यसैले कारणपूजाको अर्थ मन्दिर अथवा मूर्तिको स्थापनको दिनमा प्रतिवर्ष गरिने पूजा हो भन्ने कुरा स्पष्ट हुन्छ।[३]

## शैव जात्रा

नेपालमा शैवधर्म सम्बन्धी अनेक जात्रा चल्दछन्। प्रायः प्रत्येक शिवमन्दिरमा वर्षेनी जात्रा चल्दछन् तर ती सबै जात्राहरूको विषयमा अध्ययन गर्नु असम्भव त छैन कष्टसाध्य अवश्य छ तर तिनीहरूको प्राचीनता कतिसम्म

---

[१] अ. सं. भाग -१ पृ. २५

[२] नोली पृष्ठ–७१

[३] पछाडि लकुलीश पाशुपत सम्प्रदाय सम्बन्धी अध्ययनमा कारणपूजाको प्रासंगिक विवेचन अध्येतव्य छ।

छ थाहा पाउन सकिंदैन । यहाँ आभिलेखिक प्रमाणको आधारमा ज्ञात शैव जात्राहरूको संक्षिप्त विवरण प्रस्तुत गरिंदै छ ।

## कैलासकूट जात्रा र द्वारोद्घाटन जात्रा

शिवदेव प्रथमको खोपासी अभिलेखले बताएको कैलासकूट र द्वारोद्घाटन यात्रा[१] नेपालका आजसम्म ज्ञात जात्राहरूमा सर्वप्राचीन ज्ञात हुन्छन् । तर ती जात्राहरूको परिचय दिन सकिंदैन । अभिलेखमैं त्यसको राम्रो वर्णन गरिएको छैन । कैलासकूट यात्रालाई पशुपतिनेर रहेको थुम्को कैलाससंग मिलाएर बुझ्न सकिन्छ भन्ने अनुमान छ । आजसम्म कैलासमा प्रतिवर्ष बाला चतुर्दशीको दिन "सद्मी" (सद्बीज) छर्ने जात्रा हुन्छ । सद्मी जात्रा कैलासकूटमा हुने भएकोले कैलासकूट यात्रा यसैलाई भनिएको हो भन्ने अनुमान सत्यको सन्निकट हुन सक्दछ । हिमवत्खण्ड अन्तर्गत मृगस्थली माहात्म्यमा पनि सद्बीज छर्ने कुराको वर्णन गरिएको छ[२] जसलाई कैलासकूट र सद्मी जात्राको आर्को नाम मान्नु पर्दछ । उक्त अभिलेखमा द्वारोद्घाटन यात्राको वर्णन गरिएको छ तर यसको राम्रो परिचय दिन सकिएको छैन ।

## पशुपति जात्रा

द्वितीय शिवदेवको मुलखु बलम्बुको अभिलेखमा पशुपति यात्राको वर्णन गरिएको छ । अभिलेखमा त्यसको प्रसंगमा शिवदेवले आज्ञा गरेका छन् ।

> "मेरो पुण्यप्राप्तिको लागि प्रतिवर्ष पशुपति भगवान्लाई राम्रो छाता चढाउनु अनि त्यसलाई उद्देश्य गरेर रमाइलो जात्रा पनि गर्नु ।"[३]

उक्त विवरणबाट पशुपतिलाई प्रतिवर्ष छाता चढाइन्थ्यो र त्यस अवसरमा राम्रो यात्रा पनि आयोजित हुन्थ्यो भन्ने थाहा पाइन्छ । पशुपति कुन चाहिं देवता वा मन्दिरलाई भनिएको हो यसै भन्न सकिंदैन । श्रौपाटनका पशुपतिलाई मान्ने

---

[१] नोली पृष्ठ-४१

[२] मृगस्थलीं गिरिं भ्राम्य व्रीहिं विक्षेपयेत् कृती ।
सुवर्णरतिकातुल्यं व्रीहिमेकं च यत्फलम् ॥ इत्यादि

[३] भगवत्पशुपतिभट्टारकस्य प्रतिवर्षमस्मत्पुण्याधिगमनिमित्तं शोभनच्छत्रारोपणा करणीया तमुद्दिश्य शोभनयात्रापि करणीया-नोली पृ. १०५

छो भने त्यस सम्बन्धी जात्राको वर्णन बलम्बु भेकको अभिलेखमा किन गरिएको छ ? यस किसिमको र यस नामको कुनै विशेष जात्रा आजकल आयोजित हुँदैन । अतः यसको परिचय दिन असमर्थ भएका छौं। सम्भवतः यो जात्रा पशुपति क्षेत्रतिरै मनाइन्थ्यो ।

शिवदेवले यस जात्राको लागि बलम्बु भेकमा (?) केही जग्गा दिएका थिए ।[१] उक्त जात्रामा पहिलो काम पशुपतिलाई छाता चढाउँथे अनि जात्रा गर्दथे भन्ने विवरणबाट छाताको विशेष महत्त्व भएको थाहा पाइन्छ । छाता राजच्छत्रको प्रतीक हो । पशुपतिलाई राजालाई जस्तै 'भट्टारक' भनिन्थ्यो । यसबाट पनि राजछत्रको कुरा मिल्न आउँछ । शिवधर्म शास्त्रमा पनि महादेवलाई छाता चढाउने कार्यको महत्त्वको वर्णन गरिएको छ ।[२] छत्रसंग सम्बद्ध गरिने छत्र-चण्डेश्वर पनि यस्तै छाता चढाउनाले नै त्यस नामले प्रख्यात भएको अनुमान गर्न सकिन्छ ।

पशुपति यात्रा नामको एक जात्रा निकै पछिसम्म चलेको थाहा पाइन्छ । मध्य मल्लकालीन मल्ल राजा जगज्जयमल्लले लेखेको "अभिनवचन्द्रोदय" नाटकमा पशुपति यात्राको उल्लेख गरिएको छ ।[३] यो कुनचाहिं पशुपति यात्रा हो छुट्याउन गाहारो छ तर नामको आधारमा यसलाई मुलखु अभिलेखको यात्रासंग जोड्न सकिन्छ ।

मिश्र शैव सम्प्रदाय अन्तर्गत हरिशंकरी यात्रा पश्चिमी नेपालमा चल्दथ्यो भन्ने कुरा पृथ्वीमल्लको अभिलेखबाट थाहा पाइन्छ जसको राम्रो परिभाषा र परिचय दिन सकिदैन ।[४]

## नेपालका शैव तीर्थ

नेपाल एक शैव क्षेत्र भएकोले यहाँ अनेक शैव तीर्थ पनि बनेका थिए । स्कन्दपुराण अन्तर्गत हिमवत्खण्ड र नेपालमाहात्म्यमा असंख्य शैव तीर्थहरूको

---

[१]तदुपयुक्तः एष्टम् अपि प्रत्यायजातम् एतैर्विभज्य स्वयमुप भोक्तव्यमेष च ग्रामः ।

[२]शरच्चन्द्रांशुविमलं मुक्तादामोपशोभितम् ।
मणिदण्डमयं छत्रं दद्याद्वा कांचनान्वितम् ॥
(५-१६८)

[३]पिंगलजटाभास्वरस्य देवाधिदेवस्य श्री ३ पशुपतिभट्टारकस्य यात्राप्रसंगेन दिगन्त-वासिनो बिबुधवेदान्तिनः तपस्विनः समागताः ।

[४]यस विषयमा पछाडि हरिहर सम्प्रदायको वर्णन प्रसंगमा केही लेखिएको छ ।

उल्लेख गरी तिनको महत्त्वको वर्णन गरिएको छ । ती किताबका आधारमा नेपालका शैवतीर्थहरूको अलग्गै अध्ययन गर्नु आवश्यक छ ।

## गोकर्ण तीर्थ

नेपाल उपत्यकामा पूर्वी भेकमा गोकर्णेश्वर महादेवको मन्दिर प्रख्यात छ । यसको प्राचीनता धेरै रहेको ज्ञात हुन्छ । वराहपुराणमा गोकर्णेश्वरको माहात्म्यको वर्णन गरिएको छ । त्यस वर्णनमा पूरा अध्यायमैं नेपालको धार्मिक कुराको वर्णन गरिएको छ[१]। अतः गोकर्णेश्वर यहींकै हुन भन्ने कुरामा कुनै शङ्का छैन । शक्तिसङ्गमतन्त्रमा पनि गोकर्णतीर्थको वर्णन गरिएको छ ।[२] एक प्रख्यात तीर्थ भएकोले बंगाली राजा धर्मपाल यहाँ तीर्थयात्रा गर्न आएका थिए ।

## जलेश्वर

वराहपुराणमा गोकर्णेश्वर तीर्थको साथ साथै जलेश्वरको माहात्म्यको पनि वर्णन गरिएको छ । यसको समता नेपाल तराइमा रहेको प्रख्यात जलेश्वरसंग स्थापित गर्न सकिन्छ । नेपालमा जलेश्वर महादेवको मूर्ति मौलिक मान्यता अनुसार बनाइन्थ्यो । पशुपतिको उत्तर ढोका अगाडि एक प्रस्तर देवमूर्ति प्रतिष्ठापित छ जसमा तीन गोडा बनाइएको छ । यस मूर्तिलाई जलेश्वर महादेव भनी शिवभक्तहरू जल चढाउँछन् । यो उदाहरण पनि नेपालमा जलेश्वर तीर्थ रहेको कुराको आंशिक समर्थन गर्दछ ।

यसरी हेर्दा नेपाल एक धार्मिक क्षेत्रको रूपमा प्रख्यात भएको कुरा स्पष्ट देखिन्छ । यसैले वायुपुराणमा पनि 'नेपालपीठ' भनी वर्णन गरिएको देखिन्छ ।[३]

---

[१]वराहपुराण, अध्याय–२१५

[२]शक्तिसङ्गमतन्त्र–३–७; पुनः द्रष्टव्य- Geography of Ancient and Medieval India- D. C. Sircar- P. 99, 109

[३]पौड्रवर्धननेपालपीठं नयनयोर्युगे ।
पीठम्पूर्णगिरिन्नाम ललाटे समदृश्यत ॥
अ. ४२, श्लोक–७६

# गोरक्षनाथ अथवा नाथ सम्प्रदाय

नेपाल नाथ सम्प्रदायको महत्त्वपूर्ण केन्द्र रहेको कुरा धेरै स्रोतहरूबाट थाहा पाइन्छ । यस सम्प्रदायलाई हामी शैव सम्प्रदायको एक मार्ग मान्न सक्दछौं । यसैले नेपालको शैव सम्प्रदायको अध्ययनमा यसको संक्षिप्त अध्ययन प्रस्तुत गरिन्छ ।

कतिपय विद्वान्हरूले नाथ सम्प्रदायलाई ईस्वी संवत्को नवौं शताब्दीतिर उत्पन्न भएको मानेका छन् तर यस सम्प्रदायको स्थापन - तिथि किटेर भन्न गाहारो छ तर विक्रम संवत्को छैठौं शताब्दीमा नेपालमा यस सम्प्रदायबारे केही संकेत पाइएकोले यसको स्थापन तिथिबारे मतपरिवर्तन गर्नु पर्ने देखिन्छ ।

शक संवत् ४५५ (वि. सं. ५९०) को भस्मेश्वर अभिलेखमा "नाथेश्वर" को उल्लेख गरिएको छ ।[१] यसपछि फेरि शक संवत् ४९६ (वि. सं ६०४) को रामदेवको पालाको पशुपति मृगस्थली शिवलिङ्गाभिलेखमा पनि "नाथेश्वर" को उल्लेख गरिएको छ ।[२] ध्रुवदेव र जिष्णुगुप्तको पालाको आदीश्वर अभिलेखमा पनि "नाथेश्वर" को उल्लेख भएको छ ।[३] नाथ सम्प्रदायका गोरक्ष र मत्स्येन्द्रका नाममा र त्यसका अनुयायीहरूमा पनि नाथ शब्द जोड्ने परम्परा रहेकोले माथि उद्धृत अभिलेखका विवरण नाथ सम्प्रदायको लोकप्रियताको संकेत गर्दछन् ।[४]

---

[१]अ. स. भाग- १., पृ. २६

[२]नोली पृष्ठ– २४

[३]नोली पृष्ठ– ७०

[४]नाथ सम्प्रदायसम्बन्धी सबैभन्दा पुराना अभिलेख यिनै हुन । भारतमा नाथ सम्प्रदायसम्बन्धी अभिलेख प्राचीन र मध्यकालमा लेखाइएको आजसम्म पाइएको छैन । यस कुराबाट नेपाल नाथ सम्प्रदायको महत्त्वपूर्ण स्थान रहेको बुझिन्छ ।

नरेन्द्रदेवको पालामा लेखिएको नामसंगीतिको पुष्पिकामा भएको छ।[१] यस प्रसंगमा श्री बाबुराम आचार्यज्यूले लेख्नु भएको छ "यस लेखाइबाट यो काष्ठ-मण्डप बौद्धहरूको एक बिहार बनिरहेको देखिन्छ।"[२] आचार्यज्यूको उक्त कथनमा कुनै सत्यता छैन भन्ने स्पष्ट छ किनभने उहाँले 'श्रीकाष्ठमण्डपे' शब्दलाई बौद्ध ग्रन्थ नामसंगीति शब्दसंग सम्बद्ध गरिदिनु भएको छ। वास्तवमा उक्त ग्रन्थ त काष्ठमण्डप (टोल) अन्तर्गत 'केलाछंछे' मा लेखिएको थियो। यसैले "श्रीकाष्ठमण्डपे केलाछंछे" स्पष्ट लेखिएको छ। केवल काष्ठमण्डप लेखिएको भए आचार्यज्यूको कथन स्पष्ट हुने थियो। यस विवेचनबाट काष्ठ-मण्डप बौद्ध सिद्ध नभए पनि यो नाथ सम्प्रदायसंग सम्बद्ध भएको मान्ने कुनै प्रमाण हामीसंग छैन। तर नाथ तीर्थावलीको कथनलाई मान्यता दिने हो भने काष्ठमण्डपलाई नाथ सम्प्रदायसंग सम्बद्ध गर्नु पर्दछ।

श्री बाबुराम आचार्यज्यूले काष्ठमण्डपलाई बौद्ध सिद्ध गर्ने अर्को प्रमाण प्रस्तुत गर्नु भएको छ। उहाँ लेख्नुहुन्छ: "ने. सं. ४०३ (इ सं. १२८३) मा लेखिएका शतसाहस्रिका प्रज्ञापारमितामा पनि काष्ठमण्डप शब्द एक बौद्ध विहारका रूपमा देखाइएको छ।"[३] आचार्यज्यूको यस कथनमा त झन् आपत्तिजनक कुरा परेको छ। उहाँले आफ्नो सिद्धान्त "श्रीनेपालमण्डलकाष्ठ-मण्डपनामाधिवासिन उपासकनारायणेन लिखितम" मा आधारित गर्नु भएको

---

न शक्नुवन्ति ते यातुं यज्ञसम्पादनं विना ॥
प्रत्यब्दं श्रावणे मासि दैवी वाणी भवेदिति ।
प्रस्तुता यज्ञरचना ? पुनः शब्दो भवेदिति ॥
यज्ञद्रव्याण्याहृतानि प्रायः किञ्चिदपेक्षते ।
तत्रैवं वर्त्तते वृत्तं यज्ञवार्ताऽतिदूरतः ॥
अद्यापि देवतास्तत्र वर्तन्ते यज्ञहेतवे ।
अमुष्मै तीर्थराजाय नमस्कारा भवन्तु मे ॥

सं. स. १–६, (योगी नरहरिनाथ,) पृ. २–३. उद्धृत श्लोकमा मन्दिरको वर्णन गरिएकोले यसको सम्बन्ध आधुनिक काष्ठमण्डपसंग जोड्ने कुरा अनुमित हुन्छ।

[१] Journal of the Bihar and Orissa Research Society. XXIII, P. 39.

[२] नेपाली–२०२० (साउन, भदौ र असोज) पृ. २५.

[३] नेपाली, २०२० साउन, भदौ र असोज; पृ. २५

छ तर हामीले माथि विचार गरे झैं यस प्रमाणमा पनि बौद्धग्रन्थका लेखक काष्ठमण्डपमै होइन, त्यसको हाराहारी बसेका ज्ञात हुन्छन् । यस विचारको पुष्टि नेपाल संवत् ४५४ (वि. सं. १३९१) को काष्ठमण्डपको अभिलेखले[१] गरेको छ । त्यस अभिलेखका नायक उदेश नाथ नाथ सम्प्रदायका अनुयायी थिए। नेपाल संवत् ४०३ सम्म काष्ठमण्डपलाई बौद्ध विहार मान्ने हो भने ने. सं. ४५४ मै त्यो कसरी नाथ सम्प्रदायको मठ हुन गयो मान्न गाहारो छ। यसरी हेर्दा काष्ठमण्डपलाई हामी बौद्धविहार मान्न सक्दैनौं भन्ने स्पष्ट छ। काष्ठमण्डप-सम्बन्धी पहिलो ठोस प्रमाण माथि उल्लिखित ने. सं. ४५४ को ताम्रपत्र हो जसको आधारमा त्यति वेलासम्म काष्ठमण्डप नाथ सम्प्रदायको प्रख्यात मठ (?) को रूपमा आइसकेको थाहा पाइन्छ ।

मध्यकालीन नेपालमा पनि यो सम्प्रदाय निकै लोकप्रिय रहेको देखिन्छ। यस वेलामा नाथ सम्प्रदायको इतिहास जान्ने साधन काष्ठमण्डपभित्रै टांसिएका ताम्रपत्र र सुवर्णपत्रहरू छन् । यी बाहेक एक प्रमाण अरू ठाउँमा पनि पाइएको देखिन्छ ।

सर्वप्रथम हामी नेपाल संवत् ४५४ (वि. सं १३९१) को ताम्रपत्राभिलेख काष्ठमण्डपमा रहेको देख्दछौं जसका नायक नाथ सम्प्रदायका अनुयायी उदेशनाथ ज्ञात हुन्छन् ।[२] यस अभिलेखबाट नाथ सम्प्रदायका तात्कालिक विश्वास आदि थाहा पाउन सकिन्छ। यसमा केही नियमहरू लेखिएका छन् जसको विरुद्ध काम गर्ने व्यक्तिलाई 'गोहत्या' 'ब्रह्महत्या' 'स्त्रीहत्या' जस्ता महापातक लाग्ने छन् भन्ने वर्णन गरिएको छ। यसबाट नाथ सम्प्रदायको महारौरव र रौरव अनि महानरकमा विश्वास थियो भन्ने कुरा पनि थाहा पाइन्छ। यस अभिलेखमा साक्षीको रूपमा विष्णु र लक्ष्मीनारायण राखिएका देखिएकाले नाथ सम्प्रदायमा विष्णु र लक्ष्मीनारायण पनि यस सम्प्रदायका माननीय देवताको रूपमा देखिन्छन् ।

काष्ठमण्डपमै रहेको जयस्थिति मल्लको पालाको नेपाल संवत् ४९९ (वि. सं. १४३६) को ताम्रपत्रमा प्रारम्भमै "देव गोरक्ष" को उल्लेख गरिएको छ ।[३] यस अभिलेखका नायक जोगी बालनाथ हुन् । अभिलेख नेवारी भाषामा लेखिएको छ ।

[१]सं. स. १-६, पृ. ४-५
[२]सं. स. १-६, पृ. ४-५
[३]ऐजन-पृ. ५-६

नेपाल संवत् ५११ (वि. सं. १४४८) को फर्पिङ् अभिलेखबाट नाथ सम्प्रदायको नवीन मान्यताबारे ज्ञान हुन्छ। यसमा 'गोरक्षपादुकाभ्यां नमः' भनिएको छ। अभिलेख पनि गोरक्षपादुका अंकित प्रस्तरको पादपीठमै लेखिएको छ।[१] यसबाट वैष्णव धर्ममा झैं नाथ सम्प्रदायमा पनि पादुका–पूजा लोकप्रिय रहेको थाहा पाइन्छ।

काष्ठमण्डपमैं नेपाल संवत् ५४३ (वि. सं. १४८०) को आर्को ताम्रपत्र छ जसमा नेवारी भाषामा नाथ सम्प्रदाय सम्बन्धी दान आदिको वर्णन गरिएकोछ।[२] यहाँ एउटा अति महत्त्वपूर्ण ताम्रपत्र छ जसको तिथि नेपाल संवत् ५८५ (वि. स. १५२२) छ। यसमा गोरक्षनाथको स्तुति, काष्ठमण्डपको वर्णन र तत्सम्बद्ध जोगीहरूको वर्णन गरिएको छ।[३] अभिलेखको वर्णनबाट गोरक्षनाथ अथवा नाथ सम्प्रदायसम्बन्धी दर्शनबारे केही कुरा थाहा पाइन्छ। अझ महत्त्वको कुरो त अभिलेखको विवरणबाट गौड देशबाट आएका चैतन्यनाथ योगीको विषयमा छ।[४] नेपाल नाथ सम्प्रदायको महत्त्वपूर्ण केन्द्र रहेकोले नै गौडबाट चैतन्यनाथ योगी नेपालमा (कान्तिपुरमा) जग्गा किनेर नाथ सम्प्रदायका जोगीहरूलाई प्रतिवर्ष चक्र (भण्डारा ?) दिने व्यवस्था गर्न आएका थिए भन्ने कुरा उक्त अभिलेखबाट थाहा पाइन्छ। योगी चैतन्यनाथले आफू नेपाल आएको वेलामा नाथ जोगीहरूलाई भोज दिई अन्नदान गरी उनले पुण्यलाभ पनि

---

[१] Medieval Nepal III D. R. Regmi P. 31

[२] Medieval Nepal III. D. R. Regmi. P. 54–55

[३] अनादि परमं ब्रह्म निस्कलं सचराचरम्।
ध्यायन्ते योगिनो नित्यं गोरक्षं प्रणमाम्यहम्॥
प्रासाद काष्ठमण्डप धौतछ्त्र रत्ना... (खोतरामा) स्वर्णध्वजालंकृतम्।
सं. स. १–६. पृ. ७–८ (रेग्मीज्यूको Medieval Nepal III. मा केही पाठ भेद छ–पृ. ७६)

[४] श्रीगौडदेशागतदातृयोगी।
चैमन्यनाथो वरदानशौण्डः॥
नेपालदेशे क्रयितुं च क्षेत्रम्।
चक्रं ददौ श्री अवधूतकेभ्यः॥
नाथ सम्प्रदायका अनुयायीहरूलाई (अथवा जोगीहरूलाई) अवधूत किन भनिएको हो विचारणीय छ।

गरेका थिए। भन्ने कुरा त्यस अभिलेखबाट ज्ञात हुन्छ।[१]

अलि पछिको भए पनि रत्नमल्लको पालाको नेपाल संवत् ६३२ (वि. सं. १५६६) को सुवर्णपत्र काष्ठमण्डपमैं छ। यसमा पनि प्रारम्भमा गोरक्षनाथलाई नमस्कार गरिएको छ। यस अभिलेखका नायक भारतको त्रिपुरा अन्तर्गत खण्डल (खण्डवा ?) का निवासी बालनाथ हुन्।[२] यस अभिलेखमा बालनाथले चक्र आदिको लागि सुवर्णदान गरिएको कुरा लेखिएको छ। यस विवरणबाट नेपाल प्रमुख नाथ क्षेत्रको रूपमा प्रख्यात भएको कुराको समर्थन हुन्छ।

नाथ सम्प्रदायले नेपालमा राम्रो प्रभाव पारेको थियो। यस कुराको समर्थन आजसम्म चलिआएको मत्स्येन्द्रनाथयात्राले पनि गरेको छ। यो जात्रा आज राष्ट्रिय पर्वको रूपमा आजसम्म अति लोकप्रिय रूपमा जीवित छ। भाषा वंशावलिहरूमा यस जात्राको सम्बन्ध लिच्छवि राजा नरेन्द्रदेवको पालामा भएको अनावृष्टिसंग गरिएकोछ। भाषा वंशावलिको कथन मान्ने हो भने यस जात्राको प्राचीनता निकै पुरानो मान्नु पर्दछ।

नाथ सम्प्रदायले पश्चिमी नेपालमा राम्रो क्षेत्र बनाएको अनुमान गर्न सकिन्छ। गोर्खा राज्यको इतिहासमा गोरक्षनाथ सम्बन्धी कथाहरू गोर्खा वंशावलिमा जताततै पाइन्छन्। शाह राजाहरूले गोर्खामा छदा र नेपालभरि शासन गर्दा गोरक्षनाथलाई निकै मान्यता दिएका थिए। शाह राजाहरूका पैसामा प्रायः 'गोरष' नाथ लेखिएको देखिन्छ जो नाथ सम्प्रदायको प्रभावको परिणाम हो भन्ने कुरा स्पष्ट छ। पृथ्वीनारायण शाहको बाल्यकाल, लषनथापाको वर्णन त यस सम्प्रदायसंग सम्बद्ध भएको कुरामा केही शंका प्रकट गर्नु परोइन।

नाथ सम्प्रदाय नेपालमा लोकप्रिय भएको कुरा यसको विशेषतामा

---

[१] योगिभ्यश्च प्रदत्ता विविधषडरसा दत्तवान् अन्नदानम्।
वर्षे वर्षे प्रदानं पुनरपि प्रददौ माघमासे सुपूर्णम्॥
यावच्चन्द्रश्च सूर्यश्च यावन्मेरौ महीतले।
तावत्कालं प्रदत्तोयमक्षयति दातृसंलभेत्॥

[२] श्रीकाष्ठमण्डपस्थानस प्रतिवर्ष प्रतिवर्ष जोगी चक्र दयके यातं दान याङा भाषा थोते श्रीत्रिपुरास्थान श्रीखण्डलदेशया श्री छ बालनाथेन स्वहस्तेन स्वविद्यमानेन वाचा प्रतिपन्नीभूतेन सुवर्णद्वयकर्षाधिक चतु:पलाङ्कितचूर्ण काला लूं प्ल ४ कर्ष थोनेया व्याजन वर्षप्रति आषाढकृष्ण चतुर्दशी कोन्हु जोगी चक्र भुक्ति भोग याचकं यने माल जुरो। सं स. १-६. पृ. ८-६.

आधारित छ । नाथ सम्प्रदाय सैनिक शक्तिको विकासमा उत्साह दिन्छ र यसैले वीर योद्धा पृथ्वीनारायण शाहहरूले यस सम्प्रदायलाई राम्रो मान्यता दिएका थिए ।

यसरी हेर्दा नेपालमा नाथ सम्प्रदाय पनि एक प्रमुख धर्मको रूपमा लोकप्रिय रहेको देख्दछौं । नेपालको राष्ट्रिय एकतामा यसको आनुषङ्गिक प्रभाव परेकोले यसको विशेषता अझ बढेको छ ।



# शैव* राजाहरू

प्राचीन समयदेखि नै नेपालमा अनेक राजाहरूले शैव धर्म ग्रहण गरेका थिए। यसैले पनि यहाँ शैव धर्मको राम्रो उन्नति भएको थियो।

लिच्छविकालमा सर्वप्रथम शैव धर्मलाई राजकीय रूपमा मान्यता दिने अंशुवर्मा थिए। उनले नै सबैभन्दा पहिले "भगवत्पशुपतिभट्टारकपादानुगृहीतः"[१] उपाधि ग्रहण गरेका थिए। उनका प्रत्येक शिलालेखमा उनलाई यो उपाधि दिइएको छ। त्यसै कालका जिष्णुगुप्त, विष्णुगुप्त, नरेन्द्रदेव र शिवदेव द्वितीयले पनि अंशुवर्माकै जस्तो पाशुपत उपाधि ग्रहण गरेका थिए, जसको आधारमा उनीहरू पाशुपत सम्प्रदायका अनुयायी रहेका ज्ञात हुन्छन्। द्वितीय जयदेव पनि पाशुपत सम्प्रदायका अनुयायी रहेका थिए भन्ने ज्ञात हुन्छ किनभने उनले अष्टपुष्पिकाको पूजा गरी शिवको स्तुतिमा शिलालेख पनि उत्कीर्ण गराएका थिए। यस कुराको विशेष वर्णन माथि नै भैसकेको छ।

मध्यकालमा पनि अनेक राजाहरूले शैव धर्म ग्रहण गरी त्यसलाई राजकीय धर्मको रूपमा मान्यता दिएका थिए। नेपाल संवत् २५४ मा लेखिएको चान्द्रव्याकरणवृत्तिको पुष्पिकामा तात्कालिक राजा इन्द्रदेवलाई परमशैव भनिएको छ।[२]नेपाल संवत् २८६ (वि. सं. १२२३) मा सारिएको अष्टसाहस्रिका प्रज्ञापारमिताको पुष्पिका वाक्यमा तात्कालिक राजा आनन्ददेवलाई पनि परमशैव भनिएको छ।[३]यसैताक भएका राजा मानदेव पनि परमशैव थिए। यिनको

---

*यहाँ शैव धर्म विस्तृत रूपमा ग्रहण गरिएको छ।

[१]कहिले कहिले 'भगवत्पशुपति भट्टारकपादानुध्यातः' पनि पाइन्छ।

[२]Sanskrit palm leaf Manuskripts in Tibet–J. BORS–XXIII. P. 43

[३]Medieval History of Nepal–L. Petech p. 65; नेपाल संवत् २७२ मा सारिएको अष्टसाहस्रिका प्रज्ञा पारमिताको पुष्पिकामा पनि आनन्ददेवलाई परमशैव भनिएको छ।

शासनकालमा सारिएको अष्टसाहस्रिका प्रज्ञा पारमिताको पुष्पिकामा यिनलाई उक्त उपाधि दिइएको छ ।[१] वि. स. १३१७ तिर भएका राजा भीमदेवले पनि परमशैव उपाधि लिएका थिए[२] जसबाट उनको व्यक्तिगत धर्मबारे केही परिचय पाइन्छ ।

मल्ल कालमा पनि जयस्थितिमल्ल, ज्योतिर्मल्ल तथा यक्षमल्ल जस्ता प्रतापी राजाहरूले शैव धर्मनै मानेका थिए भन्ने कुरा उनका शिलालेखले स्पष्ट्याएका छन् ।



[१]बृहत्सूचीपत्र (वीर पुस्तक.) बौद्ध; पृ. ४५

[२]नेपाल संवत् ३८० ( वि. सं. १३१७ ) मा सारिएको महालक्ष्मीव्रतको पुष्पिका मा भीमदेवलाई परमशैव भनिएको छ। Medieval History of Nepal-L.petech p. 93.

# नेपालका शिवलिङ्ग

नेपालमा शैव धर्म अति लोकप्रिय भएकोले यहाँ हामी असंख्य शिवलिङ्ग स्थापित भएका देख्दछौं। शैवधर्ममा शिवलिङ्ग अत्यधिक लोकप्रिय रूपमा बनाइने परम्परा थियो।[१]

उपत्यकामा जतातत्तै शिवलिङ्ग देखिन्छन् जुनबाट हामी नेपाली कलाको एक पक्षको ज्ञान प्राप्त गर्दछौं।

शिवलिङ्गलाई यसको स्वरूपको आधारमा दुइ भाग गर्न सक्दछौं:

साधारण

कलात्मक

साधारण शिवलिङ्ग भन्नाले यसमा कला छँदै छैन भन्ने उद्देश्य हैन तर यसलाई साधारण भनिएको कारण मुख नबनाउनाले हो। साधारण रूपमा भन्ने हो भने यसमा पनि कला देखिन्छ विशेषतया ब्रह्मसूत्रको रूपमा। पत्थरको चिप्लोपनाको विशेषता पनि यसमा कलात्मक रस ल्याउन सक्दछ।

साधारण प्रकारका शिवलिङ्ग-मध्ये कुनै कुनैमा दर्शकलाई मन्त्रमुग्ध पार्ने कला देखिन्छ। पशुपति राजेश्वरी घाटमा एउटा विशाल शिवलिङ्ग छ जसमा त्यसको माध्यमबाट नेपाली कलाकारको चातुर्य र जाँगरको परिचय पाइन्छ। यसको पत्थर ऐना जस्तो चिप्लो र चम्किलो छ।

साधारण शिवलिङ्गको प्राचीन स्वरूप क्षेमसुन्दरी[२] र गुणवतीले स्थापित

---

[१]यसैले लिंगपुराणमा भनिएको छ:

आधिक्यं सर्वमूर्त्तीनां लिङ्गमूर्तिर्विशेषतः। (२-५५)

[२]क्षेमसुन्दरीले स्थापना गरेको शिवलिङ्गको अभिलेखमा शिवलिङ्गको वर्णन गर्दा 'ऐशान लिङ्ग' (ऐशानं लिंङ्गमग्र्य्) भनिएको छ। उद्धृत वाक्यमा ईशान शब्द विचारणीय छ। महादेवका पाँच मुखको नाममध्ये एक ईशान रहेको छ, अरू मुखको नाम चाहिं वामदेव, सद्योजात, अघोर र तत्पुरुष हुन्। मुख

गरेका शिवलिङ्गहरूमा देखिन्छः

कलात्मक शिवलिङ्गलाई पनि बाह्य स्वरूपको आधारमा दुइ भाग गर्न सकिन्छ:

मुख भएको र मुख नभएको

पहिलो भेद अन्तर्गत त्यस्ता शिवलिङ्ग लिएका छन् जुनमा लिङ्गको माथिल्लो भागमा एक अथवा चार मुख बनाइएका हुन्छन्। भारतमा एकमुखे र चार मुखे शिवलिङ्ग कम बनेका देखिन्छन् तर नेपालमा भने यस्ता लिङ्ग प्रशस्त देखिन्छन्। यस रूपमा नेपाली शिवलिङ्ग कलाको र शैव धर्मको विशेषता देखिन्छ।

चारमुखे भन्दा एकमुखे शिवलिङ्ग नेपालमा धेरै संख्यामा देखिन्छन्। एकमुखे लिङ्गमा मुखमुन्तिर दुइ हात पनि बनाइएका हुन्छन् जसमा प्राय: एकमा कमण्डलु र आर्कोमा रुद्राक्षको माला बनाइएको देखिन्छ।[१] यस प्रकारका शिवलिङ्गको जलहरी साधारण प्रकारका जस्तै बनेका देखिन्छन्।

चारमुखे शिवलिङ्गमा कलाको पूर्णता देखिन्छ। यस प्रकारका लिङ्गमा चारै मुखमा शिरको बनोट भिन्न भिन्न देखिन्छ। यस किसिमका शिवलिङ्गमा उत्कृष्ट चौपाटनमा पशुपतिको पश्चिमी ढोकाको अगाडिपट्टि बाटाको छेउमा छ। यसमा नेपाली कलाको पूर्ण उत्कर्ष देखिन्छ। यसको आर्को विशेषता लिङ्गको बीचमा आलङ्कारिक पट्टिका (Tape) मा छ जो अत्यन्त सुन्दर छ।[२] चतुर्मुख शिवलिङ्गमा अर्को उत्कृष्ट उदाहरण चौपाटनको एक शिवमन्दिरमा स्थापित छ। यो पनि भव्य छ। यसको विशेषता प्रस्तरमा देखिन्छ जो ऐना जस्तो चम्किन्छ। झट्ट हेर्दा यो तामाको जस्तो देखिन्छ। यस्तै शिवलिङ्ग हांडीगाउँमा सत्यनारायण स्थान पछाडि स्थापित भएको छ।

मुख नबनाइएका शिवलिङ्गलाई अनेक भागमा विभाजित गर्न सकिन्छ किनभने यसमा पनि अनेक किसिमका बनेको देखिन्छन्। यस किसिमका शिवलिङ्गमा जलहरीमुन्तिरको भाग खण्ड खण्ड परेका हुन्छन् र अत्यन्त सुन्दर हुन्छन्। यस्ता शिवलिङ्ग प्राय: काला पत्थरका बनेका देखिन्छन्। यस प्रसङ्गमा पशुपतिको

---

नभएका शिवलिङ्गमा पनि यी पाँच मुख भएको कल्पना गरिन्छ र आगम अनुसार ईशान मुख लिङ्गको शीर्षभाग हो। ईशान मुखले आकाशको द्योतन गरेको मानिन्छ। मुख बनेका शिवलिङ्गमा पश्चिमपट्टिको मुखमा ईशान स्वरूप भएको मानिन्छ।

[१] चित्रफलक ७ ख.

[२] यसैलाई विद्वान्हरूले मूल पशुपति मानेका छन् चित्र-फलक १ ख.

पूर्वोत्तर कुनामा वासुकी मन्दिरको देब्रे तिर रहेको एक शिवलिङ्गको वर्णन गर्नु आवश्यक देखिन्छ। यस लिङ्गको आधार कमल रहेको छ जो परम्परा सर्वथा मौलिक रूपमा रहेको ज्ञात हुन्छ। यस्तो आर्को शिवलिङ्ग नेपालमा र भारतमा अरू कतै रहेको थाहा पाउन सकिएको छैन।



३

# लिच्छविकालिक देवमूर्तिमा छाताको स्थान

लिच्छविकालका शैव मूर्ति र मूर्तिफलकमा मूल देवताको शिरमाथि छत्र बनाउने परम्परा सर्वव्यापी देखिन्छ । यसै परम्पराको प्रभाव हामी एक देवताको रूपमा पनि देख्दछौं । जिष्णुगुप्तको पालामा एक पाशुपत आचार्य प्रयाद्‌नले एक मूर्ति स्थापित गरी अभिलेख राख्न लगाएका थिए । त्यस मूर्तिलाई अभिलेखमा स्तुति गर्दा छत्रचण्डेश्वर भनिएको छ ।

अभिलेखमा वर्णन गरिएको मूर्तिलाई सामान्य जनता त्यसको वाह्य स्वरूपको आधारमा कामदेव भन्दछन् तर वास्तवमा त्यो छत्रचण्डेश्वरकै मूर्ति हो भन्ने कुरा त निश्चित छ र त्यो मूर्ति लकुलीशको हो भन्ने कुरा थाहा पाइन्छ । भारतमा पनि लकुलीशको मूर्ति बनाइन्छ तर अर्कै ढंगमा । भारतमा लकुलीशको मूर्तिमा छाता बनाउने परम्परा पनि देखिंदैन अतः यस रूपमा नेपाली देवमूर्ति कला (Iconography) को विशेषता देखिन्छ । लकुलीशलाई नेपालमा छत्रचण्ड़ेश्वर भनिने परम्परा तत्कालीन धार्मिक कर्मकाण्डमा छत्रको महत्त्वपूर्ण स्थान रहेको कुरा थाहा पाइन्छ । चण्डेश्वर महादेवको नाम हो र त्यससंग छत्र शब्द जोडिएकोले छत्रचण्डेश्वर नाम रहेको बुझिन्छ । छाताले देवताको नामसंगै महत्त्व पाएको कुरा यस उदाहरणबाट स्पष्ट ज्ञात हुन्छ । लिंगपुराणमा पनि महादेवको वर्णन गर्दा 'छत्री' पनि भनिएको छ[१] जससंग छत्रचण्ड़ेश्वरसम्बन्धी धार्मिक भावनाको सम्बन्ध रहेको देखिन्छ ।

लिच्छविकालिक शैव धर्मसंग सम्बद्ध धार्मिक कर्मकाण्डमा छाताको महत्त्वपूर्ण स्थान रहेको थाहा पाइन्छ । लिच्छविराजा द्वितीय शिवदेवले पशुपतिको जात्रामा देवतालाई छाता ओढाउने कुराको उल्लेख गरिएको छ ।[२]त्यसै वेलातिर

---

[१]घण्टाप्रियो ध्वजी छत्री पिनाकी ध्वजिनीपतिः ॥ लिंगपुराण ( २१–८० )

[२]नोली पृष्ठ–१०५

प्रचलित एक प्रकारको पशुपति मुद्रामा शिवको मूर्तिमाथि छाता बनाइएको छ ।[१] भारतमा पनि यस्तो परम्परा विद्यमान थियो । द्वितीय शताब्दीतिर कुणिन्द जाति प्रख्यात थियो । त्यस जातिले चलाएको एक किसिमको मुद्रामा शिवको मूर्ति अङ्कित गरी छाता ओढाइएको छ । मूर्ति मुन्तिर "भगवत छत्रेश्वर महात्मन:" लेखिएको छ ।[२]

छाता सामान्य जनतामा पनि चलेको छ तर 'राजच्छत्र' को रूपमा यसको विशेष महत्त्व छ । नेपालमा पशुपतिलाई पनि महाराजालाई जस्तै 'भट्टारक' उपाधि दिइन्थ्यो (सम्मानको लागि) अतः देवतालाई पनि राजालाई जस्तै छाता ओढाएर अझ बढी महत्त्व दिइएको कुरा थाहा पाइन्छ ।

---

१Coins of Ancient India-P. 118

२Catalogue of Coins of Ancient India in the British Museun. -J. Allan. plate, 167-168.

# पशुपति मुद्रा- एक संक्षिप्त परिचय

पशुपति अभिलेख भएका र अनेक चित्र अंकित भएका मुद्रा नेपाल उपत्यकामा प्रशस्त पाइन्छन् । यी मुद्रा यस कुराका प्रमाण हुन् कि प्राचीन नेपालमा पाशुपत सम्प्रदाय अति लोकप्रिय थियो । यी मुद्रा लिच्छविकालका पाशुपत राजाहरूले आफ्नो अधिदेवताका नाममा चलाएको हुनु पर्दछ । अंशुवर्मा, जिष्णुगुप्त, विष्णुगुप्त, नरेन्द्रदेव, शिवदेव द्वितीयले आफ्ना शिलालेखमा 'भगवत्पशुपतिभट्टारकपादानुगृहीत' (अथवा ... पादानुध्यातः) उपाधि लेखाएका थिए । मेरो विचारमा अधिकांश पशुपति मुद्रा यिनै पाशुपत राजाहरूले चलाएका थिए । तर यस विषयमा हामीले धेरै विचार गर्नु पर्दछ ।

यहाँ आजसम्म ज्ञात पशुपति मुद्राको साधारण परिचय र संक्षिप्त वर्णन प्रस्तुत गर्दछौं । यी मुद्रा लिच्छविकालको संस्कृत कलाका प्रतीक रूपमा पनि हाम्रा समक्ष आउंछन् । साँढेको चित्र यी मुद्रामा अति सुन्दर बनेका छन् जो यथार्थवादी पनि छ । कलात्मक विविधता पशुपति मुद्राको अर्को विशेषता हो ।

प्रत्येक किसिमको पशुपति मुद्राको संक्षिप्त विवरण तल प्रस्तुत गरिन्छ ।

## संख्या—१

पुरोभाग– बिन्दुयुक्त घेराभित्र बसेको मूर्ति छ । मूर्तिको शिरमा श्रीपेच छ । मूर्तिको दाहिने हात घुँडामा र देब्रे हात कम्मरमा अड्याइएको छ ।

पृष्ठभाग– विन्दुयुक्त घेराभित्र एक कलश छ, जसमा मुखमा फूल छ । कलशको दाहिने माथि तल प प, देब्रे माथि तल शुति (पशुपति) अभिलेख छ ।[१]

## संख्या—२

पुरोभाग– विन्दुयुक्त घेराभित्र दाहिने हातमा कमल लिएको एक मूर्ति छ ।

[१] चित्रफलक ११ क

पृष्ठभाग– बिन्दुयुक्त घेराभित्र बीचमा कलश छ । कलशको मुखमा फूल र दण्ड छ । दण्डको दाहिने र देब्रेतिर गरेर पशुपति अभिलेख लेखिएको छ ।[१]

## संख्या–३

पुरोभाग– यस मुद्राको बीचमा (बिन्दुयुक्त घेराभित्र) एक मूर्ति छ जसको माथि उठाइएको दाहिने हातमा कमलको फूल छ । मूर्तिको आर्को हात घुंडानेर रहेको कलश लिन लागेको स्थितिमा छ जसलाई अलेक्जेण्डर कनिंघमले कलश हातमा लिएको भनैका छन् ।[२]

पृष्ठभाग- बिन्दुयुक्त घेराभित्र कलश छ । त्यसको मुखमा फूल राखिएका छन । त्यसको दाहिने र देब्रे गरेर "पशु पति" अभिलेख उत्कीर्ण गरिएको छ ।

एउटै मुद्राका अगाडि र पछाडि कलश रहेकोले यसको विशेष धार्मिक महत्त्व छ ।

## संख्या–४

कनिंघमले संख्या ३ कै आर्को किसिमको मुद्रामा अगाडिपट्टि रहेको मूर्तिमाथि चंदुवा भएको वर्णन गरेका छन ।[३] चंदुवा भनी वर्णन गरिएको वस्तु वास्तवमा छाता हुन सक्दछ किनभने लिच्छविकालमा शिवमूर्तिहरूमा छाताको महत्त्वपूर्ण र लोकप्रिय स्थान रहेको बुझिन्छ ।[४]

## संख्या–५

पुरोभाग- बिन्दुयुक्त घेराभित्र (?) माझमा त्रिशूल छ र त्यसको दाहिनेपट्टि माथि र तल अनि देब्रेपट्टि माथि र तलगरेर पशुपति अभिलेख लेखिएको छ ।

पृष्ठभाग-ज्यादै घिरिएको छ । श्री सत्यमोहन जोशीज्यूको कथन अनुसार यसमा "अग्निज्वालाको जस्तो बुट्टे आकृति" छ ।[५]

यस पशुपति मुद्रामा आगोलाई पशुपतिसंग सम्बद्ध गरेको कुरा विशेष विचारणीय छ । यस रूपमा महादेवलाई कपर्दीको रूपमा देखाइएको हुनुपर्दछ । महादेवको कपर्दी नाम रहेकोमा रा. गो. भण्डारकरज्यूले विचार गर्नु

[१]नेपाली राष्ट्रिय मुद्रा–सत्यमोहन जोशी–पृ. ६०

[२]Coins of Ancient India– A Cunninghum.
P.118, ११ ग चित्रफलक द्रष्टव्य

[३]ऐजन

[४]द्रष्टव्य–'लिच्छविकालिक देवमूर्तिमा छाताको स्थान' निबन्ध ।

[५]नेपाली राष्ट्रिय मुद्रा–पृष्ठ ६०

भएको छ कि जटाधारण गर्ने हुनाले महादेव अग्नि जस्ता देखिने हुनाले शिव र अग्निलाई एक मानिएको हो ।[१]

## संख्या- ६

पुरोभाग-विन्दुयुक्त घेराभित्र त्रिशूल छ। त्यसको घांटीनेर देब्रेतिर फर्केको बन्चरो छ। त्रिशूल सानो वेदीमा गाडिएको देखिन्छ (कनिंघमले यसको वर्णन गरेका छैनन्)। यसको दाहिनेपट्टि बन्चरोको बींड पनि देखिन्छ तर त्यो बींड र पशुपति अभिलेखको "ति" को बाइमात्रासंग जोडिएकोले त्यो चिन्ह अंग्रेजी बर्णमालाको "जेड" जस्तो देखिन्छ जो डमरू हो (कनिंघमले यसको पनि वर्णन गरेका छैनन) त्रिशूलको देब्रे र दाहिने गरेर "पशुपति" अभिलेख छ।

पृष्ठभाग-विन्दुयुक्त घेराभित्र सूर्यको सानो चक्का छ र त्यसको बाहिरी सीमामा आर्को घेरा पनि छ। यसको चारैतिर तेज (Halo) बनाइएको छ। चक्काको चारैतिर गरी "पशुपति" अभिलेख लेखिएको छ।[२]

यस मुद्राको दुबैपट्टि पशुपति अभिलेख भएकोमा धार्मिक विशेषता छ।

## संख्या-७

पुरोभाग-विन्दुयुक्त घेराभित्र कमल छ र त्यसको चारैतिर एक एक गरी "पशुपति" अभिलेख अंकित छ।

पृष्ठभाग-विन्दुयुक्त घेराभित्र बीचमा उभिएको साँढे छ र त्यसको जुरोमाथि अर्धचन्द्र छ।

यसमा महादेवलाई वृषको रूपमा देखाइएको हो। लिंगपुराणमा महादेवको स्तुति गर्दा 'बचन रूपी वृष' र 'प्राचीन वृषभ' भनिएको छ[३] जसबाट पनि यस पशुपति मुद्राको व्याख्या गर्न सजिलो पर्दछ।

## संख्या-८

पुरोभाग-बिन्दुयुक्त घेराभित्र माझमा सानो चक्का छ। चक्काको वरिपरि "पशुपति" अभिलेख छ।

पृष्ठभाग- विन्दुयुक्त घेराभित्र बीचमा उभिएको साँढे छ जसको जुरोनेर चन्द्रमा बनाइएको छ। साँढे पश्चिमतर्फ फर्केको छ।

---

[१] Vaisnavism Saivism and other Minar Religious systems- P. 103

[२] चित्रफलक ११ घ

[३] वाग्वृषाय नमस्तुभ्यं पुराणवृषभाय च ॥ लिंगपुराण (२१-२६)

सबै वर्णन उपर्युक्त भएको तर पुच्छर भैंमा लत्रिएको साँढे भएको आर्को किसिमको पशुपति मुद्राको वर्णन पाइन्छ ।

## संख्या–९

पुरोभाग– विन्दुयुक्त घेराभित्र बसेको साँढे छ र त्यसमाथि पशुपति अभिलेख लेखिएको छ ।

पृष्ठभाग– विन्दुयुक्त घेराभित्र बीचमा ठूलो सूर्य बिम्ब छ । त्यस बिम्बको छेउ छेउमा किरण पनि बनाएको छ ।

## संख्या–१०

पुरोभाग– विन्दुयुक्त घेराभित्र बीचमा सानो आकारको बाणको टुप्पो छ । त्यसैनेर "पशुपति" अभिलेख छ ।

पृष्ठभाग– सूर्यको बिम्ब । [१]

## वृष मुद्रा

लिच्छविकालकै लिपिमा "वृष" पनि लेखिएका केही मुद्रा पाइन्छन् जसको संक्षिप्त वर्णन यहाँ प्रस्तुत गरिन्छ । यस मुद्रा बारे आजसम्म वैज्ञानिक र तात्विक अध्ययन भएको छैन ।

पुरोभाग– बीचमा सानो चक्का छ र त्यसभित्र त्रिशूल बनाइएको छ । त्रिशूलको दाहिने शि अनि देब्रे व छ ।[२]

पृष्ठभाग– यसमा बीचमा रहेको सानो चक्काभित्र बसेको साँढे छ । जुरोनेर "वृष" अभिलेख अंकित छ ।

यस मुद्राका अनेक भेद पाइन्छन् । हनुमान ढोका मुद्रा संग्रहालयमा सुरक्षित मुद्राहरूमा तीन किसिमका वृष मुद्रा प्रस्तुत गरिएका छन् । जुनमा दुइ आकारमा अभिन्न छन् । आर्को एउटा चाहिं आकारमा ठूलो छ । श्रीसत्यमोहन जोशीज्यूले आफ्नो पुस्तकमा प्रस्तुत गर्नु भएको वृष मुद्राको चित्रमा साँढे उठेको देखिन्छ तर उहाँले वृषलाई उठेको र बसेको केही लेख्नु भएको छैन । मुद्रासंग्रहालयमा सुरक्षित वृष मुद्रा आकारमा साना छन् (पशुपति मुद्राहरूभन्दा पनि साना) तर जोशीज्यूले प्रस्तुत गर्नु भएको वृष मुद्रा (चित्र हेर्दा) ठूलो आकारको

---

१. यो हनुमानढोका मुद्रा संग्रहालयमा छ ।

२मुद्रा संग्रहालयमा यसको पुरोभागको अभिलेख "श्री व" पढिएको छ जो ठीक छैन ।

देखिन्छ । आकारमा ठूलो भए पनि जोशीज्यूले प्रस्तुत गर्नु भएको मुद्रामा पनि मुद्रा संग्रहालयका मुद्राका जस्तै वस्तु हुनु अधिक सम्भव छ किनभने जोशीज्यूले वृष मुद्राको वर्णन गर्दा केशरबहादुर केसीज्यूले झैं पृष्ठ भागमा डब्ल्यूको आकार देखिन्छ भनी वर्णन गर्नु भएको छ । तथाकथित डब्ल्यू त्रिशूलको माथिल्लो भागै हो अरू केही होइन भन्नमा केही गाह्रारो पर्दैन ।

यसरी हेर्दा तथाकथित वृष मुद्राका अनेक थरि (चार) पाइन्छन् । यो पनि शैवधर्मको महत्त्वतिर संकेत गर्दछ ।

यी मुद्रालाई "स्मारक" किसिमका (Commemorative medal) मुद्रा मान्न सकिन्छ । पशुपतिका भक्त राजाहरूले उनको स्मरणमा यी मुद्रा चलाएका हुन् । यी मुद्रा नेपालमा पशुपति र पाशुपत धर्मको महत्त्व बताउंछन् ।

५

# शंकराचार्य र नेपाल

आठौं शताब्दीमा भारतमा एक यस्ता व्यक्ति भए जसले हिन्दू संस्कृतिको रक्षा गर्नमा ठूलो काम गरे–तिनको नाम हो शंकराचार्य ।

शंकराचार्यले भारतका महत्त्वपूर्ण शैव पीठमा गई आफ्नो उद्यमले बौद्धधर्मको खण्डन गरी हिन्दू धर्म (विशेष गरेर शैव) को प्रचार गरे । उनले भारतका चार कुनामा आफ्नो नाउँमा मठ पनि बनाएका थिए जो आजसम्म हिन्दू संस्कृतिका प्रेरणास्रोतको रूपमा रही आएका छन् । यिनीबारे नेपालका भाषा वंशावलिहरूमा अनेक किसिमका कुरा लेखिएका छन् । ती वंशावलिमा शंकराचार्यले नेपाल आई हजारौं बौद्ध मारेको वर्णन पनि गरिएको छ । वंशावलिका कुराको सत्यतामा कति मात्रामा सत्यता छ यस विषयमा केही विचार गर्ने स्थिति छैन । शंकराचार्यको धार्मिक दिग्विजयको वर्णन प्रसंगमा वर्णन गरिएका देशहरूको सूचीमा नेपालको नाम दिइएको छैन । यस स्थितिमा शंकर नेपाल आएका थिए भन्ने कुरा मान्न गाह्रारो छ । तर यस प्रसंगमा एक आर्को कुराको विचार गर्नु पनि आवश्यक छ । पशुपतिनाथमा पूजा गर्ने काम केवल दक्षिण भारतीय ब्राह्मण अधिकारी रही आएका देखिएकाले शंकर नेपाल आएका थिए कि भन्ने प्रश्न उठ्न सक्दछ तर यो परम्परा कहिलेदेखि शुरु भएको हो यो पनि अज्ञात छ । हुन त चौधौं पन्ध्रौं शताब्दीका केही शिलालेखमा भट्ट थर भएका मानिसहरूको उल्लेख पाइन्छ । भट्ट थर भएका ब्राह्मणहरू दक्षिण भारतका हुन् । यी भट्ट ब्राह्मणहरू नेपाल कहिले पसे यो कुरा अस्पष्ट छ ।

यस विषयमा निष्कर्ष यत्ति हो कि शंकराचार्य नेपाल आएका नआएका कुनै ऐतिहासिक प्रमाण छैन तर पूरा भारतवर्षमा उनको प्रभाव थियो त्यस स्थितिमा नेपालमा पनि उनका कार्यको प्रभाव परेको हुन सक्दछ तर त्यसको यहाँ कस्तो किसिमको प्रभाव पर्‍यो त्यसै भन्न सकिँदैन ।

६

# उपत्यकाका हरगौरी फलक

हरगौरी फलक या शिवपरिवार फलक नेपालको धार्मिक र कलात्मक विशेषताको प्रतीक हो । नेपालका हर समयका कलाकारको प्रियतम वस्तु हरगौरी फलक बनाउने कार्यमा नै देखिन्छ । यसैले उपत्यकामा जतातते यस किसिमका मूर्तिफलक देखिन्छन् ।

लिच्छविकालमा सर्वप्रथम हरगौरी फलक बनाउन थालिएको थियो । त्यस बेलामा बनेका यस्ता मूर्तिफलक अत्यन्त राम्रा छन् जसको एक उदाहरण राजेश्वरी मन्दिरनेर रहेको हरगौरी फलक हो (चित्रफलक ६ क)। यस्ता सयौं मूर्ति फलक छन् तर प्रत्येकमा एक एक किसिमका विशेषता देखिन्छन् । अप्सराहरूको चित्र मूर्तिको दाहिने देब्रे र माथि बनाउने शैली यी फलकमा अति सुन्दर छ। शिवका गणलाई प्रायः फलकको मुन्तिरको भागमा स्थान दिइन्छ । यस्ता अनेक फलक भग्न अवस्थामा छन् (चित्र फलक ६ ग) पछि मल्लकालमा र मध्यकालमा पनि यस्ता फलक बनाइन्थ्यो। मध्यकालमा बनेको एक हरगौरी फलक पाटनमा कुम्भेश्वर मन्दिरनेर धायँबुमा छ जसको पादपीठमा ने. सं १०७ ( वि. सं. १०४४ ) को शिलालेख छ ।[१] शिलालेखमा 'ललितेश' को स्तुति गरिएको छ जो निम्न प्रकार छः

नमश्श्रीललितेशाय शुद्धज्ञत्रिगुणात्मने ।
देवात्मजवरेशाय भुक्तिमुक्तिप्रदायिने ॥

नेपाल संवत् १३२ (वि. सं. १०६६) मा पनि एक हरगौरी परिवार फलक बनाइएको थियो जसको पादपीठमा अभिलेख पनि लेखिएको छ ।[२] अभिलेखमा देवताको स्तुति यस रूपमा गरिएको छ ।

---

[१] अ. सं. भाग-६ पृ. २४

[२] ऐजन पृ. २४-२५

स्वस्ति कैलासवासखि (शि) रसिवित्रिपथगाश्चन्द्रमाङ्ककपाल:
भाति कर्णे भुजङ्गफणिमणिकिरणकण्ठश्लिट्कालकूट:
प्रेम्नास्वज्य मुखेन्दुं हिमगिरिस्त(त)नयाबामपार्श्वेनिधाय
सेनानीनृत्यरावगणपतिप्रमथैः पातु वः चन्द्रमौलिः ॥

× × ×

भरवच्छ्रीशङ्करसौमो (मौ) गणे: सार्द्धं शिलामयं

ने. सं. ५२४ मा पनि महाराष्ट्रबाट आएका एक ब्राह्मण लक्ष्मीदेवसोम शर्मा (?) ले हांडीगाउँ सत्यनारायण स्थाननेर 'उमालिंगित महेश्वर'[१] (हरगौरी फलक) को स्थापना गरी मूर्तिकै पादपीठमुनि शिलालेख पनि लेखाएका थिए ।[२]

यस्ता मूर्ति उपत्यकामा प्रशस्त पाउनाले यहाँ शैव र शाक्त (शिवशक्ति) सम्प्रदायको अत्यधिक लोकप्रिय थियो (र छ) भन्ने कुरा स्पष्ट हुन्छ । कलाको दृष्टिकोणले हेर्दा पनि नेपाली कलाको ठूलो अङ्ग यस किसिमका मूर्तिले नै पूरा गरेका देखिन्छन् । यस किसिमका फलक भारतमा कतै पनि पाइंदैनन् । अतः यस रूपमा नेपाली कला र धार्मिक परम्पराको एक विशेषता पनि देखिन्छ ।

मल्लकालमा लिच्छविकाल र मध्यकालका हरगौरी फलकको अनुकरणमा अनेक फलक बनाइएका देखिन्छन् तर ती कलात्मक दृष्टिकोणबाट हीन छन् तर तत्कालीन धार्मिक परम्पराको क्रममा यिनै मूर्तिफलकको पनि महत्त्वपूर्ण स्थान रहेको थाहा पाइन्छ ।

---

[१] "उमामहेश्वर स्थापन" पनि भनिएको छ ।
[२] Medieval Nepal III. P. 5

७

पाटन कुम्भेश्वरको पूर्वपट्टि सानो मन्दिरभित्र कुनै देवताको पादपीठ (जलहरी) मा लेखिएको अभिलेख छ । अहिले यहाँ कुनै मूर्ति छैन ।

१. ॐ नमः श्री कुँभेश्वराय: सम्वत ५७१भार्दपद कृष्ण अ-
२. ष्टम्या तिथौ: श्रीमहालक्ष्मी भतारिका सम्वत् संपोन: दानप-
३. ति: श्रीकुंभेश्वर उपचारिक लुन्तराक जरारास भाऱ्या जिव-
४. नलक्ष्मी भरीस: । कृत अन (ने) न पुनेन शुभमस्तु सर्वजगताः ।[१]

टिप्पणी- यो अभिलेख कुम्भेश्वर मन्दिरका कुनै पुजारी, जसको नाम शिलालेखमा लुन्तराक जरारा दिइएको छ, र उनकी पत्नीले महालक्ष्मीको मूर्ति स्थापित गरी त्यस अवसरको सम्झनामा उत्कीर्ण गराइएको थाहा पाइन्छ । यस शिलालेखको धार्मिक महत्त्व छ । पहिले प्रस्तुत ने. सं. ५५६ को अभिलेख रहेको मूर्ति पनि यिनैले स्थापना गरेका थिए तर त्यसमा नाम सम्भवतः अशुद्ध रूपमा छ ।

पाटन कुम्भेश्वर मन्दिरको उत्तर पश्चिममा रहेको एक सानो मन्दिर (जसमा एक कुवा पनि रहेको छ) को पश्चिमी भित्तामा पूर्वाभिमुख मूर्तिको पादपीठको अभिलेख ।

१. (ॐ श्रे) योस्तु: सम्वत् ५५६ आषाढशुक्ल ६ श्री श्री श्री कुंभेश्वर उपचारिक लं
२. तरो जु भारो भाऱ्या जितलक्ष्मी भरीसहाप्रासकृत: थीरा भवतु शुभ:[१]

टिप्पणी- यो अभिलेख कुम्भेश्वरका पुजारी लंतरो (?) ले पत्नीसहित भएर एक देवताको स्थापना गरेको अवसरको संस्मरणमा लेखाएका हुन् ।

---

[१]यो अभिलेख अप्रकाशित छ ।

# भक्तपुरका राजा त्रैलोक्यमल्ल र वाराणसी

मध्य मल्लकालमा भक्तपुरका एक राजा त्रैलोक्यमल्ल शिवका भक्त थिए। उनी विश्वमल्लका छोरा थिए। विश्वमल्लकी रानी गङ्गादेवी थिइन्। बनारसको जंगमबाड़ी मठमा एक शिलालेख छ जसबाट गंगादेवीले जंगमबाडीका जंगम शैव सम्प्रदायका अनुयायीहरूको लागि केही जमीन दिइ पुण्यलाभ गरेकी थिइन् भन्ने कुरा थाहा पाइन्छ। यो अभिलेख निम्नतः छ।

ॐ नमः शिवाय चीदचीऊठी (?) विघ्रता सदेद्या
मोहपाशानां करुणापारावारः शिवो जयति ॥
वेदान्तस्य रहस्यं सर्वस्वं सकलभो (यो) गानां
अज्ञानप्रतिकूलं जगदनुकूलं शिवं नमत ॥१॥
मुरहरचरणासक्तिः प्रतिपत्तिः सकलशास्त्रेषु
या साऽस्य तु जगन्माता गङ्गादेवी चिरं जयति ॥२॥
यद्दानेन महेशपादकमले प्रेमैकबद्धस्पृहाः।
काशीवासमुपासते सुबहवः श्रीवीरशैवद्विजाः ॥३॥
यत्तेजोदहनप्रतापहृदयः प्रत्यर्थिभूमीपतिः
आहारेषु रुचिंदधा(धा)ति नियतंनाप्नोतिनिद्रांनिशि ॥
श्रीविश्वमल्लनृपतेः गङ्गादेवी सुतौ सुषुवे
त्रैलोक्यमल्लभूपतिस्त्रि भुवनमल्लश्च भूपालौ ॥४॥
विद्वन्मानसहंसमानससरः प्रत्यर्थिदावानलः
सद्विद्यावनिताविलास भवनो भक्तैकचिन्तामणिः
नेपालक्षितिपालमौलिमुकुटालंकारहीरांकुरः
श्रीमानेष विराजितेति सुकृतिस्त्रैलोक्यमल्लो नृपः
जयति त्रिभुवनमल्लो गुह्येश्वरी सेवा धारी

शत्रुपराभवकारी विनयतयाऽस्या मनोहारी ॥
पुत्राभ्यां सह भक्तियुक्तमधुरां तस्यायिकां च कृपाम्
प्राप्तः श्रीयुतमल्लिकार्जुनगुरुः शैवः शिवप्रीतये ॥
शैवप्रीतिमिमां च दैववशतो नष्टां पुनः सृष्टवान
सृष्टा चापि सिवार्पितां प्रतिदधे शैवागमाचारतः
शैवाचारकृतः शिवागमविधे शैवाः शिवालंबनाः
किं वा नैव न सन्ति हन्त जगति प्रख्यातसत्कीर्तये
किन्तु क्षान्ति विवेकशान्ति परमानन्दैकवीरस्तु यो
वेद श्रीयुतमल्लिकार्जुन यतिः शैवस्य तत्वान्वितः ॥
यानि हत्यादि पापानि कूटसाक्षादिकानि च ।
सर्वं भूमेः प्रदानेन नश्यन्ति सर्वदा ॥
योऽन्यदत्तां स्वदत्तां वा हरेद्भूमिं नराधमः
प्रपतत्यक्षये घोरे सरक्षश्चक्रकेऽनलैः ॥
श्रीनीलकण्ठशिवसन्निभवीरभद्र
श्रीविश्वनाथमठमेतमचीकरश्च
सद्धर्मसेतुमतुलां नरपालसंघा
मन्त्रीप्रधानसहिताः परिपालयन्तु ॥११॥

पुनः देशभाषा पूर्वकालस थ्वला वदमठ दयकव जयरुद्रमल्लदेव समास जुस्यं दुता थ्वनलीरत्नादेवीस्य तवच पादयंता ससतर दयकाव दुतान जयदेवरुद्रन स्वेयकाव वु लिलाकरो व २०० थ्वते वुलिला च काव श्रीनीलकण्ठेश्वरप्रीतिन जंगम ब्राह्मण मल्लिकार्जुनदेवरुन दुन्ता जुलो श्रीविश्वेश्वरस्थापना याङा नित्यकर्म पूजायात निमीतीन जंगम ब्राह्मण मल्किर्जुन देवरुन दुता वुरो व २४ मकर संक्रान्ती न घृतकं वनया यमाल कार्तिक मकर शिवरात्री थ्व स्वगुदी पर्वन क्षीरान्न पक्वान्नादि दयक मठस चोङल्लादि जुतो भो (थो ?) पयाके माता सरस्वती वुरो वं २ देंस निपोल देवलस षोलत पायमात दिनराजन दुन्ता वुरो व ४ देव पूजाया वल्पन जुलो भोगके यात ॥ सम्वत् ६६२ ज्येष्ठशुक्लाष्टम्यां तिथौ ॥ शिलाशासनम् ॥

यस्तै अभिलेख भदगाउँमा पनि छ जसमा राजाको नाम रणजित् मल्ल दिइएको छ र संवत् ८६२ । यो अभिलेख भदगाउँ बोलाछे टोलको जंगम मठमा छ अभिलेख निम्न प्रकारको छ ।[१]

[१] यो अभिलेख भक्तपुर अभिलेख सूचीमा छापिएको छ ।

जंगम ब्राह्मण मल्लिकार्जुनदेवरून दुन्ता जुलो श्रीविश्वेश्वरस्थापना याङा नित्यकर्म पूजायात निमीतीन जंगम ब्राह्मण मल्लिकार्जुन देवरून दुन्ता बुरो व २४ मकर संक्रान्तीन घृतकं वनया यमाल कार्तिक मकर शिवरात्री थ्व स्वगुदी पर्वन क्षीरान्न पक्वान्नादि दयक मठस चोङ्लादि जुतो भो ( थो ? ) पयाके माता सरस्वती बुरो वं २ देंस निपोल देवलस षोलत पायमात दिनराजन दुन्ता बुरो व ४ देव पूजाया वल्पन जुलो भोगके यात ।। सम्वत् ६६२ जेष्टशुक्लाष्टम्यां तिथौ ।। शिलाशासनम् ।।

यस्तै अभिलेख भदगाउँमा पनि छ जसमा राजाको नाम रणजित् मल्ल दिइएको छ र संवत् ८६२ । यो अभिलेख भदगाउँ बोलाछे टोलको जंगम मठमा छ । अभिलेख निम्न प्रकारको छ ।[१]

ॐ नमः शिवाय ।

चिद् चिद् ग्रन्थि भेत्ता संछेत्ता मोहपाशानाम् ।
करुणापारावार: सर्वाधार: शिवो जयति ।।
वेदान्तस्य रहस्यं सर्व्वस्व सकलयोगानाम् ।
अज्ञानप्रतिकूलं जगदनुकूलं शिवं नमत ।।
मुरहरचरणासक्ति: प्रतिपत्ति सकलशास्त्रेषु ।
यस्या: सेयं गङ्गा गङ्गा देवी चिरञ्जयति ।।
यद्दानेन महेशपादकमले प्रेमैकबद्धस्पृहा ।
काशीवासमुपासते सुबहवो विप्रा: पवित्राशया ।।
यत्ते जोदहनप्रतप्तहृदय: प्रत्यर्थिभूमीपति: ।
वाहानेषु (?) रुचिं दधाति नियते नाप्नोति निद्रांनिशि ।।
श्रीविश्वमल्लनृपतेर्गङ्गादेवी सुतौ सुषुवे ।
त्रैलोक्यमल्ल भूपं त्रिभुवनमल्लञ्च भूपालम् ।।
विद्वन्मानसहंसमानसमरप्रत्यर्थिदावानलः ।
सद्विद्यावनिताविलास भवनं भक्तैकचिन्तामणि ।।
नेपालक्षितिपालमौलिमुकुटालङ्कारहीराङ्कुरः ।
श्रीमानेष विराजतेऽति सुकृती त्रैलोक्यमल्लो नृप ।।
जयति त्रिभुवनमल्ल: त्रिभुवनमल्लाग्रगण्यता धारी ।
शत्रुपराभवकारी विनयनयास्यां मनोहारी ।।
पुत्राभ्यां सह भक्तपत्तम धुरामस्याँ वहन्त्याः कृपाम् ।

[१] यो अभिलेख भक्तपुर अभिलेख सूचीमा छापिएको छ ।

प्राप्य श्रीयुतमल्लिकार्जुनकृती शैवःशिवप्रीतये ।।
सम्वत् ६६२ ज्येष्टशुक्लषष्ठ्यान्तिथौ... ... .. ...
श्री २ जयरणजितमल्लमहाराजया पर्यावस... ..
सं. ८६२ पौषशुदि

उक्त दुवै अभिलेख त्रैलोक्य मल्ल अथवा उनकी आमा गंगादेवीको बनारससंग धार्मिक सम्बन्ध रहेको कुरा स्पस्ट रूपमा बताउँछन् । पहिलो अभिलेख गंगादेवीले बनारसमा राख्न लगाएकी थिइन् तर त्यसको अर्को प्रति भदगाउँमा पनि राखिएको हुनुपर्दछ जो हामीलाई प्राप्त भएको छैन । तर त्यसैको एक प्रति रणजित् मल्लले लेखाउन लगाई राजकीय समर्थन गरेर राखेको प्रमाण दोस्रो शिलालेख हो । यसैले दोस्रो शिलालेखमा अधिकांश कुरा पहिलो शिलालेखकै छन् ।

बोलाछे टोलमा रहेको जंगम मठ सम्भवतः त्रैलोक्यमल्ल अथवा उनकी आमा गंगादेवीले बनाएका हुन् । उनीहरू जंगम शैव सम्प्रदायका प्रभावमा परेका हुनाले नै उनीहरूले बनारसको जंगम मठलाई भूमिदान गरेका थिए यसैले यो अनुमान अधिकांश रूपमा ठीक पनि हुन सक्दछ ।

यी शिलालेखले बनारस र नेपालको धार्मिक सम्बन्ध बारे राम्रो संस्मरण सुरक्षित गरेका छन् ।



# नेपालको शैव धर्मको अन्ताराष्ट्रिय सम्पर्क

नेपाल शैव धर्मको प्रख्यात केन्द्र थियो भन्ने कुराको विश्लेषण माथिनै गरिसकिएको छ। एक शैव तीर्थको रूपमा प्रख्यात भएकोले भारतका शैव धर्मावलम्बी भक्तहरू पुण्यप्राप्तिको लागि यहाँ आउँदा हुन् भन्ने अनुमान गर्न सकिन्छ। यस कुराको विषयमा धेरै पुराना प्रमाण पाइदैनन् तर मध्यकालमा भारतीय तीर्थयात्रीहरू यहाँ यात्रा गर्न आएका केही प्रमाण पाइन्छन्।

नवौं शताब्दीका बंगाली राजा धर्मपालले गोकर्णको यात्रा गरेको उल्लेख पाइन्छ। तर यस गोकर्णको स्थान निर्धारण गर्नमा विद्वान्हरूको मतवैभिन्य छ [१]। कतिपय विद्वान्ले यसलाई नेपाल उपत्यकाको गोकर्णसंग सम्बद्ध गरेका छन्। गोकर्णको नाम साम्यको आधारमा धर्मपालले नेपाल उपत्यकाको गोकर्णको यात्रा गरेको बुझ्न सकिन्छ तर यसरी समता स्थापित गर्दैमा धर्मपालले नेपाल विजय गरेको मान्न चाहिं सकिंदैन। वाराह-पुराणमा नेपालको गोकर्णेश्वर र जलेश्वरको माहात्म्यको वर्णन पनि देखिएकोले [२] यहाँको गोकर्ण निकै प्राचीन तीर्थ रहेको बुझिन्छ। गोकर्ण प्राचीन तथा महत्त्वपूर्ण तीर्थ भएकोले धर्मपाल यहाँ आएका थिए भन्ने ज्ञात हुन्छ।

मध्यकालमा भारतका धेरै तीर्थयात्री नेपालमा तीर्थ गर्न आउँथे होलान् भन्ने अनुमान गर्न सकिन्छ। यस कुराको समर्थनमा हामीसंग केही प्रमाण पनि छन्।

नेपाल राजकीय संग्रहालयमा एक शिलालेख सुरक्षित राखिएको छ जसमा तिथि भाग नष्ट छ तर तत्कालीन राजाको नाम आनन्ददेव दिइएको छ। [३]

---

[१] Indian Antiquary 1892, P. 257 & Indian culture No. IV. P. 266.

[२] यस विषयमा नेपालका शैव तीर्थ शीर्षक अन्तर्गत विशेष विचार गरिएको छ।

[३] Medieval Nepal-III. D. R. Regmi. P. 15

अनुमानतः यस शिलालेखको तिथि नेपाल संवत् ४५० (वि. सं. १३८७) तिर मान्न सकिन्छ किनभने आनन्ददेवको नामोल्लेख भएको अरू दुइ अभिलेख पाइएका छन्।[१] यसमा वाराणसी का कोही शैव आचार्य (?) पशुपतिको दर्शन गर्न नेपाल आएको वर्णन गरिएको छ।[२] अभिलेख ठाउँ ठाउँमा भग्न भएकोले यस अभिलेखको विशेष अध्ययन गर्न सकिंदैन। संक्षेपमा यस अभिलेखले भारत र नेपालको धार्मिक सम्बन्धको एक शृंखला सुरक्षित गरेको छ।

नेपाल संवत् ५२३ (वि. सं. १४६०) को पशुपति चण्डेश्वर अभिलेख पनि यस प्रक्रममा एउटा महत्त्वपूर्ण सूचना दिन्छ। यसका नायक भट्टान्त नामधारी रहेकाले[३] यी पशुपतिका पूजारी रहेका होलान् भन्ने अनुमान गर्न सकिन्छ। आजसम्म भट्टान्तनामधारी दक्षिणभारतीय ब्राह्मणहरू पशुपति पूजारी भै आइरहेको कारण पनि यसैसंग सम्बन्धित छ कि भन्ने अनुमान हाम्रो मनमा उठ्न सक्दछ।

हांडीगाउँ सत्यनारायण स्थानमा यस प्रसङ्गमा अति महत्त्वपूर्ण सामग्रीतिर संकेत गर्ने एक शिलालेख छ। यो शिलालेख शिव परिवार फलक अथवा हरगौरी फलकको पादपीठमा लेखिएको छ र यसको तिथि नेपाल संवत ५३४ दिइएको छ।[४] उक्त अभिलेखमा मूर्ति बनाउने (बनाउन लगाउने) मानिसको नाम "महाराष्ट्रबाट आएका श्रेष्ठ ब्राह्मण श्री लक्ष्मीदेवसोम" (महाराष्ट्र[ा] गतो द्विजवर श्रीलक्ष्मीदेवसोम) दिइएको छ। उक्त विवरणबाट थाहा पाइन्छ कि महाराष्ट्रका जनता पनि नेपाल आई मूर्ति स्थापना गरेर शिलालेख उत्कीर्ण गराई स्मारक बनाउँथे। यसबाट प्रमुख शैव तीर्थको रूपमा अन्ताराष्ट्रिय रूपमा प्रख्यात भएको थाहापाइन्छ।

---

[१] क. पाटन बालकुमारी अभिलेख (ने. सं. ४३४) Medieval Nepal III D. R. Regmi P. 17

ख. चौपाटन अभिलेख-ऐजन-पृ १७-१८

[२] द्रष्टं (ष्टुं) पशुपति सेवानुगृहितुं च लोकान् नेपालं गुरुगिरिशतै-

[३] ऐजन-पृ. ३९-४०

[४] महाराष्ट्रगतो द्विजवर श्रीलक्ष्मीदेवसोमश्रमने तस्य भार्या श्री ... ... निमेको नाराय .....नवदुर्गाप्रासादा अग्रे कृतं।
Medieval Nepal- D. R. Regmi Vol. III P. 51

यही परम्परा आजसम्म चली आएको छ। आज पनि प्रतिवर्ष हजारौं भारतीय यहाँ आई पुण्यलाभ गर्दछन्।[१]



[१] उत्तर मल्ल कालमा पनि नेपालमा भारतका भक्तहरू आई देवताको स्थापना आदि गर्दथे भन्ने कुरा थाहा पाइन्छ। बालाज्यूमा भीमसेन (?) को मन्दिरको पश्चिमोत्तर कुनामा अगाडिपट्टि एक सानो स्तम्भ छ जसमा चारमुखमा गणेश आदि देवताको मूर्ति उत्कीर्ण गरिएको छ। स्तम्भमाथि साँढेको सानो मूर्ति बनाइएको छ। स्तम्भको पूर्व मुखमा दक्षिण भारतीय लिपि (सम्भवत: कन्नड) मा केही लेखिएको छ। स्तम्भकै पश्चिम पाटामा संवत् (नेपाल संवत्) ७०५ (वि. सं. १६४२) लेखिएको छ र भाव नन्दिकेश्वर स्थापित गरिएको जस्तो छ। यसबाट के अनुमान गर्न सकिन्छ भने कन्नड क्षेत्रका कोही सज्जन यहाँ आई नन्दिकेश्वरको स्थापना गरेका थिए जसको संस्मरणको लागि स्थानीय भाषा र आफ्नो देशको भाषा दुबैमा अभिलेख लेखाएका थिए। यस्तै अर्को उदाहरण पनि पाइन्छ। भदगाउँका राजा त्रैलोक्यमल्लले बनारसको जंगम मठमा रहेको जंगम जोगीहरूको लागि केही जमीनको दान गरेका थिए। यस कुराको प्रमाण बनारसमा जंगमबाडी मठमा रहेको शिलापत्र नै छ (द्रष्टव्य परिशिष्ट संख्या-८) पृ. १७०-१७१

# अध्याय–२

## १

## वैष्णव धर्म

नेपालमा वैष्णव धर्म पनि शैव धर्मपछि आर्को महत्त्वपूर्ण धर्मको रूपमा चलिआएको देखिन्छ। तर यस धर्मको इतिहास नेपालमा कति पुरानो छ भन्ने कुरामा धेरै भन्न हामीसंग प्रमाण छैन। तर भाषा वंशावलिमा कृष्ण नेपाल आई हाल उपत्यका, जो तलाउको रूपमा थियो, को प्रथम निर्माताको रूपमा वर्णन गरिएको छ। यस्तै वर्णन वराहपुराणमा पनि पाइन्छ जसमा कृष्णले पर्वतहरूलाई भत्काएर दानवहरूलाई मारेको कुरा लेखिएको छ।[१] उक्त विवरणबाट नेपालमा वैष्णव धर्म निकै पहिले प्रविष्ट भएको घटनाको संकेत प्राप्त गर्न सकिन्छ।

यहां वैष्णव धर्मको इतिहास स्पष्ट र ऐतिहासिक रूपमा मानदेव प्रथमको पालादेखि नै पाउन थालिन्छ तर वंशावलिहरूको आधारमा पूर्व मानदेवकालमा वैष्णव धर्मको इतिहासबारे केही लेख्न सकिन्छ।

गोपालवंशावलिमा राजा हरिदत्तवर्मालाई 'चतुशिखर' प्रदेशमा विष्णुको मन्दिर बनाए भनी वर्णन गरिएको छ।[२]नेपाल संवत् ३२० (वि. सं १२५७) को इचंगु अभिलेखमा राजा हरिदत्तले नारायणको (इचंगु नारायण) मन्दिरमा सिंह राखिदिएको कुराको उल्लेख गरिएको छ।[३]यस प्रमाणको आधारमा

---

[१]तत्र नागह्रदे घोरे स्थास्याम्यन्तर्जलेध्यहम्।
त्रिंशद्वर्षसहस्राणि सर्वभूतहिते रतः॥
यदा कृष्णिकुलोत्पन्नः कृष्णचक्रेण पर्वतान्।
पाटयित्वेन्द्रवचनाद्दानवान्निहनिष्यति (२१५–४१–४२)

[२]हिमवत्संस्कृति, १–१, पृ. १०

[३]श्रीमत्पश्चि (मप) र्वतेन्द्रशिखरप्रासादवेदीलसद् द्वारे श्री हरिदत्तभूपतिकृतन्नराय.. स्युभौ सिंहौ... ...—— अ. सं. भाग –६. पृ. २७

हरिदत्त राजालाई गोपाल वँशावलिमा भनिएको कुरालाइ सत्य मान्नु पर्ने भएको छ। यिनको समय अन्दाजी वि. सं. २५०–३०० तिर मान्न सकिन्छ। यस रूपमा नेपालमा वैष्णव धर्म निकै प्राचीन कालमैं लोकप्रिय भैसकेको कुरा स्पष्ट हुन्छ।

मानदेव प्रथमको समयदेखि नेपालमा वैष्णव धर्मको इतिहास विशेष स्पष्ट भएर आएको देखिन्छ। नेपालको पहिलो अभिलेख चांगुनारायण शिलालेखमा प्रारम्भमा चांगुनारायणको स्तुति गरिएको छ जसबाट मानदेव विष्णुका भक्त रहेछन् भन्ने स्पष्ट थाहा पाइन्छ। यस प्रसङ्गमा चांगुनारायणको स्थापनाको विषयमा पनि विचार गर्नु आवश्यक छ। चांगु शिलालेखमा स्तुति श्लोकमा विष्णुलाई 'दोलाद्रि' मा बस्ने भनिएको छ। नेपाल माहात्म्यमा चांगुनारायणको उत्पत्तिबारे 'दोलाद्रि' को उल्लेख गरिएको छ। यस कुराबाट चांगुनारायणको प्राचीनताबारे केही अनुमान गर्न सकिन्छ।

मानदेवले पशुपतिनेर तिलगङ्गामा र लाजिम्पाटमा त्रिविक्रम मूर्ति स्थापित गरेर तिनको पादपीठमा अभिलेख पनि लेखाएका थिए।[1] ती दुवै त्रिविक्रममूर्ति एक समान छन् र तिनका अभिलेख पनि एकै किसिमका र एकै संवत्‌का छन्।[2] अभिलेख अनुसार ती मूर्ति मानदेवले आफ्नी आमा राज्यवतीको पुण्यको लागि स्थापित गरेका थिए र तिनको लागि भव्य मन्दिर पनि बनाएका थिए।[3] हाल मन्दिर त बाँकी रहेको छैन केवल मूर्ति बाँकी रहेका छन्।

यस प्रसंगमा मानदेव वैष्णव धर्मको कुन सम्प्रदाय मान्दथे भन्ने कुराको चर्चा गर्नु आवश्यक छ। हुनत मानदेवका शिलालेखमा उनको वैष्णव

---

[1] नोली–पृष्ठ–६

[2] पहिले ती दुई अभिलेखमा एकमा ३८६ र अर्कोमा ३८७ संवत् पढिएको थियो तर हाल दुवैमा संवत् ३८६ रहेको मानिन्छ।

[3] मातुः श्री राज्यवत्या हितकृतमनसः
सर्व्वदा पुण्यवृद्ध्यै।
राजा श्रीमानदेवः शुभविमलमतिः
पात्रदानाम्बुवर्जी।
लक्ष्मीवत्कारयित्वा भवनमिह शुभं
स्थापयामास सम्यक्।
विष्णुं विक्रान्तमूर्तिं सुरमुनिमहितं
सर्व्वलोकैकनाथम्।

सम्प्रदायको कतै उल्लेख थएको छैन तर आनुषङ्गिक प्रभावहरूको आधारमा उनको सम्प्रदाय विशेष बारे केही भन्न सकिन्छ ।

हालसालै थाहा पाइएको केलटोलको अभिलेखमा मानदेवले श्रुति र धर्मशास्त्रले आज्ञा गरेको धार्मिक क्रिया गरेर लोकको सुखको लागि पानी (कुलो) ल्याए भनी लेखिएको छ ।[१] उक्त अभिलेखमा क्रिया शब्द विशेष विचारणीय छ । हामीले माथि शैव सम्प्रदायको अध्ययन प्रसंगमा क्रिया शैवधर्मको एक विशेषता बारे चर्चा गरिसकेका छौं । एक विद्वान् एफ ओट्टो श्रेडरले यस प्रसंगमा भनेका छन् कि शैवधर्मको "क्रिया" वैष्णव धर्मको पाञ्चरात्र सम्प्रदायमा पनि ग्रहण गरिएको थियो ।[२] यस उदाहरणबाट मानदेवले पानी ल्याउने (अथवा धारो वा प्रणालिका बनाउने) क्रिया गरेको आदर्शको सम्बन्ध पाञ्चरात्र सम्प्रदाय संग रहेको अनुमान गर्न सकिन्छ । भारतमा पाञ्चरात्र सम्प्रदाय निकै महत्त्वपूर्ण र प्रभावशाली थियो ।

मानदेवले चांगुनारायणमा गरुडस्तम्भ खडा गराइ त्यसमा अभिलेख पनि लेखाएका थिए । वैष्णव धर्ममा गरुडस्तम्भ खडा गराउने परम्परा लोकप्रिय रूपमा रहेको थाहा पाइन्छ । ईसा पूर्व द्वितीय शताब्दीमा भारतमा एक ग्रीकले बेसनगरमा गरुडस्तम्भ खड़ा गराइ त्यसमा अभिलेख समेत लेखाएका थिए । गुप्त कालमा पनि वैष्णव राजाहरूले स्तम्भ गाडी त्यसमा अभिलेख लेखाएका थिए । चन्द्रगुप्त द्वितीय र स्कन्दगुप्तको समयमा यस्ता स्तम्भ गाडिएका थिए । भारतमा गुप्त राजाहरूले वैष्णव धर्मसंग सम्बद्ध स्तम्भ खडा गराउने परम्परालाई लोकप्रियता प्रदान गरेका थिए जसको प्रभाव नेपालको चांगु नारायणको स्तम्भमा पनि देखिन्छ ।

यस प्रसंगमा मानदेवले चलाएको मानाङ्कको अध्ययन हुनु आवश्यक छ । उक्त पैसाको अगाडिपट्टि देवीको मूर्ति र श्रीभोगिनी अभिलेख छ र पृष्ठ–भागमा सिंह र श्रीमानाङ्क अभिलेख छ ।[३] पैसाको अगाडिपट्टि रहेको स्त्रीमूर्ति कमलको आसनमा बसेको देखिन्छ जसलाई लक्ष्मीको मूर्ति मान्नु पर्दछ । मानदेव आफू वैष्णव भएकाले आफ्नो मुद्रामा विष्णुकी शक्ति लक्ष्मीलाई स्थान दिएका हुन्

---

[१] (तेने)दं श्रुतिधर्मशास्त्रविहितां धर्मक्रियाङ्कुर्वता लोकानां सुखकाम्यया सुविमलम्पानीयमानाय्य ... —पूर्णिमा, पूर्णाङ्क ६, पृ. २

[२] Introduction to Pancharatra– and Ahirbudhnya Samhita–P. 22

[३] द्रष्टव्य चित्रफलक ११ (ख)

भन्ने कुरा स्पष्ट छ । हनुमान ढोका मुद्रा संग्राहालयमा सुरक्षित मानाङ्कको एक प्रकारमा पृष्ठभागको सिंहको अगाडिपट्टि(i)यस्तो चिह्न बनाइएको छ जो गरुडस्तम्भ चक्रस्तम्भ अथवा मीनस्तम्भको सांकेतिक हो । वैष्णव धर्ममा मीन अथवा चक्रस्तम्भ बनाउने परम्परा लोकप्रीय थियो । सम्भवतः मानदेवले चांगुमा गरुडस्तम्भ खडा गराएको घटनाको संस्मरणमा यस किसिमको मुद्राचलाएका थिए ।

मानदेवके पालामा निरपेक्षले चांगुमा आपना बितेका माता पिताको सालिकको स्थापना गरी अभिलेख पनि लेखाएका थिए ।[१] हाल सालिक हराइ-सकेको छ । अभिलेख अनुसार सालिक बनाउनाको कारण बिछुड़िएका माता पितासंग आर्को जन्ममा भेट होओस् भनी लेखिएको छ ।[२] चांगु नारायणमा सालिक (र अभिलेख) राखिएकोले यस कार्यलाई वैष्णव धर्मसंग सम्बद्ध गर्नु पर्दछ । यस उदाहरणबाट तत्कालीन वैष्णव धर्ममा सालिक बनाउने परम्परा पनि देखिन्छ । भारतमा वैष्णव धर्ममा भक्तहरूले आफ्नो आफ्ना सम्बन्धीको सालिक राखेको वर्णन पाइंदैन अतः वैष्णव धर्ममा सालिक राख्ने परम्परा नेपालको प्रथम मौलिकता हो भन्ने कुरा स्पष्ट थाहा पाइन्छ ।

## वेदव्यासको पूजा

हाँडीगाउँमा सत्यनारायन स्थानको अगाड़िपट्टि एक गरूड़स्तम्भ छ जसमा एक लामो अभिलेख उत्कीर्ण भएको छ । यसमा तिथि संवत र राजाको नाम छैन तर लिपिको आधारमा मानदेव अथबा वसन्तदेवको पालाको मान्न सक्दछौं । यस अभिलेखको धार्मिक र साहित्यिक दुबै रूपमा ठूलो महत्त्व छ ।

उक्त अभिलेख निकै भग्न भएकोले यसको आधाभन्दा बढी महत्व कम भएको छ ता पनि यसले भेरै कुरा बताएको छ । अभिलेखको अन्त्यभागमा 'भगवतो द्वैपायनस्य स्तोत्रं कृतमनुपरमेण'[३] (अनुपरमले बनाएको द्वैपायनको स्तोत्र) भनिएको छ यसबाट त्यो अभिलेख अनुपरम नामका व्यक्तिले वेदव्यासको स्तुतिमा लेखाएका रहेछन् भन्ने थाहा पाइन्छ । अभिलेखमा ३४ श्लोकमा वेदव्या-

---

[१] तस्यैवशुद्धयशसश्चरणप्रसादात्
पित्रोः कृताकृतिरियन्निरपेक्षनाम्ना
कृत्वा च तां बिधिवदत्र यस्ति पुण्यं
पुण्येन तेन पितृदैवत भागिनो मे। — नोली पृष्ठ–१२

[२] पित्रोः प्रवासगतमो ध्रुवमस्तु योगः
अन्यत्र जन्मनि विशुद्धवतीति कृत्वा

[३] सं. स. १; २–३, पृ १२

सको उच्च र ललित शब्दमा स्तुति गरिएको छ।

व्यासको विष्णुको एक अवतारको रूपमा कता कतै उल्लेख पाइन्छ। तर व्यास सम्बन्धी शिलालेख र प्राचीन मूर्ति भारतमा आजसम्म पाइएको छैन।

यस प्रसंगमा उक्त अभिलेखको त्यसैको अगाडि रहेको तथाकथित सत्यनारायण स्थान अथवा मूर्तिको के सम्बन्ध छ यसको पनि विचार हुनु पर्दछ। मन्दिरभित्रको मूर्ति निकै बिग्रिएको अवस्थामा छ तर त्यसको सामान्य विवरण यस प्रकारको छ।

एक सानो बेदीमा मूर्ति उभिएको छ। चार हात छन् जुनमध्ये माथिल्ला दुइ हातमध्ये देब्रे भांचिएको—दाहिने पनि केही भांचिएको छ तर चक्र लिए जस्तो देखिन्छ। तल्लोपट्टि देब्रे हातमा शंख र दाहिने वरद मुद्रामा छ। घांटीमा गहना छ–। घाँटीका दुइ तिर दुइ डल्ला छन् जसको ब्याख्या गर्न सकिँदैन।

मूर्तिको वर्णन विष्णुको हो भन्ने कुरामा संका लाग्दछ वरद मुद्रा विष्णुको लोकप्रिय मुद्रा होइन। सम्भवतः (पैरै जसो) यो मूर्ति वेदव्यासकै हो यसैले अनुपरमले त्यसको अगाडि उनको स्तुति लेखी गरुडस्तम्भ पनि खडा गराएका थिए।

प्राचीन कालमा नेपालमा वेदव्यासको पूजा आजा लोकप्रिय थियो भन्ने कुराको समर्थन लिच्छविकालकै आर्को अभिलेखले गरेको छ। वसन्तदेवको पालाको पाटन खपिंछेको अभिलेखमा याज्ञिक विप्रसेनले भगवान् बेदव्यासको कारण पूजाको लागि केही जग्गा दिएको वर्णन गरिएको छ र त्यसैमा अरूले पनि माला आदिको लागि जग्गा दिएको वर्णन गरिएको छ।[१] यसबाट पनि वेदव्यासको मूर्ति खपिंछेमा रहेको कुरा थाहा पाइन्छ यद्यपि उक्त मूर्ति कहाँ छ थाहा पाउन सकिएको छैन तर त्यसबेलामा बेदव्यासको मूर्ति रहेको निश्चित प्रमाण उक्त अभिलेखहरूले प्रस्तुत गरेका छन्।

यस विवरणबाट लिच्छविकालमा नेपालमा वैष्णव धर्मको केही विशेषता रहेको कुरा स्पस्टिन्छ।

लिच्छविकालमा वैष्णव राजाहरू पनि निकै थिए। वसन्तदेव पनि वैष्णव धर्म मान्दथे भन्ने कुरा थाहा पाइन्छ। उनका सग्ला दुई अभिलेखका शीर्षभागमा

---

[१]याज्ञिक विप्रसेनेन वेदकृताम्ना (स्था) य भगवते कारणपूजार्त्थम्ब्राह्मणप्र्‌ुवसेनेन दत्तन्दक्षिणकोल्लीग्रामे भूशतद्वयम्पिण्डकञ्च वि (द्री) हिकस्य मानिकया १५० ब्राह्मणबृद्धिषेणेन पिकङ्कूलप्रदेशे मालार्त्थं पिण्डकमानि ७ याज्ञिकवेदभट्टेन दत्तं दुंलम्ग्रामे भू ३० पिण्डक १२ अ. सं. भाग–१. पृ. २५

बीचका चक्र र त्यसका दुइतिर शंखको चित्र बनाइएको छ ।[१] उक्त चिन्ह विष्णुका चिन्ह हुनाले वसन्तदेवलाई वैष्णव मान्न केही अट्को पर्ने छैन । वसन्तदेव वैष्णव थिए भन्ने कुराको पुस्टि उनको 'परमदैवत' उपाधिबाट पनि हुन्छ । उनका दुइ अभिलेखमा उनलाई उक्त उपाधि दिइएको छ ।[२] भारतका शिलालेखमा यो उपाधि वैष्णव धर्मानुयायीहरूले ग्रहण गरेको देखिएकोले[३] यो उपाधि धारण गर्ने वसन्तदेव पनि वैष्णव धर्मानुयायी थिए भन्ने थाहा पाइन्छ ।

वसन्तदेवका छोरा वामनदेव पनि वैष्णव धर्म मान्दथे । उनको एक मात्र ज्ञात शिलालेख नारायणको पादपीठमा लेखिएको छ र अभिलेखमा पनि उनले वामनस्वामिलाई जग्गा दान गरेको कुरा लेखिएको छ ।[४]

पूर्व अंशुवर्माकालीन लिच्छवि राजाहरू मध्ये गणदेव र शिवदेव पनि वैष्णव धर्मानुयायी रहेका ज्ञात हुन्छन् । गणदेवका दुइ सग्ला अभिलेखमा वसन्तदेवको शिलालेखको शीर्षभागमा झैं चक्र र त्यसका दुइतिर शंख बनाइएको छ ।[५] शिवदेवका ६ ओटा अभिलेखका शीर्षभागमा उही वैष्णव चिन्ह उत्कीर्ण भएको छ ।[६] उनकै लेले अभिलेखको शीर्षभागमा 'अर्धचन्द्राकार शिरोभागमा

---

[१]क. जैसी लगनटोल अभिलेख–नोली पृ. २०
ख. चौकीटार वलम्बू अभिलेख–नोली–पृ. २२
वसन्तदेवका अरु अभिलेखका शीर्षभाग भग्न भएका छन ।

[२]क. आदिनारायणथानकोट अभिलेख–नोली पृ. १८–१६
ख. जैसी लगनटोल अभिलेख–नोली पृ. २०

[३]द्रष्टव्य–Indian Epigraphy– By– D. C. Sircar–P. 347.

[४]भगवतो वामनस्वामिनः चेत्रं लेंदुप्रदेशे भूमि ४० पिण्डकमा २६ शट्टम्मि भूमि १० पिण्डकमा ४ गम्मे भूमि १० पिण्डकमा ४–अ. सं. भाग–१ पृ २७

[५]क. बलम्बु अभिलेख–नोली–पृ. २६–२७
ख. चपलिगाउँ अभिलेख–नोली–पृ. २६

[६]क. गोलमाधिटोल भदगाउँ–नोली–पृ. ३२
ख. तुलाच्छेटोल भदगाउँ–नोली–पृ. ३३
ग. धरमपुर–नोली–पृ. ३४
घ. सतुङ्गल–नोली पृ. ३७
ङ. टोखा–नोली पृ. ३८–३६
च. बनेपा–नोली पृ. ४४–४५

ठूलो चक्र' बनाइएको छ ।[१] चक्रलाई यसरी राख्नु यस कालको मौलिक धार्मिक कलाको विशेषता देखिन्छ । त्यसै अभिलेखमा 'भगवद्वासुदेवब्राह्मणगोष्ठिकानाम्'को उल्लेख गरिएको छ । उधृत वाक्यबाट त्यस कालमा 'वासुदेव-ब्राह्मणहरूको गोष्ठी' रहेको थाहा पाइन्छ । 'वासुदेव ब्राह्मण' एक वैष्णव सम्प्रदायको नाम रहेको थाहा पाइन्छ । हुन त यस नामको कुनै वैष्णव सम्प्रदाय-बारे अरू स्रोतबाट थाहा पाइँदैन तर यो नेपालमैं संघटित एक वैष्णव सम्प्रदाय रहेको अनुमान गर्न सकिन्छ । यसको नामको आधारमा यसका अनुयायी ब्राह्मण मात्र रहन्थे भन्ने अन्दाजी गर्न सकिन्छ । यस उदाहरणबाट नेपालमा वैष्णव धर्मको मौलिक विकास भएको थाहा पाइन्छ यति मात्र हैन यस कुराबाट नेपालले आफ्नो साँस्कृतिक विशेषता संकेतित हुन आएको देखिन्छ ।

अंशुवर्माको व्यक्तिगत र राजधर्म भिन्न भए पनि वैष्णव धर्मलाई सरकारी मान्यता दिएका थिए भन्ने कुरा उनको हाँडीगाउँ अभिलेखबाट थाहा पाइन्छ । हाँडीगाउँका दुइ अभिलेखमध्ये ३० संवत्को अभिलेखको शीर्षभागमा चक्र र शंखको चित्र बनाइएको छ । यसभन्दा पहिलेका अभिलेखमा चक्र र त्यसका दुइतिर शंख बनाइन्थ्यो तर यस अभिलेखमा त्यसो नभई आकै रूपमा त्यो परम्परा परिवर्तित भएको देखिएकोले अंशुवर्माको वैष्णव धर्मप्रति कस्तो भावना थियो भन्ने कुराको केही अमुमान लगाउन सकिन्छ ।

अंशुवर्माको पालामा नेपालमा कुन कुन वैष्णव देवता (अथवा मन्दिर) विशेष महत्वपूर्ण थिए भन्ने कुरा हाँडीगाउँको ३२ संवत्को अभिलेखबाट थाहा पाइन्छ । उक्त अभिलेखमा अंशुवर्माले रामेश्वर, साम्बपुर, नरसिंहदेव, भुम्भुक्किकाजलशयनलाई केही आर्थिक सहायता दिएको कुरा लेखिएको छ । उक्त नामका मन्दिरहरूको आधुनिक स्थान निर्धारण गर्दा धेरै समस्या पर्दछन् । पहिलो रामेश्वरलाई हाल मृगस्थलीनेर रहेको रामको मन्दिरसग सम्बद्ध गर्न सकिन्छ । रामेश्वर नामको कुनै मन्दिरको अरू उल्लेख भएको पाइदैन अतः यो अनुमान गरिएको हो ।[२] यस्तै समस्या साम्बपुरमा पनि छ । साम्ब विष्णुको चतुर्व्यूहमध्ये एकको रूपमा प्राचीन कालमा पूजिन्थे अतः उनैको नाममा कुनै शहर बनेको हुनु असम्भव छैन–शाब्दिक अर्थबाट त यही अर्थग्रहन हुन सक्दछ । यति विचार गरिसकेपछि पनि त्यस काल्पनिक शहरलाई कहाँ रहेको मान्ने

[१] अ. सं. भाग-१ पृ. २६

[२] रामेश्वरलाई प्राय: शैव धर्मसंग सम्बद्ध गरिन्छ तर यहाँ कर्मधारय समास (रामश्चासौ ईश्वरः) को रूपमा लिई यस्तो विचार गरिएको हो ।

आर्को समस्या छ। यदि उपत्यकाका चार नारायणलाई विष्णुको चतुर्व्यूहसंग सम्बद्ध गर्ने हो भने यिनै चार नारायण मध्ये एकसंग सम्बद्ध शहरलाई साम्बपुर भनिएको हुनु पर्दछ।[1]

उक्त अभिलेखको नरसिंहदेव कसको परिचायक हो यो पनि स्पष्ट बुझ्न गाह्रो छ। त्यसले लिच्छविकालमा नृसिंहको मूर्ति मन्दिरमा स्थापित भई लोकप्रिय भएको अनुमान हुन्छ तर आजसम्म लिच्छविकालिक कुनै नृसिंह मूर्ति प्राप्त गर्न सकिएको छैन अतः यसबारे पनि अनुमान मात्र आधार रहन गएको छ। शिवदेव प्रथमको बुढानीलकण्ठको अभिलेखमा एक नरसिंह पाञ्चालीको उल्लेख गरिएको छ।[2] लिच्छविकालमा देवताका मन्दिरसंग पाञ्चाली सम्बद्ध गरिन्थ्यो भन्ने कुरा तात्कालिक शिलालेखहरूबाट थाहा पाइन्छ।[3] बुढानीलकण्ठ-मा रहेको शिलालेखबाट त्यसको नाम थाहा पाइएकोले नरसिंहको मन्दिर पनि त्यतै रहेको अन्दाजी गर्न सकिन्छ।

त्यसै अभिलेखमा उल्लिखित "भुम्भुक्किका जलशयनको" व्याख्या गर्नु आर्को समस्या छ। उक्त शब्दको पूर्व भाग संस्कृतेतर छ र उत्तरभाग चाहिं संस्कृतको। उत्तर भागको शब्दको अर्थ चाहि पानीमा सुत्नु हुन्छ जसको संकेत बुढानीलकण्ठसंग हुनु अधिक सम्भव छ।[4] आज नेवारी भाषामा बुढानीलकण्ठ-लाई 'भुइजशिरानारन्' भनिन्छ-यसबाट लिच्छविकालको 'भुम्भुक्किका' भुइज शिरा (शिरा ?) को रूपमा पनि पछि आएको देखिन्छ।

हाँडीगाउँ शिलालेखबाहेक अंशुका दुइ शिलालेखमा शीर्षभागमा वैष्णव चिन्ह बनाइएको छ।[5] यसबाट अंशुवर्माको वैष्णव धर्मप्रति राम्रो व्यवहार थियो

---

[1]भारतमा गुजरात प्रदेशमा मुल्तानमा पनि साम्बपुर रहेको थाहा पाइन्छ। त्यो स्थान पनि वैष्णव धर्मको राम्रो क्षेत्र रहेकोले अंशुवर्माको गुजरातसंग केही सम्बन्ध रहेछ कि भन्ने अन्दाजी गर्न पनि सकिन्छ।

[2]नोली-पृ. ३५

[3]उदाहरणको लागि-ध्रुवदेव र जिष्णुगुप्तको मीननारायण अभिलेकको 'पूजा पाञ्चाली'-नोली पृ ६८-६६; द्वितीय शिवदेवको सोना गुठी भृङ्गारेश्वर अभि-लेखको भृङ्गारेश्वर पाञ्चालिक—नोली-पृ. १०६-११०. इत्यादि

[4]अरू विद्वान्हरूले अंशुवर्मा भन्दा बीस वर्षपछि शासन गर्ने विष्णुगुप्तको पालामा बुढानीलकण्ठको स्थापना गरेको मानेका छन्।

[5]क. सांगा — दुइटा चक्र यसमा छ-नोली पृ. ५२

ख. सुन्धारा पाटन-शंख चक्र शख-नोली पृ. ५३

येंगाहिटी लगनटोल अभिलेखको शीर्षभागमा चक्र र दुइ शंख बनाइएको छ ।[१] लिच्छविकालका अर्का योग्य शासक नरेन्द्रदेवका तीन शिलालेखका शीर्षभागमा चक्र र शंखको चित्र उत्कीर्ण गरिएका छन् ।[२] यस उदाहरणबाट नरेन्द्रदेवले पनि (आफू पाशुपत र माहेश्वर भएर पनि) वैष्णव धर्मको राम्रो सम्मान गरेको थाहा पाइन्छ । त्यस समयमा 'वराह यात्रा' (विष्णुको एक अवतार वराह सम्बन्धी धार्मिक जात्रा) वैष्णवहरूको महत्त्वपूर्ण यात्रा रहेको थाहा पाइन्छ । नरेन्द्रदेवको अनन्तलिङ्गेश्वर अभिलेखमा त्यसको उल्लेख गरिएको छ । त्यस प्रसङ्गबाट ज्येष्ठ शुक्ल एकादशीमा उक्त यात्रा मनाइन्थ्यो भन्ने कुरा थाहा पाइन्छ ।

द्वितीय शिवदेवका अभिलेखबाट पनि वैष्णव धर्मको इतिहासबारे केही कुरा थाहा पाइन्छ । उनको च्यासलटोल पाटन अभिलेखमा 'नारायणको मन्दिरको दशमी गौष्ठिक'को उल्लेख गरिएको छ ।[३] यस विवरणबाट नारायणको कुनै मन्दिरको व्यवस्था आदिको लागि एक गोष्ठी बनेको थाहा पाइन्छ । शिवदेवकै पालामा पाटन मच्छिन्द्र (मत्स्येन्द्र) नाथको मन्दिरनेर वलरामको मूर्ति स्थापित गरिएको थियो । त्यो मूर्ति अद्यापि छँदैछ । त्यसको पादपीठमा १०६ संवत् दिइएको छ ।[४]

यसै समयका अरू दुइ अभिलेख लिच्छविकालको वैष्णव धर्मको परिचय दिन्छन् । वीरपुस्तकालयमा सुरक्षित विष्णुको मूर्तिको पादपीठमा लिच्छविलिपिमा एक अभिलेख छ ।[५] यो मूर्ति नक्सालको हो । संवत् २०७ (अन्दाजी वि. सं. ८४०) को हनुमान ढोका अभिलेखमा पनि 'भक्त्या विष्णो समुद्दश्य' भनिएको छ ।[६]

---

युगस्याग ... स्थित ... .. जलधिजलत्तालिताङ्गस्य शौ (रेः) ... त्पर्या ... ... स्थगितसुखगतिश्रेयसां जृम्भितं वः — नोली पृ. ७४

[१] अनन्तनागाधिप भोग भासुरे जलाशये शान्ततमं मनोहरं मुरारिरूपं यदशेत देहिनां शिवाय तद् वो विदधातु मण्डलम्— नोली — पृ. ८१

[२] क. येंगाहिटी लगन काठमाण्डू–नोली–पृ–८८ ख. लुम भ्या पाटन–नोली–पृ. ९०–९१ ग. कसाईटोल चौपाटन–नोली–पृ. ९२–यसमा चक्र मात्र छ ।

[३] नोली—पृष्ठ–१११

[४] अ. सं. भाग ५. पृ१०

[५] पूर्णिमा, ६, पृ ५

[६] अ. सं. भाग–५. पृ. १२

यसरी अध्ययन गर्दा लिच्छविकालमा वैष्णव धर्मको निकै लोकप्रिय स्वरूप रहेको थाहा पाइन्छ। हुन त शैव धर्मको तुलनामा वैष्णव धर्मको त्यति प्रभावकारी र महत्वपूर्ण स्थान रहेको थाहा नपाइए पनि यसका केही विशेषता यहाँ स्पष्टिएको पनि देखिन्छ जस्तो वेदव्यासको पूजा, वासुदेव ब्राह्मण अम्प्रदाय आदि।

मध्यकालमा पनि वैष्णव धर्म उत्तिकै लोकप्रिय रूपमा रहेको कुरा तात्कालिक शिलालेखहरूले स्पष्ट बताएका छन्। यस समयको पहिलो वैष्णव अभिलेख नेपाल संवत् १७६ (वि. सं. १११३) को चाँगु अभिलेख हो।[१] यो अभिलेख निकै भग्न अवस्थामा रहेकोले वैष्णव धर्मसम्बन्धी शब्दहरू त यसमा बाँकी रहेका छैनन् तर नारायण मन्दिरमा रहेकोले त्यसलाई वैष्णव धर्मसम्बन्धी मान्नमा गाह्रारो छैन।

मध्यकालिक नेपालमा पनि गरुडस्तम्भ खडा गर्ने परम्परा कायमै रहेको कुरा भक्तपुर तिलमाधव स्थादको अगाडि रहेको गरुडस्तम्भले बताएको छ। त्यस स्तम्भमा २८३ नेपाल संवत्को अभिलेख छ।[२]

यसै समयका अरू केही लभिलेख मध्यकालीन नेपालमा वैष्णव धर्मको क्रियाशीलता स्पष्टयाउँछन्। नेपाल संवत् २९६ को चाँगु अभिलेखमा विष्णुको पूजा गरिएको वर्णन परेको छ।[३] यस अभिलेखको उद्देश्य त्यति स्पष्ट नभए पनि यसबाट विशाखादिदेवले आफ्ना दाजुको स्वर्गप्राप्तिको लागि विष्णुको मूर्ति स्थापना गरेको अन्दाजी गर्न सकिन्छ।[४] उक्त अभिलेखको अन्त्यमा एक राम्रो सुभाषित दिइएको छ जो निम्नतः छः

---

[१] Medieval Nepal–III, P. 4.

[२] Medieval Nepal vol. III. P. 6–7

[३] ऐजन – पृष्ठ- ९

[४] भ्रातुर्विजयदेवस्य स्वर्गसम्प्राप्तिहेतवे।
श्रीविशाखादिदेवेन जनन्या मधुकश्रियः॥
आज्ञां अजमिवाषाय मूर्ध्ना दोलाचलस्थिते।
कृष्णस्य विधिवद्भक्त्या विष्णोरर्च्चा निवेदिता॥
पुण्येनानेनलोकोऽयं सुखी भवतु सर्वदा। उद्धृत श्लोकमा कृष्ण र विष्णु नामको उल्लेख गरिएको छ जसबाट विष्णुको अवतार कृष्णको मूर्ति स्थापित भएको कुरा स्पष्ट छ। हाल अभिलेख रहेको कृष्णको मूर्ति छैन गणेशको मूर्ति रहेछ छ।

परार्थकरणीयैव प्रवृत्तिर्हि महात्मनाम् ॥

( ठूला मानिसहरूको प्रवृत्ति परोपकार गर्नु नै हुन्छ । )

त्यस सुभाषितले वैष्णव धर्मको आदर्शतिर संकेत गरेको छ । प्रेम र दया वैष्णव धर्मको मूल आदर्श हो ।

नेपाल संवत् ३२०*को विजयकामदेवको पालाको इचंगु अभिलेख पनि वैष्णव धर्मको मध्यकालीन इतिहासमा राम्रो ठाउँ ओगट्दछ । यद्यपि अभिलेख अति जीर्ण अवस्थामा छ तर बाँकी बचेका शब्दहरूमध्ये केही वैष्णव दर्शनका लोकप्रिय शब्द हुन । त्यसमा 'राग' को उल्लेख गरिएको छ ।[१] यो शब्द वैष्णव दर्शनमा निकै लोकप्रिय छ ।[२] यसैमा एक मन्दिरको वर्णन पनि गरिएको छ[३] जो इचंगुकै नारायण मन्दिरको हो भन्ने कुरामा शङ्का प्रकट गर्नु परोइन ।

मल्लकालमा पनि वैष्णव धर्मको उही परम्परा रह्यो तर यस कालमा वैष्णव अभिलेख शैव अभिलेखभन्दा कम पाइन्छन् । नेपाल संवत् ५२८ को अभिलेख लेखिएको एक खम्बा सूर्यमाढिटोल भदगाउँमा छ ।[४] यसमा नारायण-को स्तुति गरी मंगलाचरण गरिएको छ । मल्लकालका प्रख्यात राजा धर्ममल्लको उपाधि दैत्यनारायण थियो[५] जसबाट उनी वैष्णव धर्म मान्दा रहेछन् भन्ने थाहा पाइन्छ । उनैका भाइ ज्योतिर्मल्ललाई पनि "दैत्यनारायणावतार" भनिन्थ्यो[६] । यसबाट यिनी पनि वैष्णव धर्मलाई पनि आदर गर्दथे भन्ने थाहा पाइन्छ ।

---

*श्री डिल्लीरमण रेग्मीज्यूले यस अभिलेखमा ३१५ संवत् पढ्नु भएको छ—Medieval Nepal–III. P. 10–11.

[१] रागाद्यन्तकमूर्तिस्तमक्तिमैं (त्या)-दिरागायतिः । षट्कर्माभिरतिस्त्रिविक्रममतिनैंपुण्यसत्पद्धतिः ।–अ. सं. भाग–६. पृ. २६

[२] द्रष्टव्य–The Philosaphy of Vaisnava Religion–G. N. Mallik. P. 310 & 314

[३] श्रीमत्पश्चि (मप) र्वतेन्द्रशिखरप्रासादवेदीलसद्द्वारे श्री हतिदत्त भूपतिकृतन्नाराय ... ...स्युभौ सिंहौ चक्रकम्बुकन्धरकलालङ्कारकान्तौ शिवौ ताम्राङ्गा (विह) दौकितौ जगदघध्वन्साय तेनानधै ॥

[४] Medieval Nepal III. P. 44

[५] पशुपति अभिलेख-ऐजन–पृ. ४८–४९

[६] ऐजन

मल्लकालका आर्को प्रसिद्ध राजा यक्षमल्ल पनि वैष्णव धर्मको सम्मान गर्दथे। उनले नेपाल संवत् ५८८ मा भक्तपुरमा आफ्ना मृतपुत्र राजमल्लको नाममा विष्णुको स्थापना गरेका थिए।[१] यक्षमल्लका पालाका अरू दुइ अभिलेख वैष्णव धर्मको क्रियाशीलता बताउँछन्। यीमध्ये एक नेपाल संवत् ५७२ को लुभु नारायण स्थानको अभिलेख हो जसमा विष्णुको पूजा आजा र अहोरात्र यज्ञ आदि गरिएको वर्णन गरिएको छ।[२] आर्को अभिलेख भदगाउँ को दत्तात्रेय मन्दिर अगाडि रहेको विष्णुमूर्तिको पादपीठमा लेखिएको छ।[३] विष्णुको मूर्ति स्थापित गरी त्यसमा अभिलेख लेखाइ संस्मरण गराइएको कुरा त्यस अभिलेखबाट ज्ञात हुन्छ।

यसरी अध्ययन गर्दा नेपालमा वैष्णव धर्मको पनि राम्रो स्थान रहेको थाहा पाइन्छ। आजसम्म यो धर्म उही रूपमा नेपालमा जीवित रही आएको छ।

---

[१] श्री श्रीजययक्षमल्लदेवेन। दिवंगत पुत्र जयराजमल्ल कुमाराय तस्मै उद्देशनार्थं श्री श्री श्री विष्णु प्रसाद पादस्थापनादि ध्वजा वरोहनं पर्यन्तं ......
ऐजन—पृ. ८०—८२

[२] Medieval Nepal-III. P. 69

[३] ऐजन—पृ. ७८

# नेपालका वैष्णव तीर्थ

नेपाल शैव र शाक्त सम्प्रदायको महत्त्वपूर्ण पीठको रूपमा प्रख्यात भए पनि यहाँ वैष्णव धर्मले पनि राम्रो लोकप्रियता पाएको कुराको वर्णन गरिसकिएको छ। यसै कारणले यहाँ अनेक वैष्णव तीर्थ पनि मानिन थाले। हुन त आजका प्रख्यात धार्मिक क्षेत्रहरूमा यो वैष्णव क्षेत्र यो शैव क्षेत्र भनिदैन तर पुरानो समयमा यस्तो चलन थियो। शिलालेखहरूमा वैष्णव तीर्थहरूको स्पष्ट उल्लेख त पाइँदैन तर यहाँ अरू प्रमाणहरूको आधार पनि लिईं वैष्णव तीर्थहरूबारे संक्षिप्त विवरण प्रस्तुत गरिएको छ।

## चार नारायण

चार नारायण आजसम्म उपत्यकाका प्रमुख वैष्णव तीर्थ रही आएका छन्। चार नारायण भनिएको कुरा सम्भवतः विष्णुको चतुर्व्यूहसंग सम्बन्ध भएकोले हो भन्ने अन्दाजी गर्न सकिन्छ तर यस विषयमा विशेष अध्ययन पनि आवश्यक छ। उक्त चार नारायणमध्ये दुइ चांगु र इचंगुबारे ऐतिहासिक प्रमाण पनि पाइएकाले यी दुइ लिच्छविकालमै प्रख्यात भइसकेको कुरो थाहा पाइन्छ। चांगु नारायणको स्थापना मानदेवभन्दा पहिले नै ( वि. सं ५२१ ) भैसकेको थियो। इचंगु नारायणको स्थापना एक मध्यकालीन शिलालेख अनुसार राजा हरिदत्त वर्मा ( वि. सं. ३०० तिर ? ) भन्दा पहिले नै भैसकेको थियो। अरू दुइ नारायणबारे ऐतिहासिक प्रमाण पाइँदैन तर यी पनि चांगु र इचंगुकै समकालिक हुन् भन्ने कुरामा विशेष शंका गर्नु परोइन। यसरी हेरेमा चार नारायण नेपालका प्राचीन वैष्णव तीर्थमध्येका हुन् भन्ने कुरा थाहा पाइन्छ। आजसम्म यी मन्दिरमा वर्षेनी ठूलो जात्रा लाग्ने परम्परा छ जो प्राचीन परम्पराको द्योतक रहेको बुझिन्छ।

## वाराहक्षेत्र

नेपाल तराईमा वाराहक्षेत्र एक प्रख्यात वैष्णव तीर्थको रूपमा रही आएको छ। यो ठाउँ अन्दाजी चौधशय वर्षदेखि एक प्रख्यात वैष्णव तीर्थको

रूपमा प्रख्यात रही आएको प्रमाण पाइन्छ। गुप्त राजा बुधगुप्तको पालाको दामोदरपुर ताम्रपत्रमा रिभुपाल नामका एक व्यक्तिले हिमालयमा (हिमालनेर) रहेको कोकामुखस्वामिको लागि केही जमीन दिएको कुरा लेखिएको छ।[१] श्री हेमचन्द्र राय चौधरीज्यूले यस कोकामुखस्वामिको अर्थ वराह अवतार मान्नु भएको छ र त्यसलाई नेपाल तराईमा रहेको वराहक्षेत्रसंग सम्बद्ध रहेको मान्नु हुन्छ।[२] श्रीराधाकुमुद मुकर्जीले पनि यस कुराको समर्थन गर्नु भएको छ।[३]

पुराणहरूमा पनि कोकामुखस्वामिको एक प्रख्यात केन्द्रको रूपमा वर्णन गरिएको देखिन्छ। महाभारतमा कोकामुख अथवा वराहक्षेत्रको वर्णन गरिएको छ।[४] यसै गरी ब्रह्मपुराण[५] र वाराहपुराणमा[६] पनि कोकामुखको महत्त्वको वर्णन गरिएको छ। यी विवरणबाट नेपालमा रहेको वराहक्षेत्रको कति धार्मिक महत्व रहेछ भन्ने स्पष्ट थाहा पाइन्छ। यसैले रिभुपालले यहाँको यात्रा गरी जग्गा दान गरेका थिए। उनले आफ्नो सुविधाको भारतको बंगाल अन्तर्गत दीनाजपुरमैं वराहक्षेत्रमा रहेको वराहको मूर्तिको आर्को प्रति बनाई स्थापना गरेका थिए भन्ने कुरा उनको अभिलेखको सूक्ष्म निरीक्षणबाट थाहा पाइन्छ।

---

[१] Epigraphia Indica. xv. p. 138 P.
[२] Indian Historical Quarterly-XXI pp.56 pp.
[३] The Gupta Empire-p. 113
[४] ३, ४८, १५८, १३, २५, ५२
[५] कोकेति प्रथिता लोके शिशराद्रिसमाश्रिता (११८-१७)
कौकानदीति विख्याता गिरिराजसमाश्रिता।
तीर्थकोटिमहापुण्या मद्र्‌पपरिपालिता॥ (११८-१०६)
वराहदंष्ट्रासंलग्ना: पितर: कनकोज्वला:।
कोकामुखे गतभया: कृता देवेन विष्णुना॥ (११८-३८)
एवं मयोक्तं वरदस्य विष्णो: कोकामुखे दिव्यवराहरूपम् (११८-११६)
[६] तव कोकामुखं नाम यन्मया पूर्वभाषितम्।
बदरीति च विख्यातं गिरिराजशिलातलम्॥
स्थानं लोहार्गलं नाम म्लेच्छराज समाश्रितम्।
क्षणश्चापि न मुञ्चामि एवमेतन्न संशय:॥
(कोकामुख महात्म्यवर्णन; १४०-४-५)

यस्ता असंख्य वैष्णव तीर्थ नेपालमा आजसम्म लोकप्रिय रूपमा रही आएका छन् तर तिनीहरूको अध्ययन गर्न ऐतिहासिक प्रमाणहरू नपाइने हुनाले तिनको अध्ययन यहाँ गरिएको छैन ।



३

# उपत्यकामा वैष्णव मूर्ति

वैष्णव धर्म अन्तर्गत भागवत अथवा पाञ्चरात्र सम्प्रदायका अनुयायीहरुले विष्णुका मूर्तिको पूजा गर्ने परम्परा चलाएका थिए। उनीहरू मूर्तिलाई श्रीविग्रह अथवा प्रत्यक्ष देवताको रूपमा मान्दछन् र त्यसको पूजा आराधना गर्दछन् ।

नेपालमा वैष्णव धर्म निकै पहिलेदेखि चलेको भए तापनि वैष्णव मूर्ति कहिलेदेखि बन्न थाले भन्ने कुराका प्रामाणिक तथ्य पाउन सकिएको छैन । चांगु नारायण र इचंगुनारायण निकै पुराना वैष्णव तीर्थ हुन् तर ती ठाउँमा शिलालेख पाइन्छन् । चांगु नारायण मानदेव भन्दा पहिलेदेखि नै प्रख्यात वैष्णव तीर्थ र केन्द्रको रूपमा रहेको थियो यसैले मानदेवले त्यहाँ रहेको मन्दिरअगाडि गरुडस्तम्भ खडा गराएका थिए । यस प्रसंगमा उपत्यकाका केही प्रसिद्ध वैष्णव मूर्तिहरूको संक्षिप्त परिचय प्रस्तुत गर्दछौं ।

## गरुडनारायण चांगु

यो मूर्ति गरुडमाथि चढेको छ । मूर्तिका चार हात मध्ये तल्ला दुइ घुंडामा अड्याइएका छन् अनि माथिल्ला दुइटामध्ये दाहिनेमा चक्र र देब्रेमा गदा छ । यो मूर्ति अति कलात्मक छ । यसमा विष्णुको सुगठित शरीर अनि साधारण तर मनोहारी अलङ्करण (विशेष गरेर श्रीपेच, हार) अत्यन्त प्रभावोत्पादक छ । मूर्तिको पृष्ठभागमा शिरनेर राम्रो तेजोमण्डल छ । यो तेजोमण्डल लहरिएको बादल अथवा समुद्रको छालको रूपमा बनाइएको छ ।[१] यसको बीचमा अर्को तेजोमण्डल

---

[१] यो तेज गरुडको पखेटा त होइन ? यसो हेर्दा गरुड उडेको अवस्थामा बनाउने प्रयत्न गरिएको देखिन्छ । अतः सम्भव छ यो तेजोमण्डल नभई गरुडको पखेटा पनि बनाइएको हुन सक्दछ ।

(Halo) छ जो साधारण तर कलात्मक छ। यसमा गरुडको मुखको भाव र पखेटा बनाउने शैली अति राम्रो छ। निष्कर्ष यही हो कि नेपालमा यति राम्रो कलात्मक मूर्ति कुनै छैन। अझ तुलना गर्ने हो भने भारतमा पनि यति राम्रो विष्णुमूर्ति छैन भन्न सकिन्छ (हेर्नुहोस् चित्रफलक-२, ग)। यस मूर्तिको समय निश्चित् गर्न गाहारोछ। यसको समय ईस्वी संवत्को चौथो शताब्दीतिर हुन सक्दछ।

## त्रिविक्रम मूर्ति चांगु

चॉगु नारायणमा एक त्रिविक्रम मूर्ति फलक छ जो कला र वैष्णव दर्शनको प्रतीकात्मक छ। यस फलकमा विष्णुको ठूलो शक्ति देखाउने प्रयत्न गरिएको छ। यो विष्णुको स्वरूपको चित्र प्रस्तुत गर्नाको साथै दानवराज बलिको यज्ञसम्बन्धी चित्र पनि प्रस्तुत गर्दछ। चित्रमा देब्रे पट्टि घोडा पनि बनाइएको छ जो बलिले गरेको अश्वमेघ यज्ञको अङ्कन गरिएको हो। (चित्र फलक २, ख)। मानदेवले लाजिम्पाट र तिलगङ्गामा स्थापना गरेका त्रिविक्रम मूर्ति पनि झण्डै यस्तै खालका छन्। विष्णुलाई यस रूपमा वैदिक कालमा पनि वर्णन गरिन्थ्यो। ऋग्वेदमा विष्णुलाई उरुक्रम, उरुगाय र त्रिविक्रम भनी वर्णन गरिएको देखिन्छ। विष्णुको त्रिविक्रमको सूर्यको उदय मध्य र अस्तसंग मिलाएर पनि व्याख्या गरिन्छ। त्रिविक्रम मूर्ति लिच्छविकालमा मात्र बने यसपछि यो मूर्ति फेरि बनेको देखिंदैन। लिच्छविकालको धार्मिक कला (Iconography) र सुघरीपन यस किसिमका फलकमा राम्रोसित देख्न सकिन्छ। हुन त यस्ता फलक झट्ट हेर्दा भीड भए जस्तो देखिन्छ तर सबै कुरा आफना आफना स्थानमा आवश्यक रूपमा बनेका छन्।

## धुम्बाराही

धुम्बाराहीमा विष्णुको वराह अवतारको एक मूर्ति छ। यो मूर्ति कलाको दृष्टिकोणले त्यति राम्रो त छैन तर वैष्णव मूर्तिहरूमा यसको महत्त्वपूर्ण स्थान छ। यस मूर्तिमा देवताको शिर वराहको छ तर अरू अंग मानिसको छ। यसका दुइ हात छन् दाहिने चाहिं कम्मरमा अड्याइएको छ अनि देब्रेको कुहिनामा एक महिला मूर्ति छ जो पृथ्वीको मनुष्य रूप हो। वराहरूपको दर्शन या विचार अनुसार विष्णुले वराहको रूप लिएर पृथ्वीको उद्धार गरेका थिए र त्यही कुरा यहाँ मूर्तिको माध्यमबाट देखाइएको छ। (चित्रफलक ३ क) यस मूर्तिको समय-बारे पनि केही भन्न सकिंदैन। यस ठाउँमा कुनै शिलालेख पनि पाइँदैन। सम्भवतः यो मूर्ति नरेन्द्रदेवभन्दा पहिले बनिसकेको थियो किनभने उनको अनन्त

लिंगेश्वर अभिलेख वराह यात्राको उल्लेख गरिएकोछ ।[१] उक्त वारह यात्रा यही मूर्तिसंग सम्बद्ध रहेको हुनु पर्दछ किनभने लिच्छविकालको यो बाहेक आर्को वराह मूर्ति आजसम्म देखिएको छैन ।

वराह रूपमा विष्णुको पूजा मल्लकालमा पनि लोकप्रिय थियो । तर त्यस कालमा यस किसिमका मूर्ति निकै कम पाइन्छन् । यक्षमल्लको भदगाउँ ताम्रपत्रमा पृथ्वीको स्तुति गर्दा उनलाई "विष्णुको हातको कुइनाले उठाइएकी" (विष्णोर्व्वाहुलता कफोणिशिखरेणोद्धारिता मेदिनी ) भनी वर्णन गरिएको छ ।[२]

## बुढानीलकण्ठ

लिच्छविकालमा बनेको विष्णुको जलशयन मूर्तिको एक मात्र उदाहरण बुढानीलकण्ठको जलशयन मूर्ति हो ।[३] यस्तो विशाल भव्य र कलात्मक मूर्ति लिच्छविकालमा आर्को बनेको देखिदैन । भारतमा पनि पत्थरमा स्वतन्त्र रूपमा विशाल र यस्तो रूपमा जलशयन विष्णुको मूर्ति बनेको छैन । बुढानीलकण्ठको निर्माण कहिले भयो यस विषयमा निश्चित ऐतिहासिक प्रमाण पाइँदैन । शिवदेव प्रथमको एक अभिलेख मूर्तिको अगाडि रहेको आँगनमा छ जसमा 'नरसिंहोभयपाञ्चाली' को उल्लेख छ[४] जो त्यो अभिलेख भएको ठाउँमा वैष्णव मन्दिर रहेको कुराको प्रमाण प्रस्तुत गर्दछ । योभन्दा पनि अंशुवर्माको हाँडीगाउँ अभिलेखमा उल्लिखित "मुम्भुक्किका जलशयन"[५] शब्द विशेष विचारणीय छ । उक्त शब्दको आधुनिक रूप नेवारी भाषामा "भुइजखिरानारन्" छ जो बुढानीलकण्ठलाई नै प्रयुक्त गरिन्छ । अतः अंशुवर्माभन्दा पहिले नै बुढानीलकण्ठको मूर्ति स्थापित भैसकेको थाहा पाइन्छ ।

भीमार्जुनदेव र विष्णुगुप्तको संयुक्त शासनको येंगाहिटी लगनटोल अभिलेखमा विष्णुको जलशयन रूपको स्तुति गरिएको छ जो निम्न प्रकारको छ:

अनन्तनागाधिपभोगभासुरे । जलाशये शान्ततमं मनोहरम् ।।
मुरारिरूपं यदशेत देहिनां । शिवाय तद् वो विदधातु मंगलम् ।।[६]

---

[१] अ. सं. भाग–१ पृ. ३७
[२] Medieval Nepal III. P. 73
[३] चित्रफलक ३ ख
[४] नोली पृष्ठ - ३५–३६
[५] नोली पृठ–५०–५१
[६] नोली पृष्ठ–८१

अभिलेख भागमा भगवान् विष्णुको जलशयन मूर्तिको निर्माणको लागि ढुङ्गा ल्याइएको कुराको उल्लेख गरिएको छ।[१] यो प्रमाण बुढानीलकण्ठको निर्माणको समयको प्रमाण हो भन्ने मानिसहरूमा भ्रम पर्न सक्दछ। अंशुवर्माको हाँडीगाउँ अभिलेखको भुम्भुक्किका र भुइजसिरानारन्मा एकता भएपछि विष्णुगुप्तको पालामा बुढानीलकण्ठ बनेको हो भन्ने मान्न सकिँदैन।

लिच्छविकालपछि यस्ता मूर्ति बनेनन्। केवल उत्तर मल्लकालमा बालाज्यूमा यसकै अनुकरणमा विष्णुको जलशयन रूप बनाइएको थियो। अझ पछि कता कतै यस्ता मूर्ति रहेका देखिन्छन् तर ती कलात्मक दृष्टिकोणले हेर्दा निम्नकोटिका छन्।

## उपत्यकामा कृष्णमूर्ति

केही समय अघि उपत्यकामा कृष्णको मूर्ति कहिले बन्न थाल्यो भन्ने कुरामा केही वादविवाद उठेका थिए। विना प्रमाण एक महाशयले उपत्यकामा कृष्णको मूर्ति विक्रमको सत्रौं शताब्दीमा बन्न लागेको कुरा लेखेका थिए तर त्यसको विरोध मैले गोरखापत्रद्वारा गरेको थिएँ– मेरो लेखको पनि विरोध पूर्वपक्षपातीबाट आयो।

उपत्यकामा कृष्णमूर्ति कहिलेदेखि बन्न थाल्यो भन्ने कुरामा केही प्रमाण हामीसंग छन्। प्रथमतः हामीले हनुमानढोकाको कालीयदमनमूर्तिको राम्ररी निरीक्षण गर्नु पर्दछ।[२] यो मूर्तिलाई प्रतापमल्ल अथवा उत्तरमल्लकालिक कुनै राजाले बनाएको सिद्ध गर्ने कुनै ऐतिहासिक प्रमाण हामीसंग छैन। अतः यसको निर्माणको तिथि निर्धारण गर्न त्यस मूर्तिको कलात्मक स्वरूप मात्र सहायक सिद्ध हुन सक्दछ।

मूर्तिको माथिल्लो भागमा बाल कृष्णको मूर्ति बनाइएको छ। त्यसमा कृष्णको शिरपछाडि बनाइएको तेजोमण्डलको कलात्मक स्वरूप मल्लकालिक हैन निकै पुरानो देखिन्छ। यति राम्रो मूर्ति मल्लकालमा बनेको देखिंदैन। मल्लकालमा बनेका मूर्तिको निर्माण शैली नै भिन्न हुन्छ जसको एक अंश पनि

---

[१] विदितं अस्तु भवतां सकलजगदवसानोदयैककारणस्योदारतर महिमावाप्ति निधान भूतस्य भगवतो विष्णोर्जलशयनरूपनिष्पादनयोग्यवृहच्छिलाकर्षणव्यापारपरितुष्टै रस्माभिः–नोली पृष्ठ–८१

[२] चित्रफलक ३ ग

यसमा देखिंदैन । यस कारणले यस मूर्तिलाई लिच्छविकालको मान्नु पर्दछ भन्ने मेरो विचार छ ।

वैष्णव मूर्तिहरूमा विशेष लोकप्रिय विष्णुका मूर्ति हुन् । विष्णुका प्रत्येक कालका (लिच्छवि, मल्ल, मध्य) मूर्ति उपत्यकामा पाइन्छन् र नेपाली कलाका सुन्दरतम उदाहरणमध्ये हुन् । विष्णुका अरू अवतारका मूर्ति उपत्यकामा कम पाइन्छन् । लिच्छविकालमा बनेको विष्णुको नरसिंहावतार मूर्ति पाइएको छैन । मल्लकालका केही नरसिंह मूर्ति देखिन्छन् जुनमध्ये एक हनुमानढोकामा छ । रामको लिच्छविकालिक मूर्ति अत्यल्प छ । त्यस कालमा बनेको रामको एक मात्र मूर्ति रुद्रगाडेश्वरमा छ । यही लिच्छविकालमैं बनेको परशुरामको एक मूर्ति छ । यिनी पनि विष्णुका एक अवतार मानिएका छन् ।



## अध्याय–३

# १ नेपालमा बौद्ध धर्म

नेपालमा बौद्ध धर्मको इतिहास अति गौरवपूर्णछ । अतः यहाँको बौद्ध धर्मको इतिहास राम्ररी नजाने यसको राम्रो इतिहास जान्न सकिदैन भन्ने कुरा निश्चय छ । आजसम्म यस विषयमा राम्रो अध्ययन नभएकोले धेरै इतिहासकार-हरूलाई मौलिक कल्पना गर्ने अवसर प्राप्त भइरहेको छ । उताउति कसै कसैले यस बारे लेखी टोपले पनि पूर्वाग्रह आदिले गर्दा उनीहरूको कथन मान्न गाहारो हुन्छ । यस्ता मतको खण्डन तत्तत् स्थानमा गरिने छ ।

आज नेपाल उपत्यकामा निरीक्षण गर्ने व्यक्तिलाई यहाँका ठूला साना स्तूप र चैत्य अनि अनेककिसिमका मूर्तिहरूले आफ्नो इतिहास व्यक्त गरिरहेका हुन्छन् । यस स्थितिमा हाम्रो मनमा बौद्धधर्म नेपालमा कति पुरानो होला भन्ने प्रश्न स्वाभाविक रूपले उठ्दछ । यहाँ यस्ता यस्ता मूर्ति र चैत्य देखिन्छन् जसको उपमा दिन कठिन छ; यस्ता वस्तु अन्यत्र पाइंदैनन् । यस रूपबाट हेर्दा नेपालले बौद्धधर्मको निकै विकास गरेको देख्दछौं जसले नेपाली संस्कृतिको निर्माणमा अरूहरूले जस्तै राम्रो योगदान गरेको देखिन्छ । यस रूपमा पनि नेपालमा बौद्ध धर्मको बिशेष महत्त्व रहेको देखिन्छ ।

## नेपालमा बौद्ध धर्मको प्राचीनता

नेपालमा बौद्धधर्मको प्रवेश कहिले भयो भन्ने प्रश्न यस प्रसङ्गमा महत्त्व-पूर्ण छ । नेपालकै तराई कपिलवस्तुमा बुद्ध जन्मिएको भए पनि बौद्ध धर्मले नेपाली राजनीति र संस्कृतिको केन्द्र उपत्यकामा कहिले प्रवेश गर्‍यो यो प्रश्न कठिन छ ।

हुन त नेपालका भाषा वंशावलिहरूमा उपत्यकाको निर्माणबारे आदि-

बुद्धको कथाको वर्णन गरिएको छ जसलाई ऐतिहासिक दिने समस्या पनि हाम्रो समक्ष छ । कपिलवस्तु हाल नेपाल राष्ट्र भित्रै परे तापनि बुद्धको समयमा शाक्य जातिको स्वतन्त्र शासनमा रहेको कुरा तत्कालीन ग्रन्थहरूबाट थाहा पाइन्छ र भौगोलिक दृष्टिले पनि उपत्यकाको सोभ्रै र राम्रो सम्बन्ध कपिलवस्तुसंग रहेको स्पष्ट प्रमाण नपाइएकोले बुद्धको नेपाल आगमन भयो भन्ने कुरामा शङ्का लाग्दछ । केही बौद्ध ग्रन्थमा बुद्धका शिष्यले नेपाल जाने प्रश्न गरेको कुरा पनि[१] ऐतिहासिक रूपबाट ग्राह्य छ वा छैन त्यसै भन्न सकिंदैन । तर आदिबुद्धको कथालाई सिम्भूको चैत्यसंग सम्बन्ध जोडिएको हुनाले उक्त कथाको सांकेतिक अर्थ लिनु पर्दछ । सिम्भूको स्तूपको प्राचीनताबारे धेरै भन्न सकिंदैन किनभने त्यसको वैज्ञानिक उत्खनन आजसम्म भएको छैन । अतः यसलाई कति पुरानो मान्ने हो यो पनि एक समस्या रही आएको छ । स्तूपका वरिपरिबाट लिच्छवि-कालका शिलालेखहरू पाइएकाले यसलाई ईस्वीको चौथो शताब्दीभन्दा पुरानो मान्नमा केही अड्को परोइन ।यद्यपि त्यस समयमा स्तूपको स्वरूप आजको स्तूपको स्वरूपमा धेरै नै भिन्नता रहेको अनुमान गर्न सकिन्छ ।

नेपालमा बौद्धधर्मको प्राचीनता बारे एक कुराको उल्लेख गर्नु आवश्यक छ । काठमाण्डूमा काठेसिम्भू नामको एक स्तूप प्रख्यात छ जसको प्राचीनता लिच्छविकालतिरै रहेको अनुमान गर्न सकिन्छ । उक्त नामको शाब्दिक विश्लेषण गर्दा त्यस स्तूपको प्राचीन रूपमा काठको प्रमुख स्थान रहेको अनुमान गर्न सकिन्छ । त्यस स्तूपनेर एक लिच्छविकालिक शिलालेख पनि पाइएको छ[२] जस-बाट यो स्तूप लिच्छविकालमा विद्यमान रहेको कुरा थाहा पाइन्छ । भारतमा ईस्वी सम्वत्को प्रारम्भ वा प्रथम द्वितीय शताब्दीमा स्तूपमाथि हर्मिका काठको बनाउने चलन चलेको थियो ।[३] अतः काठेसिम्भूमा पनि त्यस्तै परम्परा चलेको कुराको अनुमान गर्न सकिन्छ ।

यस प्रसङ्गमा आर्को कुराको चर्चा गर्नु आवश्यक छ । पाटनमा तथा-

---

[१]मूलसर्वास्तिवाद विनयमा बुद्धले नेपालमा भयङ्कर जाति भएकाले र अगम्य भएकोले आफ्ना शिष्यलाई नजाने कुराको उल्लेख छ। Levi--Le Nepal. vol. II. P. 181

[२]अ. सं. भाग-१. पृष्ठ-३२

[३]कनिष्कले बनाएको पेशावर स्तूप-, द्रष्टव्य: The Age of Imperial Unity-P. 490

कथित अशोकस्तूपको स्वरूप हेर्दा भारतका प्राचीनतम स्तूपको झझल्को पाइन्छ। नेपालको तराईमा पिप्रावामा एक ठानो स्तूप उत्खननबाट भेटिएको थियो[१] जसको आकारको समता पाटनका यी तथाकथित अशोक स्तूपसंग गर्न सकिन्छ। यी स्तूप माटाको ढिस्कोको रूपमा रहेको छ र यसमा कला सामान्य तर प्रारम्भिक छ। अतः यस रूपमा यी स्तूपले प्राचीन स्तूपकलाको स्वरूप सरक्षित गरेका छन्।

हामीसंग निश्चित ऐतिहासिक सामग्रीको अभाव भए पनि नेपाल उपत्यकामा अशोकभन्दा पहिले नै बौद्ध धर्मले प्रवेश गरेको अनुमान गर्न सकिन्छ। तथाकथित अशोक स्तूपलाई यसको बाह्यस्वरूपको आधारमा पिप्रावा स्तूप (ईसा पूर्व पाँचौं शताब्दी) को समकक्ष राख्न सक्छौं भने बौद्ध धर्मको प्राचीनता अलि स्पष्टिन थाल्दछ। उत्खनन् आदि भए पछि यस कुराको परिपुष्टि हुन् सक्ने सम्भावना व्यक्त गर्न सकिन्छ। अर्को शब्दमा भनौं भने नेपाल उपत्यकामा बौद्ध धर्मले बुद्धको समयमै प्रवेश गरेको हुनसक्दछ तर त्यसले यहाँ के के राम्रो काम गऱ्यो भन्ने कुरा थाहा नपाउन्जेल यस विचारको कुनै महत्त्व पनि छैन। सिम्भू काठेसिम्भू र बौद्धका स्तूपहरूको पुरातात्त्विक उत्खनन गरिसकेपछि यस विषयमा केही भन्न सकिने आशा गर्न सकिन्छ। तर विचार गर्दा उक्त स्तूपहरू अत्यन्त प्राचीन हुन् भन्ने कुरामा कुनै शङ्का छैन विशेषत: काठेसिम्भू र सिम्भूका स्तूप अनि पाटनका तथाकथित अशोकहरू स्तूप वास्तुकलामा प्राचीनतम स्वरूपका उदाहरण हुन् भन्ने कुरामा केही शंका छैन यद्यपि तिनको वर्तमान स्वरूपमा केही नवीन तत्त्व पनि स्पष्ट रूपमा देखिन्छ।

यसरी विचार गर्दा नेपालमा बौद्ध धर्म चलेको निकै समय बितिसकेको थाहा पाइन्छ तर त्यसको क्रमबद्ध इतिहास भने हामीलाई थाहा छैन। यसै गरी अशोकको सम्बन्धमा भाषा वंशावलिमा काल्पनिक कथाहरूलाई कुनै महत्त्व दिन सकिंदैन। उपत्यकामा अशोक अथवा उनका मानिस पसेको कुनै प्रमाण छैन। तराई भागमा भने अशोकको आगमन भएको निश्चित प्रमाण पाइन्छ।

नेपाली बौद्ध धर्मको स्पष्ट इतिहास लिच्छवि राजा वृषदेवको पालादेखि स्पष्टिन थालेको अनुमान गर्न सकिन्छ। द्वितीय जयदेवले पशुपति अभिलेखमा वृषदेवलाई "बौद्ध धर्मका पक्षपाती" भनी वर्णन गरेको छ।[२] यद्यपि मानदेवले

---

[१]Journal of The Royal Asiatic Society (Buhler) 1898 P. 387

[२]सं. स. १–१, पृ. ३

चांगुनारायण अभिलेखमा उनको (वृषदेवको) वर्णनमा बौद्ध धर्म मान्ने भनी वर्णन त गरिएको छैन[१] तर जयदेवको पशुपति अभिलेखको विचारलाई अस्वीकार गर्न पर्ने कारण पनि छैन। ईस्वी संवत्को चौथो शताब्दीमा भारतका प्रख्यात बौद्ध आचार्य वसुबन्धु नेपाल आएको थहा पाइन्छ।[२] ई सं. ४०० तिर नेपालमा कुन राजा थिए निश्चय गर्न गाहारो छ। तर वसुबन्धु जस्ता बौद्ध आचार्य नेपाल आउनाको कारण बौद्ध धर्मको विशेष प्रचारको निम्ति हुनु निकै भग्न भएकोले यसबाट धेरै कुरा जान्न सकिंदैन तर ' ˝ ˝ न विहारे' देखिएकोले यसले सिम्भूमा कुनै विहार रहेको कुरा संकेत गरेको बुझिन्छ।

बयालीस वर्षको व्यवधानपछि तत्कालीन बौद्ध धर्मको इतिहास पुनः स्पष्टिन्छ। रामदेवको पालाको लगनटोल अभिलेख अवलोकितेश्वरको मूर्तिको पादपीठमा लेखिएको छ। अभिलेखमा उपासक मणिगुप्तले सपत्नीक भई, आमा र बाबुको बुद्धत्व प्राप्त गर्नको लागि आर्यावलोकितेश्वरको मूर्ति स्थापना गरेको कुरा वर्णन गरिएको छ।[३] यस अभिलेखमा तिथि भाग भग्न भएकोले यसको समयको ज्ञान गर्न सकिंदैन तर रामदेवको पालामा ४६९ संवत् लेखिएको एक शिवलिङ्गाभिलेख मृगस्थलीनेर छ जसबाट मणि गुप्तको अभिलेख पनि त्यसैको यताउतिको हुनु पर्दछ।

अंशुवर्माको शासन कालमा बौद्ध धर्मले नयाँ क्षेत्रमा प्रवेश गर्‍यो। उनी आफू शैव धर्म मान्ने भए पनि बौद्ध धर्मको निकै सम्मान गर्दथे। उनले आफ्नो शासनको पहिलो अभिलेख (बुंगमती अभिलेख) मा शीर्षभागमा बौद्ध चिन्ह (धर्मचक्र र दुइ मृग) लेखिएकोले[४] अंशुवर्माको बौद्ध धर्मप्रति कस्तो भाव थियो भन्ने कुरा स्पष्ट हुन्छ हाँडीगाउँ अभिलेख धेरै सम्भव छ।

मानदेव प्रथमको समयदेखि शिलालेखहरू पाइन थालिएकाले त्यस समयदेखि नेपालको सांस्कृतिक इतिहास पनि स्पष्टिन थालेको छ। चाबेल स्तूपनेर

---

[१] सं.म.–१–६, पृ. ४०

[२] Twenty five hundred years of Buddhism P 83.

[३] सर्व्वसत्त्वहितसुखार्थाय भगवत आर्यावलोकितेश्वरनाथ प्रतिष्ठापितः देयधर्म्मोयं परमोपासक मणिगुप्तस्य भार्यया महेन्द्रमत्या सह यदत्र पुण्यं तद् भतु मातापितृपूर्व्वङ्गमानां कृत्वा सर्व्वसत्वाना सर्व्वाकार वरोपेत [तथागतस] र्व्वज्ञज्ञानावाप्तये–नोली. पृ. २५

[४] नोली पृष्ठ—५४, हाल संशोधन मण्डलले यसको तिथि २९ संवत् पढेको छ।

प्राप्त भएको एउटा शिलालेखमा बौद्ध धर्मको तत्कालीन स्थिति केही मात्रामा स्पष्टिएको छ। यस अभिलेखका सम्पादकहरूले लिपिको आधारमा यसलाई मानदेव प्रथमको समयको मानेका छन्।[१] त्यसलाई मानदेवको समयको मान्ने हो भने यो नेपालको पहिलो बौद्ध अभिलेख सिद्ध हुन आउँछ।[२] यस अभिलेखमा सङ्घ र महामुनि शब्द विशेष विचारणीय छन्।[३] सङ्घ बौध धर्मको एक महत्त्वपूर्ण संस्था हो र महामुनि शब्द बुद्धको लागि प्रयुक्त भएको हो। यसको प्रारम्भमा केही श्लोक पनि लेखिएका छन् (जो भग्न पनि भएका छन्) तिनमा बौद्ध दर्शनको केही छाप पनि देखिन्छ। यस शिलालेखले चाबेल स्तूपको प्राचीनता स्पष्ट गरेको छ। सिम्भूबाट एक आर्को अभिलेख प्राप्त भएको छ (जो हाल हराएको छ भनिन्छ) जसको लिपि मानदेवकालिक मानिन्छ।[४] यो शिलालेखमा अंशुवर्माले बौद्ध विहारहरूलाई आर्थिक सहायता दिएको कुराको विवरण दिएको छ।[५]

अंशुवर्माको समयको आर्को अभिलेख हाल भण्डारखाल पाटन संग्रहालयमा सुरक्षित रहेको छ। त्यसमा प्रारम्भमा बोधिसत्वको वर्णन गरिएको छ। अनि प्रणिधि विहारमा अंशुवर्माले पानी ल्याइदिएको कुराको पनि वर्णन गरिएको छ।[६] एक आर्को अभिलेख, जसमा संवत् ४२ दिइएको छ, अंशुवर्म

---

[१]अ. सं. भाग–६. पृ. १८

[२]नेपालको तराईबाट प्राप्त अशोकका अभिलेखको गणना यहाँ गरिएको छ।

[३]भूयः सङ्घस्य भक्तात्थं पूजात्थंञ्च महामुनेः।

[४]पूर्णिमा, पूर्णाङ्क–६. पृ. २-३; यो अभिलेख पनि निकै भग्न भएकोले राजाको नाम र संवत् जान्न सकिंदैन। यसको लिपि मात्र समयको संकेत गर्दछ।

[५]नोली पृष्ठ–५०–५१

[६]बोधिसत्वको वर्णनभाग भग्न छ तर निम्न भाग बांकी छ

स्वतनुवसुशिरःकरादिदानैरुपकृतमर्थिजनस्य येन

सकल...सन्तप्तस्य कलीश्वरैरतिशठैनिर्लज्ज ण द्वेषिभिः आदि

× ×

प्रचुरय आर्यावासस्य भूषा प्रणिधिविरहित,

नित्यभन्यार्थवृत्ति कुर्वाणेवोपमानङ्क्षितितल–

शशिनस्तस्य राज्ञः कृपाया (!) सकलजगदुदन्या

शान्तये शीततोयामिह यतिवरवासे पातयित्वाप्रणालीम्—अ.सं. भाग–६. पृ. २१

कालिक बौद्ध धर्मको प्रगतिको चित्रण प्रस्तुत गर्दछ। भण्डारखाल पाटनमा रहेको उक्त अभिलेखमा बौद्ध देवताको पूजा आजाको लागि केही दान गरिएको वर्णन गरिएको छ।[१] मङ्गलबजार पाटनमा एक अर्को अभिलेख, जो अति भग्न छ तर त्यसको लिपिको आधारमा अंशुवर्मकालीन मानिन्छ।[२] त्यो अभिलेखमा बीचमा बौद्ध चिह्न (धर्मचक्र र दुइ मृग) छ र दुइ जना घुंडा टेकेर आराधना गरिरहेका देखाइएका छन। अभिलेखभागमा 'संघ' को उल्लेख छ।

अंशुवर्मापछि द्वितीय मानदेवको पालासम्म बौद्धधर्मको इतिहास नौ वटा शिलालेखले सुरक्षित गरेका छन।[३] यिनमध्ये दुइवटा नरेन्द्रदेवका शिलालेख छन् जुनमा आर्यसघ र शिवदेव विहारको लागि राजाले विशेष अधिनियम बनाएको वर्णन गरिएको छ। यस विवरणबाट नरेन्द्रदेवले पनि बौद्ध धर्मको राम्रो सहायता गरेको कुरा स्पष्टिन्छ। उक्त नौ शिलालेखमध्ये एकमा (जसमा राजाको नाम पनि छैन संवत् पनि छैन।) एक नयाँ महायानबौद्ध सम्प्रदायको उल्लेख भएको छ।[४]

यसरी विचार गर्दा लिच्छविकालमा बौद्ध धर्मले राम्रो उन्नति गरेको स्पष्ट हुन्छ। त्यस वेलाका सबै राजाहरू समन्वयवादी थिए। यसैले त्यसवेलामा

---

[१] पूर्णिमा पूर्णाङ्क ६. पृ. ५.

[२] नोली पृष्ठ–६०

[३] क. नरेन्द्रदेवको पशुपति अभिलेख, नोली–पृ. ६६–१०१

ख. ऐजन येंगुबहाल पाटन अभिलेख, नोली. पृ. १०२–३

ग ऐजन, वटुकभैरव पाटन अभिलेख, नोली पृ. ६७ यसमा शीर्षभागमा बौद्ध चिन्ह छ।

घ. सिम्भू अभिलेख अ. सं. भाग–१ पृ. ३४

ङ. काठेसिम्भू अभिलेख–ऐजन – पृ. ३२

च. बरडाहिटी अभिलेख–ऐजन—पृ. ३३

छ. काठमाण्डू हेमाकर विहारको एकश्लोकी प्रज्ञापारमिता अभिलेख—नोली पृष्ठ. १३१

ज. साँखुको लघु अभिलेख—नोली पृ. १०४

झ. द्वितीय मानदेवको पालाको पाटन सौगलटोल अभिलेख — रेग्मी, III पृ. २

[४] अ. सं. भाग–५. पृ. ८, यस सम्प्रदायबारे विशेष कुरा बौद्धसम्प्रदाय सम्बन्धी प्रकरणमा वर्णन गरिएको छ।

शैव धर्मको जति उन्नति भयो त्यति नै वैष्णव र बौद्धको पनि। यही कारणले आजसम्म नेपालमा बौद्धधर्म जीवित रहन सकेको छ।

मध्यकालीन नेपालमा बौद्ध धर्मले राम्रो स्थान पाइरहेकै थियो तर त्यस कालको इतिहास त्यति स्पष्ट नभएकोले बौद्ध धर्मको तात्कालिक इतिहास पनि त्यति स्पष्ट रहेको देखिँदैन। मानदेव द्वितीयपछि यक्षमल्लको पालासम्म बौद्धधर्मको इतिहास तयार पार्न केही सामग्री सहायता गर्दछन् तर स्थितिमल्लको पालासम्म चाहिं शिलालेख धेरै नपाइएकाले त्यस वेलामा बौद्धधर्मले गरेको प्रगति स्पष्ट रूपमा दोहोऱ्याउन गाहारो छ। यस समयमा लेखिएका वा सारिएका ग्रन्थहरूले पनि तत्कालीन संस्कृतिको पुनर्निरीक्षणमा राम्रो सहायता गरेका छन्।

मध्यकालमा नेपालमा बौद्धधर्मको राम्रो स्थिति रहेको कुरा धेरै प्रमाणबाट स्पष्टिन्छ। त्यस वेलामा नेपालका आचार्यहरू तिब्बतका बौद्ध विद्यार्थीको ज्ञानपिपासा मेटाउन समर्थ थिए। यसैले धर्मस्वामि (तेह्रौं शताब्दीमा) नेपाल आएका थिए र अनेक शास्त्र पढी आफ्नो देश फर्केका थिए।[१] यसै वेलामा अनेक नेपाली बौद्ध दर्शन र शास्त्रका आचार्य तिब्बत गई बौद्ध धर्मलाई त्यहाँ स्थिर पार्न सहायता गरेका थिए।

मध्यकालमा सिंहदेव राजा बौद्ध धर्मका अनुयायी थिए। यिनले "परमसौगत" उपाधि ग्रहण गरेका थिए। यिनको पाला (ने. सं. २४० = वि. सं. ११७७) मा लेखिएको अष्टसाहस्रिका प्रज्ञापारमितामा यिनलाई उक्त विशेषण लगाइएको छ।[२] वृषदेव वाहेक नेपालका अरू राजाले सिंहदेवले झैं व्यक्तिगत रूपमा बौद्ध धर्मलाई स्वीकार गरेका थिएनन्। यसपछि यक्षमल्लसम्म ७ अभिलेख[३] पाइन्छन् जुनबाट तत्कालीन बौद्ध धर्मको स्थितिबारे केही कुरा थाहा पाइन्छ। यी अभिलेख त्यस कालमा बुद्ध मूर्तिको स्थापना, चैत्यको पुनः संस्कार र बौद्ध मन्दिरको लागि अनुदान आदि गरिएको अवसरमा लेखाइएका थिए।

त्यस कालका हस्तलिखित ग्रन्थको पुष्पिका र शिलालेखहरूबाट अनेक

---

[१] द्रष्टव्य- Biography of Dharmaswamin D. Roerich.

[२] Petech. P. 57; पेटेकले सिंहदेवले परमसौगत उपाधि लिएकोमा राजनीतिक कारण देख्नु भएको छ जो अतिशयोक्ति जस्तो लाग्दछ।

[३] जैसी देवल मञ्जुश्रीको पादपीठ अभिलेख- रेग्मी ३, पृ. २

ख. पाटन गुइत बहिलको दीपङ्कर बुद्धमूर्तिको पादपीठ अभिलेख-रेग्मी-३, पृ. ११

बौद्ध विहार रहेका ज्ञात हुन्छन् । बौद्ध विहार धेरै रहेका देखिएकोले पनि त्यस कालमा बौद्ध धर्मको राम्रो स्थिति रहेको थाहा पाइन्छ ।

पश्चिमी नेपालका प्रख्यात मल्ल राजाहरूले पनि बौद्ध धर्मको विकासमा राम्रो सहयोग गरेका थिए । उक्त वंशका एक प्रख्यात राजा अशोकचल्ल बौद्धधर्मका अनन्य भक्त थिए । उनको बुद्धगया अभिलेखमा उनलाई "प्रवरमहायानयायिनः परमोपासक... जिनेन्द्रचरणारविन्द मकरन्द मधुकर" भनिएको छ ।[१] अशोकचल्लकै आर्को अभिलेख बुद्धगयामा पाइएको छ जसमा उनले त्यहाँका बौद्धदेवताको पूजा आजाको प्रबन्ध गरेको र काश्मीरका पण्डितलाई केही दान गरेको (?) वर्णन गरिएको छ ।[२] यसै वंशका आर्का राजा रिपुमल्ल पनि बौद्धधर्मका अनुयायी ज्ञात हुन्छन् । उनको पालामा लेखिएको अभिसमया-लङ्कारको पुष्पिकामा उनलाई लोकेश्वर भनिएको छ ।[३] यस वंशका आर्का राजा पुण्यमल्ल 'परमसौगत' उपाधि धारण गर्दथे[४] जसबाट उनी पनि बौद्ध धर्मका अनुयायी रहेका ज्ञात हुन्छन् । उनका छोरा पृथ्वीमल्लले पनि बौद्धधर्मलाई स्वीकार गरेका थिए भन्ने कुरा उनको अभिलेखमा उनलाई दिइएको 'श्रीधना-रधानविगत' विशेषणबाट थाहा पाइन्छ ।[५]

---

ग अभयमल्लको पालाको गुइतबहिल पाटन अभिलेख रेग्मी-३, पृ १२
घ. पिमवहाल पाटन अभिलेख-रेग्मी-३, पृ १६
ङ सिम्भू अभिलेख-ऐजन पृ. २१
च. इटंबहाल, काठमाण्डू अभिलेख-ऐजन-पृ. २४
छ. न्हैकबहिल काठमाण्डू ताम्रपत्र-ऐजन-पृ. ३०
ज. वू ब बहि पाटन अभिलेख-ऐजन-पृ. ३१
झ. इब बहि पाटन ताम्रपत्र अभिलेख-ऐजन-पृ. ५६
ञ. विश्वकर्मा बिहार काठमाण्डू ताम्रपत्र-ऐजन. पृ. ५८
ट. मु बहाल पाटन अभिलेख-ऐजन-पृ. ६८
ठ. मत्स्येन्द्रनाथ पाटन अभिलेख-ऐजन-पृ. ७७

[१] J. B. B. R. A. S. vol. 16, 1883-85
[२] J. B. B. R. A. S.- 16,1883-85
[३] Medieval History of Nepal-Petech. P. 108-9.
[४] सात साहित्यिक र ऐतिहासिक अभिलेख-जगदीश चन्द्र रेग्मी-पृ. ३६
[५] इतिहास प्रकाश –

यसरी नेपालमा बौद्धधर्मले नेपालमा कति उन्नति गरेको थियो स्पष्ट थाहा पाइन्छ। यद्यपि मध्यकालमा यहाँ अनेक सम्प्रदाय र धर्मको मिश्रणबाट तत्कालीन बौद्ध धर्ममा एक मिश्रित रूप आइसकेको थियो तर बौद्धधर्मको सुरक्षा गर्ने काम यहाँ सम्पन्न भएकोले यहाँ यसको विशेषता स्पष्ट रूपमा देखिन्छ।



---

तर पृथ्वीमल्लहरू बौद्धधर्मका अनुयायी भएर पनि धार्मिक समन्वयका पक्षपाती थिए– उनले हरिहर सम्प्रदायको यात्रा (हरिशङ्करी यात्रा) को लागि केही व्यवस्था गरिदिएका थिए।

# नेपालका बौद्ध सम्प्रदाय

नेपालमा कुन कुन बौद्ध सम्प्रदाय चलेका थिए यस कुराको क्रमिक र ऐतिहासिक अध्ययन गर्ने काममा धेरै समस्या छन् । यहाँ अभिलेखहरू कम पाइन्छन् तिनमा पनि एक दुईओटामा मात्र बौद्ध सम्प्रदायको नामोल्लेख मात्र पाइन्छ । यसै कारणले यस विषयमा धेरै कुरा लेख्न असमर्थ हुन आउँछौं ।

## हीनयान

हीनयान बौद्ध धर्मको प्राचीनतम रूप हो । यसमा कर्मकाण्ड र मूर्तिपूजाको कुनै स्थान छैन तर यस सम्प्रदायका अनुयायी केही चिह्न (धार्मिक) को पूजा आजा पनि गर्दथे । यो पनि महायानको उदय भएपछि व्यक्त भएको सम्प्रदाय हो ।

ईस्वी संवत्को सातौं शताब्दीमा भारत आएका चीनका यात्री ह्वेन्सांगले गोरखपुरतिर बसी नेपालको विवरण लेख्दा महायान र हीनयान सम्प्रदायका अनुयायी भिक्षुहरूको पनि उल्लेख गरेका छन् ।[१]

हीनयानमा महासांघिक सम्प्रदाय पनि चलेको थियो । यो सम्प्रदाय हीनयान धर्मको महत्त्वपूर्ण सम्प्रदायको रूपमा प्रख्यात थियो । यस सम्प्रदायमा बोधिसत्व आदर्शको विशेष मान गरिन्थ्यो अनि बुद्धत्व प्राप्त गर्ने विचार पनि विशेष हुन्थ्यो ।

नेपालमा पनि यस सम्प्रदायले केही लोकप्रियता प्राप्त गरेको अनुमान गर्न सकिन्छ । साँखुमा पाइएको एक लघु भग्न शिलालेखमा '... ...सांघिक

---

[१] On Yuan Chwang. T. W. watters- vol. 2 P. 83-84

भिक्षु संघ' को उल्लेख भएको छ।[१] सांघिक शब्दको अगाडिका शब्द फुटेका छन् तर त्यसले महासांघिक सम्प्रदायको संकेत गरेको मान्नमा आपत्ति हुनु पर्ने छैन। उक्त अभिलेख लिपिको आधारमा वि. सं. ७५० तिरको मान्न सकिन्छ।

हामीले माथि चर्चा गरिसकेका छौं कि महासांघिक सम्प्रदायमा बोधिसत्व र बुद्धपद प्राप्तिको आदर्श विशेष रूपमा रहन्छ। अंशुवर्माको पालाको हाल भण्डारखालमा सुरक्षित शिलालेखमा शुरुमा बोधिसत्वको आदर्शको वर्णन गरिएको छ[२] अनि अंशुवर्मालाई 'बुद्धत्व प्राप्त होओस्' भनी वर्णन गरिएको छ। यस शिलालेखलाई महासांघिक सम्प्रदायसंग सम्बद्ध मानेपछि हामी यसको लोकप्रियता पनि स्पष्ट रूपमा देख्दछौं। त्यसै अभिलेखमा प्रणिधिविहारमा अंशुवर्माका कृपाले पानी ( कुलो ल्याइएको ) को कुराको पनि वर्णन गरिएको छ।[३] उक्त विवरणबाट सातौं शताब्दीमा महासांघिक सम्प्रदाय नेपालमा लोकप्रिय थियो भन्ने थाहा पाउँछौं। त्यसै वेलामा भारत घुम्न आउने चीनका यात्री इत्सिंगले महासांघिक सम्प्रदाय लोकप्रिय भएका स्थानको वर्णन गर्दा नेपालको उल्लेख गरेका छैनन्[४] जो एक विचारणीय कुरा छ।

यी बाहेक हीनयानबारे हामी अरू कुरा जान्दैनौं।

## महायान

बुद्धको अति सम्मान गर्ने तर बुद्धकै मूल शिक्षाप्रति अटेरी भएका व्यक्तिरूको भावनाले महायान धर्मलाई जन्मायो। कर्मकाण्डका कट्टर विरोधी बुद्धको

---

[१] नोली-पृष्ठ १०४

[२] स्वतनु वसु शिरः करादिदानैरूपकृतमार्थिजनस्य येन .. .. सकल ...
सन्ततस्य कलीश्वरैरतिशठैर्नित्यङ्गुणद्वे षिभिर्लोकस्यास्य सुखावहो म ..
स श्रीमान् कलहाभिमानिनृपतिः सर्वज्ञतामाप्नुयात् ॥
के यो वर्णन अंशुवर्मारूपी बोधिसत्वको हो ?
अ. सं. भाग-६ पृ. २१

[३] प्रचुरयआर्यावासस्य भूषा प्रणिधि विरहिता नित्यमन्यार्थवृत्तिकुर्वाणेवोपमानङ् क्षितितलशशिनस्तस्य राज्ञः कृपाया (:) सकलजगदुदन्या शान्तये शीततोया पातयित्वा प्रणालीम्

[४] Takakus's Records of the Buddhist Religion by Itsing. P. XXXIII.

आदर्शलाई पहिलो आघात महायानले दियो जसमा केही कर्मकाण्डको प्रवेश प्रारम्भमैं भइसकेको थियो । नेपालमा यही महायान र यसका शाखा उपशाखा प्रशस्त फैलेए । अतः आर्को वाक्यमा भन्ने हो भने नेपाल महायान धर्मको सानो तिनो किल्ला नै बन्यो ।

सर्वप्रथम हामी प्रख्यात चीनी यात्री ह्वेन्सांगको विवरणमा नेपालमा महायान लोकप्रिय भएको संकेत पाउँछौं ।[१] यसपछि हामी महायान शब्दको स्पष्ट उल्लेख मध्यकालीन लेखोट किताबका पुष्पिकाहरूमा पाउँछौं । यी लेखोट किताबहरूमा अरू कुनै शब्द नजोडिई केवल महायान शब्दको उल्लेख भएकोले तिनलाई केवल महायान मान्ने वा नमान्ने छुट्याउन गाहारो छ । तैपनि यस कुरामा के विशेषता देखिन्छ भने भारतमा महायान शब्दकै उल्लेख त्यस बेलाका ऐतिहासिक प्रमाणहरूमा पाइंदैन । यसैले यस रूपमा तत्कालीन नेपालको विशेषता देखिन्छ । नेपाल सवत् २४० (वि. सं. ११७७) मा लेखिएको अष्टसाहस्रिका प्रज्ञापारमिताको पुष्पिकामा तत्कालीन राजा सिंहदेवलाई "प्रवरमहायानयायी" भनिएको छ ।[२] नेपाल संवत् २७५ मा सारिएको पञ्चरक्षाको पुष्पिकामा पनि महायानको उल्लेख गरिएको छ ।[३] यस्ता उल्लेख अरू ठाउँमा पनि पाइन्छन् ।[४]

## चातुर्विंश महायान सम्प्रदाय

पाटन चपटोल अभिलेख (जसमा राजाको नाम पनि छैन संवत् भाग पनि छैन) मा चातुर्त्रिंशमहायान भिक्षुणीहरूको संघको व्यवस्थापकको रूपमा

[१] On Yuan Chwang- T. W. Watters.
Vol. II. P. 83-84

[२] प्रवरमहायानयायिनः परमेश्वरपरमभट्टारकमहाराजाधिराजपरमसौगत श्रीमत्सिंह-देवस्य- Descriptive Catalogue of Skt. Mss. H. P. Shastri. P. 4-5

[३] Medieval History of Nepal- L. Petech. P. 63.

[४] क. प्रवरमहायानयायिनः पण्डितकीर्ति श्रीज्ञानस्य (ने. स. ३२७, अष्ट. सा. प्र. पा )-बृहत्सूचीपत्र (वीर. पु ) बौद्ध- पृ. ४०

ख. Descriptive Cat. Skt. Mss.-H, P. Shastri P. 45-46 (ने. सं. ४६६-)

चर्चित भएको छ ।[१]

उक्त नामको कुनै महायान सम्प्रदायको नाम भारतको लामो इतिहासमा कतै भेटिएन । अतः विचार गर्दा यो सम्प्रदाय नेपालमा विकसित महायानले सघटित गरेको थियो भन्ने कुरा मान्नु पर्दछ । यस उदाहरणबाट नेपालमा बौद्धधर्मको मौलिकता स्पष्टिन्छ । त्यसै शिलालेखमा 'अमृतकाय' शब्दको पनि उल्लेख गरिएको छ । अरू बौद्धसम्प्रदायमा धर्मकाय आदिको वर्णन त पाइन्छ तर अमृतकायको उल्लेख कतै पनि नपाइएकोले यो शब्द चातुर्विंशमहायान सम्प्रदायको दर्शनको एक अंश हो भन्ने अनुमान गर्न सकिन्छ ।

## माध्यमिक

महायान बौद्धधर्ममा माध्यमिक सम्प्रदायको महत्त्वपूर्ण स्थान रही आएको देखिन्छ । यस सम्प्रदायको स्थापना ईस्वी संवत्को प्रथम शताब्दीमा प्रख्यात बौद्ध विद्वान् नागार्जुनले गरेका थिए । नेपालमा पनि यो सम्प्रदाय चलेका केही आनुषङ्गिक प्रमाण पाइन्छन् ।

अंशुवर्माको हांडीगाउँ अभिलेखमा एक मध्यम विहारको उल्लेख गरिएको छ[२] । यसको नामको आधारमा यसलाई माध्यमिक सम्प्रदायसंग सम्बद्ध गरिएको हो । यो विचार मानेमा यस सम्प्रदायको लोकप्रियता पनि केही मात्रामा स्पष्टिन्छ र यस सम्प्रदायको एउटा अलग्गै विहार रहेको देखिएकोले पनि हाम्रो अनुमानलाई केही पुष्टि प्राप्त हुन्छ ।

मध्यकालीन नेपालमा पनि यो सम्प्रदाय चलिरहेकै कुरा तिब्बतका बौद्ध यात्री धर्मस्वामिले प्रस्तुत गरेको विवरणबाट पाइन्छ । उपत्यकामा बस्दा उनले बु-खम् विहारमा माध्यमिक रत्नावली अनुसार पूजा आजा गरिएको वर्णन गरेका छन् ।[३] यी पूजा आजा माध्यमिक सम्प्रदायसँग थिए भन्ने अनुमान त्यसको सम्बन्ध माध्यमिक रत्नावलीसंग रहेकोले गरिएको हो ।

---

[१]तदप्रयोजने च चातुर्विंशमहायानप्रतिपन्नार्य भिक्षुणीसङ्घपरिभोगायाक्षयणीवी– अ. सं. भाग–५, पृ ८

[२]नोली– पृष्ठ–५०

[३]Biography of Dharmaswamin-G. Roerich, P. 55

## योगाचार

ईस्वी संवत्को चौथो शताब्दीमा वसुबन्धु र असंग नामका दाजु भाइले योगाचार सम्प्रदायको स्थापना गरेका थिए। वसुबन्धु एकपल्ट नेपाल आएका थिए भन्ने कुराको उल्लेख त माथि नै गरिसकिएको छ। योगाचार सम्प्रदायका संस्थापकको नेपाल आगमनबारे धेरै कुरा थाहा हुन नसके पनि उनको आगमनले त्यस सम्प्रदायको राम्रो परिचय नेपालमा फैलिएको मात्र सकिन्छ। यहाँ अर्को महत्त्वको कुरा त के छ भने वसुबन्धुका मौलिक ग्रन्थ नेपालमा मात्र पाइएको छ नत्र उनका ग्रन्थका चीनी रूप मात्र पाइन्थ्यो। यस उदाहरणबाट पनि नेपालमा योगाचार सम्प्रदायले केही स्थान पाएको अनुमान गर्न सकिन्छ। यस सम्प्रदायबारे अरू विशेष कुरा थाहा पाइँदैन। तर चौधौं शताब्दीतिर नेपालमा मतिमत् पुण्यसागरसेन नामका एक आचार्य योगाचार सम्प्रदाय मान्दथे भन्ने कुराको प्रमाण पाइन्छ।

## रहस्यवादी बौद्धधर्म

हिन्दू धर्मका तथाकथित विकृतिको प्रतिक्रियास्वरूप बनेको बौद्धधर्मले पूर्व मध्यकालतिर हिन्दूधर्मप्रति आत्मसमर्पण गऱ्यो जसको फलस्वरूप रहस्यवादी बौद्धधर्मको रूपमा नयाँ मिश्रित धर्म चल्यो। यस अन्तरगत वज्रयान, मन्त्रयान सहजयान र यिनै तत्त्व तिब्बतमा लामायान(लामावाद,को रूपमा प्रख्यात भयो।

## वज्रयान

वज्रयान ३०० ई. तिर बनिसकेको विद्वानहरूले मानेका छन्। उत्तर भारत यस धर्मको विशेष लोकप्रिय स्थान थियो। यसैको प्रभाव नेपालमा पनि पऱ्यो तर यहाँ वज्रयान कहिलेदेखि प्रचलित हुन थाल्यो निश्चित रूपमा भन्न सकिँदैन।

मध्यकालमा अनेक वज्राचार्य रहेका कुराको प्रमाण पाइन्छन्।[१] वज्रयानका एकनामी कुक्कुरिया कपिलवस्तुमा भएका थिए–यिनी चौरासी प्रख्यात सिद्धहरूमध्ये एक थिए। आज वज्रवाराही र वज्रयोगिनी नेपाल उपत्यकाका प्रख्यात मन्दिर छन् जुनलाई हामी वज्रयानसंग सम्बद्ध गर्न सक्दछौं।

---

[१] यस प्रसंगमा नेपालका बौद्धआचार्य सम्बन्धी प्रकरणमा विचार गरिएको छ।

## तन्त्रयान

नेपालमा तन्त्रयानी बौद्धधर्म पनि निकै चल्यो। यस सम्प्रदायमा र हिन्दू धर्म अन्तरगत तान्त्रिक क्रियाहरूमा धेरै अन्तर नभएकोले यसले बढी क्षेत्रमा प्रभाव पार्न सकेको थियो। यस सम्प्रदायको विचार अनुसार सांसारिक विषय वासना इत्यादि पनि धार्मिक क्रियाको रूपमा मान्य हुन थाले। यस रूपमा तन्त्रयानले बुद्धका आदर्श योजनामाथि राम्रैसंग लात मार्‍यो। यस धर्मलाई बौद्धधर्म अन्तर्गत नै मानिन्छ तर यसले बुद्ध शब्दलाई कुनै महत्त्वै दिन सकेन। अर्को शब्दमा भनौं भने बुद्धका अनुशासित नियमहरू शयौं वर्षपछि आएर स्वतन्त्र हुन थाले। त्यसैले यस सम्प्रदायले सामाजिक आचार विचारका आदर्शतिर ध्यान दिन सकेन बरु मानवीय कमजोरीहरूको वशमैं परिरहन थाल्यो। साधनाको नाममा यस सम्प्रदायका अनुयायी जसरी सांसारिक विषय वासनामा डुब्न थाले त्यसले गर्दा विकृति पनि उत्पन्न हुन थाल्यो।

तन्त्रयानको इतिहास नेपालमा त्यति स्पष्ट छैन तर आज देखिने अनेक चैत्य र तथाकथित विहारमा रहेका बौद्ध मूर्तिहरूको रूपमा यसको इतिहास स्पष्टाउन सकिन्छ।

नेपाल संवत् ५०२ (वि सं. १४३९) को इटंबहाल अभिलेखमा 'नमः तारायै' छ अनि मदनरामवर्द्धनलाई "एकजटाचरणसेवक" भनिएको छ।[१] त्यसैमा पछि "आर्यतारा" र 'एकजटी' को पुनः उल्लेख गरिएको छ। एकजटा तन्त्रयानीहरूकी आराध्या देवी हुन्[*]। यिनलाई नीलतारा पनि भन्दछन्।[२] यस सम्प्रदायमा यब–युम मूर्तिको विशेष लोकप्रिय स्थान छ। यसको आदर्श प्रकृति र पुरुषसंग जोडिन्छ। यस्ता मूर्ति बौद्धको चैत्यका वरिपरि विशेष देखिन्छन्।

नेपालमा तन्त्रयान पनि चार सम्प्रदायमा विभक्त भई लोकप्रिय भएको छ। ती सम्प्रदाय हुन्:

---

[१] Medieval Nepal. III, D. R. Regmi. P. 24–26

[*] द्रष्टव्य- An Introduction to Buddhist Esoterism–B. Bhattacharya P. 134

[२] द्रष्टव्य- The Gods of Northern Buddhism–A. Gelty P. 120

आज नेपाल उपत्यकामा बाँडाहरू 'तारे माम सर्न' भनेर अभिवादन गर्दछन्। यो पनि तन्त्रयानसंग सम्बद्ध रहेको मान्न सकिन्छ।

पश्चिमी नेपालका मध्यकालीन राजाहरूको समयका शिलालेखका शीर्षभागमा 'ॐमणि पद्मे हुँ' लेखिएको देखिन्छ। वि. सं. १४१२ को दुल्लु अभिलेखमा त्यही मन्त्र लेखिएको छ।[१] पृथ्वीमल्लको वि. सं. १४१४ को जुम्ला अभिलेखमा त्यही कुरा देखिन्छ।[२] यी उदाहरणबाट पश्चिमी नेपालमा लामा-वादको राम्रो प्रभाव-क्षेत्र रहेको कुरा स्पष्ट हुन आउँछ।

नेपाल उपत्यकामा पनि लामावादले उत्तिकै प्रभाव पारेको छ। सिम्भू र बौद्धका चैत्यमा आज पूजा आजा गर्ने र विशेष धार्मिक परम्परा चलाउने काममा लामाहरू नै अगाडि सरिरहेका छन्। तिब्बतो-बर्मी समूहका नेपाली जनजातिहरूको धार्मिक र प्रेतक्रियामा भोटे र लामाहरूको महत्त्वपूर्ण स्थान पनि यही कुराको सङ्केत गर्दछ भन्ने अनुमान गर्न सकिन्छ।



---

[१] इतिहास प्रकाश-२-१, पृ. १६०

[२] हिमवत्संस्कृति-१-१, पृ. ४०

स्वाभाविक
ऐश्वरिक
कार्मिक* र
यात्निक

तामांगहरूमा "दोर्जे" थर भएका केही हांगा हुन्छन्। तिनीहरू पनि सम्भवतः तन्त्रयानका अनुयायी हुन्। तिब्बती भाषामा दोर्जेको अर्थ एक किसिमको तान्त्रिक क्रिया हुन्छ।

तन्त्रयान अन्तर्गत सहजयान र कालचक्रयान पनि आउँछन्। यी दुइ सम्प्रदाय पनि मध्यकालीन नेपालमा निकै लोकप्रिय थिए। आज नेपालमा दिन दिनै गरिने अनेक किसिमका पूजा आजाको र अज्ञात बौद्ध विहारमा सुरक्षित लेखोट किताबको अध्ययन भएमा यी सम्प्रदायहरूको राम्रो परिचय दिन सकिन्छ।

तन्त्रयानको विषयमा विचार गर्दा आदिबुद्ध सम्बन्धी विचार पनि गर्नु आवश्यक छ। आदिबुद्धको विचारले अनेक तान्त्रिक सम्प्रदायहरूको निर्माणमा सहयोग गरेको कुरा विद्वान्हरूले मानेका छन्। कहिले कहिले आदिबुद्धलाई वज्रधर पनि भनिन्छ तर अरू सम्प्रदायसंग सम्बद्ध भएपछि यसको रूप पनि परिवर्तित हुन थाल्यो। आदिबुद्ध अथवा वज्रधरका मूर्ति नेपालमा प्रशस्त पाइन्छन्। तिब्बतमा पनि यसका मूर्ति बनाइन्छन् जसको आदर्श नेपालबाटै लिइएको हो। आदिबुद्धका प्रशस्त मूर्ति यहाँ पाउनाको कारण यस विचारको उत्पत्ति यहीं भएकोले हो। स्वयम्भूपुराणमा नेपाल उपत्यकाको निर्माण आदिबुद्धले गरे भनिएको छ जो सांकेतिक रूपमा आदिबुद्धको लोकप्रियताको परिचायक हो। यिनका मूर्ति अरू देशमा बनेका पाइँदैनन् यसबाट नेपालको विशेषता पनि स्पष्ट हुन्छ।

## लामावाद

तिब्बतमा तन्त्रयान वज्रयान र त्यहींकै प्राचीन धर्म बोन्पोको सम्मिश्रण लामावादको रूपमा प्रख्यात भयो। यस सम्प्रदायमा विशेष रूपमा (बाह्य परिचय) "ॐ मणि पद्मे हुँ" मन्त्रको जप गर्ने परम्परा छ। उक्त मन्त्र नेपालका अनेक चैत्यहरूमा लेखिएका देखिन्छन् जो लामावादको प्रभावात्मक हो।

*कार्मिक सम्प्रदाय तिब्बतको कर्म प हो सम्प्रदायको स्थानीय रूप हो।

# नेपालका बौद्ध आचार्य र भिक्षु

नेपाल प्रख्यात बौद्ध केन्द्रको रूपमा रहे तापनि यहाँ त्यस धर्मसंग सम्बद्ध आचार्यहरू त्यति धेरै भएका देखिंदैनन्। यस विषयमा सहायता दिने कुनै विशेष प्रमाण पनि धेरै पाइंदैनन्। यसैले यस प्रसंगमा धेरै भन्न सकिंदैन। केही शिलालेख, हस्तलिखित ग्रन्थका पुष्पिका र केही विदेशी साक्ष्यको आधारमा केही बौद्ध विद्वान् र भिक्षुको नाम थाहा पाउँछौं।

ईस्वी संवत्को सातौं शताब्दीतिर शीलमञ्जु एक योग्य आचार्यका रूपमा थिए। उनले तिब्बती राजा स्रोंग चेनको पालामा तिब्बत गई अनेक बौद्धग्रन्थको अनुवाद कार्यमा सहायता दिएका थिए भन्ने कुरा श्रीराहुल साँकृत्यायनज्यूले लेख्नु भएको छ।[१] यी आचार्य अंशुवर्माका समकालीन हुन सक्दछन्। तिब्बतमा बौद्ध धर्मका ग्रन्थको अनुवाद गरी त्यहाँ बौद्ध धर्मलाई स्थिर बनाउन सहयोग गर्नेहरूमा शीलमञ्जु पनि निकै महत्त्वपूर्ण रहेका देखिन्छन्।

विक्रमको एघारौं शताब्दीमा बोधिगुप्त नामका एक विद्वान् बौद्ध आचार्य भएका थिए। नेपाल संवत् ८८ (वि. सं. १०२४) मा सारिएको उष्णीष-विजया नामक धारिणीको पुष्पिकाबाट यिनको केही संक्षिप्त परिचय थाहापाइन्छ।[२] त्यस प्रमाण अनुसार यिनी महायान बौद्धधर्मका अनुयायी थिए। त्यसमा उनलाई 'परमाचार्य' भनिएकोले उनी बौद्धधर्मका योग्य आचार्य मान्न सकिन्छ। झण्डै यसै वेलातिर वागीश्वरकीर्ति विशेष प्रभावकारी थिए। यिनी वि. सं. १०६० तिर भएका थिए। प्रसिद्ध इतिहासकार सूर्यविक्रम ज्ञवालीले यिनी फर्पिङमा बस्दथे भनी लेख्नु भएको छ।[३] लामा तारानाथले यिनको खूब प्रशंसा गरेका

[१] तिब्बतमें बौद्धधर्म– पृ. ८

[२] बृहत्सूचीपत्र (वीर पुस्तकालय), बौद्ध, पृष्ठ–८०

[३] नेपाली गद्यचन्द्रिका–भाग–२, सम्पादक–दिनेशचन्द्र रेग्मी, जगदीशचन्द्र रेग्मी पृ. २७

छन् । यिनी तिब्बतका लामाहरूद्वारा निकै मानिन्थे । यसै वेलातिर शान्तिभद्र नामका एक बौद्ध विद्वान् नेपालमा भएका थिए । यिनले तिब्बत गई रत्नाकर शान्तिको सहायताबाट विज्ञप्तिमात्रतासिद्धि नामक बौद्धग्रन्थको अनुवाद गरेका थिए । अनन्तश्री पनि यस वेलाका क्रियाशील बौद्ध आचार्य थिए । यिनले तिब्बत गई ज्ञानश्री मित्रका सहयोगले कार्यकारणभावसिद्धिको तिब्बती भाषामा अनुवाद गरेका थिए ।

मध्यकालीन नेपालमा गौतम श्री विशेष प्रख्यात बौद्ध भिक्षु र आचार्य थिए । गुइतविहार पाटनमा रहेको एक शिलालेखमा यिनको नामोल्लेख गरिएको छ ।[१] त्यस अभिलेखमा यिनलाई "महापण्डित" र "शाक्यभिक्षु" विशेषण लगाइएकोले यिनी योग्य विद्वान् रहेछन् भन्ने अनुमान गर्न सकिन्छ । त्यस अभिलेखको समय ने. सं. १४४ (वि. सं. १०८१) दिइएको छ । त्यस अभिलेख अनुसार सप्तपुर महाविहार यिनैले बनाएका थिए ।[२] यसै अभिलेखमा शाक्यभिक्षु शुभ श्रीको पनि उल्लेख गरिएको छ । यसै वेलातिर रवेन्द्रदेव पनि प्रख्यात बौद्ध आचार्य भएका देखिन्छन् । नेपाल संवत् १८३ (वि. सं. ११२०) मा सारिएको पञ्चरक्षाको पुष्पिकामा यिनको उल्लेख गरिएको छ ।[३] यिनलाई त्यसमा आचार्य स्थविर विशेषण लगाइएकोले यिनी त्यस वेलाका नामी र विद्वान् आचार्य रहेका अन्दाजी गर्न सकिन्छ ।

ने. सं. २०४ (वि. सं. ११४१) मा सारिएको सेकनिर्देशपञ्जिकाको पुष्पिकाभागबाट एक बौद्ध विद्वान् वज्राकरजीवको सांकेतिक परिचय पाइन्छ । उक्त प्रमाणमा वज्राकरजीवलाई "सौगततत्त्ववेदी" भनिएकोले[४] उनी बौद्ध धर्म र दर्शनका ज्ञाता रहेका ज्ञात हुन्छन् । यसभन्दा अलि पछि कीर्ति श्रीज्ञान नाम भएका एक विद्वान् बौद्ध पण्डित भएका थिए । यिनको नाम नेपाल संवत् ३२७ (वि. सं. १२६४) मा सारिएको अष्टसाहस्रिका प्रज्ञापारमिताको पुष्पिकामा उल्लेख गरिएको छ ।[५] नेपाल संवत् ३६८ (वि. सं. १३०५) को पाटन गुइतविहार अभिलेखबाट "महापण्डित विभ्रत् चंद्रपाल"को परिचय पाइन्छ ।[६] यिनको महापण्डित विशेषणबाट उनी बौद्ध शास्त्रका विद्वान् थिए भन्ने अनुमान गर्न

---

[१] Medieval Nepal–Vol. III. P. 4.
[२] Medieval Nepal-III. Regmi P. ४
[३] पेतेक – पृष्ठ–४४
[४] ऐजन—पृष्ठ–४८
[५] बृहत्सूचीपत्र (वीर. पु); बौद्ध, पृ. ४०
[६] Medieval Nepal. III.-Regmi. P 12

सकिन्छ। बौद्ध धर्ममा विशेष योग्यता भएका आचार्यलाई महापण्डित भन्ने परम्परा पनि छ। चन्द्रपालका समकालीन भिक्षु वीरमति वज्राचार्य एक वज्रयानी आचार्य रहेको अनुमान गर्न सकिन्छ। नेपाल संवत् ३७३ (वि. सं. १३१०)मा सारिएको क्रियासङ्ग्रहपञ्जिकाको पुष्पिकामा यिनको नामोल्लेख भएको छ।[१]

तिब्बतका बौद्ध यात्री धर्मस्वामिको जीवनीबाट तत्कालीन नेपालका केही बौद्ध आचार्यहरूको सांकेतिक परिचय पाइन्छ। त्यसमा रत्नरक्षित नामका एक बौद्ध आचार्यको उल्लेख गरिएको छ जो स्वयम्भू चैत्य नेर बस्दथे।[२] त्यसैमा एक बौद्ध विद्वान् रवीन्द्रको उल्लेख गरिएको छ। धर्मस्वामिले रवीन्द्रसंगै अनेक बौद्ध शास्त्र पढेका थिए। त्यस ग्रन्थमा रत्नरक्षितलाई पनि गुरु भनिएको छ। लामा तारानाथले 'भारतमा बौद्ध धर्मको इतिहास'मा नेपालका 'दशवल लविन्ह (रवीन्द्र)'को उल्लेख गरिएको छ।[३] धर्मस्वामिले उल्लेख गरेका रवीन्द्र र यी रवीन्द्र एकै व्यक्ति रहेको हुनु सम्भव छ।

विक्रमको पन्ध्रौं शताब्दीमा नेपालमा वज्रयान धर्मका आचार्यको रूपमा क्षेमेन्द्रको नाम उल्लेखनीय छ। नेपाल संवत् ४७६ (वि सं. १४१३) मा सारिएको चान्द्रव्याकरणको पुष्पिकाबाट यिनको परिचय दिइएको छ।[४] यसै समयमा वज्राचार्य श्रीजयानन्द र वज्राचार्य श्रीज्ञानकीर्तिसेन पनि वज्रयान सम्प्रदायका आचार्यको रूपमा प्रख्यात थिए। नेपाल संवत् ४९२ (वि. सं. १४२९) को स्वयम्भू शिलालेखमा उनीहरूको उल्लेख गरिएको छ।[५]

नेपाल संवत् ५११ (वि. सं १४४८) को बु बा बहि पाटनको शिलालेखमा (ताम्रपत्र) आचार्य सुबोधिजीवको उल्लेख भएको छ[६]। यिनले पनि बौद्ध शास्त्रको अध्ययन गरी आचार्यपद प्राप्त गरेको कुरा अनुमित हुन्छ।

यसपछि हामी विशेष योग्य आचार्यको नामोल्लेख पनि निकै कम पाउँछौं जसबाट त्यस समयमा बौद्धधर्मले मौलिकता त्यागी अति विकृत रूप

---

[१] Medieval History of Nepal– L. Petech P. 88
[२] Biography of Dharmaswamin P. 53–56
[३] Mystic Tales of Lama Taranath By B. N. Batta (1944) P. 61
[४] Medieval History of Nepal–L. Petech P. 121
[५] Medieval Nepal III.–Regmi P. 21
[६] ऐजन पृ. ३२- ३३

पाउन थालेको ज्ञात हुन्छ । बौद्धधर्म जीवित रहेर पनि यहाँ त्यसले केही राम्रो प्रभाव जमाउन छोडेको अनुमान गर्न सकिन्छ ।



# बौद्ध शिक्षाको केन्द्र: नेपाल

प्राचीन समयदेखि नै नेपाल बौद्ध शिक्षाको एक केन्द्र रहेको हुनुपर्दछ तर यस विषयका प्रमाण हामीसंग कम छ । शीलमञ्जु जस्ता विद्वान्को परिचय पाउन पनि हामीले विदेशी प्रमाणको मुख हेर्नु पर्दछ । अर्को शब्दमा भन्ने हो भने प्राचीन नेपाल बौद्धशिक्षाको केन्द्र रहेको अनुमान त गर्न सकिन्छ तर यस विषयमा केही विशेष भन्न सकिँदैन । आचार्य वसुबन्धु नेपालमा किन आए यसको ठीक उत्तर दिन पनि सक्दैनौं । तर मध्यकालीन नेपाल एक बौद्ध शिक्षाको केन्द्रको रूपमा ख्याति पाउँथ्यो भन्ने कुरा चाहिं हामी नि:सङ्कोच भन्न सक्दछौं । यसका मुख्य कारण हुन् भारतमा मुसल्मानी बर्वर आक्रमण र उनीहरूले गरेका विध्वंस, अनि पुरानो समयदेखि नेपालले कमाइरहेको नाम ।

मध्यकालमैं नेपालका अनेक विद्वान् तिब्बतमा गई बौद्ध धर्मको स्थायित्वको लागि काम गर्नमा अगुवा भएका थिए । यसै वेलामा शान्तिभद्र अनन्त श्री (वि. सं. ११११२ तिर) र विमल श्री आदि नेपाली विद्वान्ले तिब्बत गई बौद्धधर्मको राम्रो सेवा गरेका थिए । उक्त विद्वान्हरूले नेपालमैं नेपाली गुरुहरूको छत्रच्छायामा शिक्षार्जन गरेका थिए ।

नेपालको महत्त्व देखेर नै तिब्बतका बौद्ध भिक्षु धर्मस्वामीले यहाँ आई योग्य विद्वान् रत्नरक्षित र रवीन्द्रसंग विद्या पढेका थिए । धर्मस्वामिले यहाँ अनेक तिब्बती विद्यार्थीहरूलाई नेपाली विद्वान्हरूसंग अध्ययन गरिरहेका देखेका थिए । यी कुराको समर्थन तत्कालीन एक शिलालेखले पनि गरेको छ । ने. सं. ३५० तिर (अन्दाजी) को गुइतविहार पाटन, दीपङ्कर बुद्ध मूर्तिको पादपीठको अभिलेखमा लेखिएको छ:

विख्याता ललितापुरीति नगरी
दिक्षु सर्व्वास्वपि विद्याभ्यास

…… …… …… ….कृतयुग…… …… …… …… …[1]
[विद्याको अभ्यासले गर्दा सबै दिशातिर
प्रख्यात भएको ललिता पुरी (पाटन)
…… ……सत्ययुग…… ……][2]

उक्त उद्धरणबाट पाटन विद्याध्ययनको महत्त्वपूर्ण केन्द्रको रूपमा प्रख्यात भएको कुरा स्पष्ट थाहा पाइन्छ। त्यसै अभिलेखमा "गौतम श्री" र उनका शिष्यको उल्लेख गरिएको छ।

प्रमाण धेरै नपाइए पनि नेपाल मध्यकालमा बौद्ध शिक्षाको अध्ययन अध्यापनको एक केन्द्र रहेको देखिन्छ। त्यस कालमा भारतमा विदेशी आक्रमणको प्रभावले कुनै विश्वविद्यालय पनि बाँकी रहन पाएको थिएन। यसैले विदेशी आक्रमणको प्रभावले मुक्त नेपालले केही अंशमा त्यस परम्परालाई अक्षुण्ण राखेर एक महत्त्वको काम गरेको थियो।

---

[1] Medieval Nepal III.-Regmi P. 11

[2] यस अभिलेखको तिथिभाग भग्न भएको छ। अतः यहाँ अन्दाजी गरेर समय दिइएको छ।

# बौद्ध विहार

प्राचीन कालदेखि नै नेपालमा प्रशस्त बौद्ध विहार रहेका थाहा पाइन्छ। बौद्ध धर्मको त्रिरत्न मध्ये संघ अन्तर्गत विहार पर्दछ। लिच्छविकालका केही शिलालेखमा आर्य भिक्षुसंघको उल्लेख पाइन्छ।* नरेन्द्रदेवका दुइ अभिलेखमा आर्यसंघको उल्लेख गरिएको छ।[१] ती शिलालेखमा उक्त आर्यसंघले शिवदेव नामको एक विहारको स्थापना गरेको वर्णन गरिएको छ[२] जसबाट यो कुरा स्पष्ट हुन्छ कि आर्यसंघ विहारहरूको निर्माण र सञ्चालन गर्ने काम गर्दथ्यो। ती अभिलेख अनुसार आर्यसंघद्वारा संस्थापित शिवदेवविहारले पनि 'चतुर्दिशार्य-भिक्षुसंघ' संस्थाको स्थापना गरेको थियो जसको उद्देश्य बौद्ध भिक्षु-हरूको सुविधा आदिको प्रबन्ध गर्दथ्यो। लिच्छविकालकै एक आर्को शिलालेखमा 'साँघिकभिक्षुसंघ' को उल्लेख भएको छ।[३] यसबाट पनि त्यस समयमा बौद्ध भिक्षुहरूको संघ रहेको थाहा पाइन्छ। यसै समयको एक आर्को शिलालेखमा

---

*चाबहिल स्तूपमा रहेको शिलालेखमा पनि एक संघको उल्लेख गरिएको छ · अ. सं. भाग-६ पृ. १८

[१]क. आर्यसंघस्येत्यनेन च सम्पन्नः श्रीशिवदेवविहारे चतुर्दिशार्यभिक्षुसंघाय — पशुपति वज्रघर अभिलेख-नोली पृष्ठ-१००

ख. ऐजन-येंगुबहाल पाटन अभिलेख-नो. पृ १०२

[२]ऐजन ऐजन

यी दुइ अभिलेख एकै हुन् र एउटै शिलालेखका दुइ प्रति हुन्। एउटै कुरा दुइ ठाउमा प्रचार गर्नाको लागि दुइटा शिलालेख प्रसारित गरिएको कुरा थाहा पाइन्छ।

[३]नोली पृष्ठ-१०४ (सांखु अभिलेख)

आर्यसंघको उल्लेख गरिएको छ ।[१] एक आर्को शिलालेखमा पनि संघको उल्लेख गरिएको छ ।[२] मध्यकालमा पनि भिक्षुसंघ रही रहेको कुरा अन्दाजी ३१५ नेपाल संवत्‌को गुइतबहाल पाटनको दीपंकर मूर्तिको पादपीठको अभिलेखबाट थाहा पाइन्छ जसमा भिक्षुसंघको उल्लेख गरिएको छ ।[३]

भिक्षु संघ जस्तै भिक्षुणी संघ पनि प्राचीन कालदेखि नै रही आएको थाहा पाइन्छ । पाटन चपटोलमा रहेको एक लिच्छविकालिक शिलालेखमा चातुर्दिश महायान सम्प्रदायको आर्यभिक्षुणी संघ रहेको उल्लेख गरिएको छ ।[४] यस्तै वहिलि टोल पाटन जलद्रोणीको अभिलेखमा भिक्षुणीको उल्लेख गरिएको छ ।[५] मुसुं वहाल काठमाण्डू अभिलेखमा पनि 'भिक्षुणी संघ' को उल्लेख गरिएकोछ ।[६]

यी विवरणबाट प्राचीन नेपालमा बौद्ध संघको महत्त्वपूर्ण स्थान देखिन्छ । संघको राम्रो स्थिति देखिएकोले त्यस समयमा बौद्ध धर्मको महत्त्वपूर्ण स्थान रहेको कुरा पनि स्वतः स्पष्ट हुन्छ ।

संघको आर्थिक स्थिति पनि राम्रै रहेको थाहा पाइन्छ किनभने अनेक शिलालेखमा भिक्षुसंघ र भिक्षुणीसंघलाई आर्थिक सहायता र भूमिदान गरेको उल्लेख पाइन्छ । पाटन चपटोल अभिलेखमा आर्यभिक्षुणीसंघलाई अक्षयणीवी दिइएको कुरा लेखिएको छ ।[७] आर्को अभिलेखमा संघलाई केही जग्गा दिइएको कुरा लेखिएको छ ।[८] काठमाण्डू वण्डाहिटीको अभिलेखमा

---

[१] अ.सं. भाग--१. पृ. ३३ (वण्डाहिटी काठमाडौं अभिलेख)

[२] नोली पृष्ठ ६० (मंगल बजार पाटन अभिलेख)

[३] Medieval Nepal-vol.III. P. II

[४] चातुर्दिशमहायानप्रतिपन्नार्यभिक्षुणीसंघपरिभोगायाक्षयणीवी प्रतिपादिता-अ. सं. भाग-५ पृष्ठ-८, यस अभिलेखमा तिथिभाग र राजाको नाम बाँकी रहेको छैन ।

[५] नोली पृष्ठ-१२८

[६] संस्कारपूजार्थम् भिक्षुणीसंघसमर्पितपणाः पुराणसहिता-अ. सं. भाग-६ पृ. २२

[७] चातुर्दिशमहायानप्रतिपन्नार्यभिक्षुणीसंघपरिभोगायाक्षयणीवी प्रतिपादिता पनप्फुनाम पश्चिमप्रदेशे भूमि शत १०० पिण्डमान्या पञ्चाश ५० भूय ग्राम दक्षिणप्रदे (शे) भूमिषष्टि ६० पिण्डमान्या षटत्रिंङ्श गृहप्रस्थ षष्ठश्शताय-अ. सं. भाग-५. पृ. ८

[८] नोली पृष्ठ-६०, मंगलबजार पाटन अभिलेख; यसमा शुरूमा संवाय छ, अनि अभिलेखको धेरै भाग भग्न छ अनि 'ईखुम्प्रदेशे क्षेत्र' लेखिएको छ जसबाट संघलाई जग्गा दिइएको कुरा थाहा पाइन्छ ।

तालिका संख्या–

# लिच्छविकालका विहार

| संख्या | विहारको नाम | अभिलेखको स्थान | राजाको नाम | सन्दर्भ | आधुनिक समता | विशेष विवरण |
|---|---|---|---|---|---|---|
| १ | भुवनाकर श्रीविहार | मत्स्येन्द्रनाथ पाटन | यक्षमल्ल | रेग्मी, III. पृ. ७७ | × | अभिलेख पछिको भए पनि शिवदेव (?) ले बनाएको भनी वर्णन गरिएकोले यसलाई प्रथम स्थान दिइएको हो । |
| २ | मानविहार[१] | हांडीगाउँ | अंशुवर्मा | नोली–पृ. ५०–५१ | × | |
| ३ | गुं विहार | ऐजन | ऐजन | ऐजन | सिम्भू (?) | |
| ४ | राजविहार[२] | ऐजन | ऐजन | ऐजन | × | |
| ५ | खर्जूरिका विहार[३] | ऐजन | ऐजन | ऐजन | × | |
| ६ | अजिका विहार | नक्साल | × | नोली–पृ. | | |
| आर्को | [१]मानविहार | येंगुबहाल पाटन | नरेन्द्रदेव | नोली–पृ. १०२–३ | × | |
| स्रोत | [२]राजविहार | ऐजन | ऐजन | ऐजन | × | |
| | [३]खर्जूरिका विहार | ऐजन र पशुपति | ऐजन | ऐजन; १० | × | |

| संख्या | विहारको नाम | अभिलेखको स्थान | राजाको नाम | अभिलेखको तिथि | आधुनिक समता | सन्दर्भ | विशेष विवरण |
|---|---|---|---|---|---|---|---|
| ७ | मध्यम विहार[१] | हांडीगाउँ | अंशुवर्मा | संवत् ३२ | × | नोली–पृ.५०-५१ | |
| ८ | भयरुचि विहार | येंगुबहाल पाटन | नरेन्द्रदेव | भग्न | × | नोली–पृ.१०२-३ | |
| ९ | चतुर्भालङ्कासन विहार | ऐजन | ऐजन | ऐजन | × | ऐजन | यसको नाम लङ्कासनमात्र पनि हुन सक्छ । |
| १० | महाप्रतिहार वार्त्तसुजातप्रभु विहार | यम्पि बहि पाटन | × | तिथिरहित | × | नोली–पृ.८६ | |
| ११ | वार्त्तकल्याणगुप्तविहार | येंगु बहाल पाटन | नरेन्द्रदेव | × | × | नोली–पृ.१०२-३ | |
| १२ | शिवदेव विहार | पशुपति | ऐजन | संवत् १०३ | × | नोली-पृ.९९-१०१ | |
| १३ | प्रणिधि विहार | पाटन | अंशुवर्मा | × | × | अ. सं.९.पृ.२१ | |
| १४ | जतत्वम्मविहार | नक्साल | × | × | × | नोली–पृ.११३ | × |
| आर्को स्रोत | [१] मध्यम विहार | येंगु बहाल पाटन | नरेन्द्रदेव | भग्न | × | नोली-पृ.१०२-३ | |

## मध्यकालीन विहार

| संख्या | विहारको नाम | प्रमाणको तिथि | सन्दर्भ | अर्को प्रमाण | | विशेष विवरण |
|---|---|---|---|---|---|---|
| | | | | तिथि | सन्दर्भ | |
| १ | राघव देव विहार | | CSMASB I. N. 49.P.49-50 | | | |
| २ | महावातीश्चल विहार | नै. सं. ४० | अ. सं. ६.पृ. १५ | | | |
| ३ | ल्हं विहार | ने. सं. १२८ | पेतेक–३५ | | | |
| ४ | सप्तपुरी महाविहार | ने. सं. १४४ | अ. सं. ६, २५ | | | |
| ५ | पद्म चक्र महाविहार | ने. सं. १६५ | पेतेक–४१ | | | |
| ६ | चाकवाटी महाविहार | ने. सं. २०२ | ऐ. ४६ | | | |
| ७ | वृ विहार | ने. सं. २५३ | रेग्मी १–१६७ | | | |
| ८ | परनिर्वाण महाविहार | ने. सं. २८४ | वी. पु. बौ. ४६ | | | |
| ९ | धर्मचक्र महाविहार | ने. सं. २८५ | पेतेक–६४–६५ | | | |
| १० | चित्र महाविहार | ने. सं. २९३ | ऐ. ६७ | ने. सं. ४९६ | पेतेक-१२७ | |
| ११ | वैश्य श्रीदिवाकरवर्म्म महाविहार | ने. सं. ३७३ | पेतेक–८८ | | | |
| १२ | धर्म धातुविहार | अ. १२६४ ई. | B. D. 55 | | | |
| १३ | बु खम्विहार | ऐजन | ऐजन | | | |
| १४ | जयमनोहरवर्मण महाविहार | ने. सं. ३५६ | रेग्मी-१. २१७ | ने.सं. ४०४ | पेतेक-पृ-९६-९७ | |

| संख्या | विहारको नाम | प्रमाणको तिथि | सन्दर्भ | अर्को प्रमाण तिथि | अर्को प्रमाण सन्दर्भ | विशेष |
|---|---|---|---|---|---|---|
| १५ | हनाल विहार | ने. सं. ४५७ | पेतेक– पृ. १०६ | | | |
| १६ | योखाच्छ्विहार | ने. सं. ४७६ | पेतेक– पृ. १२१ | ने.सं ४६१ | पेतेक–पृ.१२५ | |
| १७ | चतुर्ब्रह्मविहार | अ. १२०० ई. | CSMAS B.P. 179 | ने. सं. ५३७ | पेतेक-पृ.१५६ | |
| १८ | स्वक्वे विहार | ने. सं. ३६१ | पेतेक– पृ. ६४ | | | |
| १९ | सिकोमगुन्हि विहार | ने. सं. ४६२ | रेग्मी– ३, पृ.२३ | | | |
| २० | कारण्ड विहार | ने. सं. ४६४ | पेतेक– पृ. १२६ | | | |
| २१ | षडक्षरीमहाविहार | ने. सं. ५०० | CSMAS B.P. 144 | ने सं.५३१-५४७ | पेतेक–पृ. १५५ | |
| २२ | पो विहार | अ. ४०० ने. सं. | रेग्मी ३, पृ. ११ | | | |
| २३ | यङ्ग्व विहार | ने. सं. ४०३ | ऐजन-पृ.१३० | | | |
| २४ | को विहार | ने. सं. ४०३ | ऐजन | | | |
| २५ | बम्पि विहार | ने. सं. ५०० | CBMC P.17 | | | |
| २६ | पारावर्त विहार | ने. सं. ५०२ | रेग्मी-३-पृ.२६ | | | |
| २७ | रञ्जन विहार | ने. सं. ५०८ | ऐजन-पृ. ३१ | | | |
| २८ | वञ्छ विहार | ने. सं. ५०६ | पेतेक-पृ.१३४ | | | |
| २९ | रुद्रवर्णमहाविहार | ने. सं. ५११ | रेग्मी-३, पृ. ३२ | | | |
| ३० | पुनेश्वरविहार | ने. सं. ५१५ | पेतेक-पृ. १३६ | | | |
| ३१ | कीर्तिपुण्यमहाविहार | ने. सं. ५३१ | CSMAS B.P. 140 | ने. सं.५०८ र ने. सं. ५६६ | रेग्मी-३, पृ.३० पूर्णिमा१०,पृ.१८ | |

| संख्या | विहारको नाम | प्रमाणको तिथि | सन्दर्भ | आर्को प्रमाण | | विशेष |
|---|---|---|---|---|---|---|
| | | | | तिथि | सन्दर्भ | |
| ३२ | गिरिवर महाविहार | ने. सं. ५०२ | रेग्मी–३ पृ. २६ | | | |
| ३३ | श्रीधवर्मपिंथमहाविहार | ने. सं. ५६७ | रेग्मी–३ पृ. ६८ | | | |
| ३४ | श्रीटववहाल | ने. सं. ५४७ | ऐजन–पृ. ५७ | | | |
| ३५ | वूवाहाल | ऐजन | ऐजन | | | |
| ३६ | येकर विहार | अ. ५१२ ने. सं. | गोपालवंशावलि | | | |
| ३७ | यत्रदेवीमहाविहार | ने. सं. ५४० | पेटेक–पृ. १५७ | | | |
| ३८ | नम विहार | ने. सं. ५६४ | ऐजन–पृ. १६४ | | | |
| ३९ | नागवर्णमहाविहार | ने. सं. ५६४ | ऐजन–पृ. १६२ | | | |
| ४० | तवल्छेविहार | अ. ५५० ने. सं. | पूर्णिमा–१०,पृ.२१ | | | |
| ४१ | न्हादुदुकोविहार | ने. सं. ५३० | रेग्मी–३, पृ. ७८ | | | |
| ४२ | तेदोविहार | ने. सं. ५८३ | ऐजन–पृ. ७८ | ने. सं. ५८३ | रेग्मी–३, पृ.७९ | |
| ४३ | राजश्रीविहार | ने. सं. ५४७ | ऐजन–पृ. ५६ | | | |
| ४४ | जयश्रीमहाविहार | ने. सं. ५११ | ऐजन–पृ. ५६ | | | |

## यक्षमल्लपछिका ऐतिहासिक सामग्रीबाट ज्ञात बौद्ध विहार

| | नाम | प्रमाणको समय |
|---|---|---|
| १. | ज्येष्ठ विहार (जेष्ठ विहार) | ६५६,७७२ |
| २. | ज्याठा बहाल | ८०८ |
| ३. | तलपुल महाविहार | ७६४ |
| ४. | कीर्तिपुण्यवज्रधातुमहाविहार | ७६४ |
| ५. | रयताखा बाहाल | ६४८ |
| ६. | श्रीपुर महाविहार | ६४८ |
| ७. | तलुमुरमहाविहार | ७१३,७६० |
| ८. | आरको विहार | ६४४,७४६ |
| ६. | मञ्ज (ञ्जु) श्री नकविहार | ७१३ |
| १०. | वकु वाहार | ६४० |
| ११. | श्रीवर्षचन्द्र व बाहार | ६४० |
| १२. | खिकोम गुडि वहार | ६८६ |
| १३. | श्रीवन्छुवहार | ८७३ |
| १४. | कोमति वहार | ८१६ |
| १५. | धुनि विहार | ७६३ |
| १६ | सूर्यवर्णमहाविहार | ७८५ |
| १७. | मयूरवर्णमहाविहार | ८३६ |
| १८. | रुद्रवर्ण महाविहार | ७६५ |
| १६. | वैश्रवण महाविहार | ७५६ |
| २०. | ज्याय वहार | ८०८ |
| २१. | तनिग्ल बहाल | ७६३ |
| २२. | तव बहार | ८१६ |

| नाम | | प्रमाणको समय |
|---|---|---|
| २३. | दत्त विहार | ९०६ |
| २४. | जयमनोहर महाविहार | ६५६ |
| २५. | ससक (सस्वक) वहार | ६५६ |
| २६. | हिरण्यवर्ण महाविहार | ७५७ |
| २७. | को बहाल | ८००,८०५ |
| २८. | शिलापुरी वानागिरि विहार | ८२८ |
| २९. | चक्रविहार | — |
| ३०. | गाड बहार | — |
| ३१. | मिखा विहार | — |
| ३२. | यम्पि यन्ता वहार | ८१० |
| ३३. | श्रीमूल विहार | ९०६ |
| ३४. | वज्रधातुमहाविहार | |
| ३५. | लुग्र विहार | ९५४ |
| ३६. | क्वथु वहिल | ६९६ |
| ३७. | जयकीर्ति विहार | — |
| ३८. | हेमवर्णमहाविहार | ७५९ |
| ३९. | शुभवर्ण विहार | ७७२ |
| ४०. | कच्छपालगिरिमहाविहार | — |
| ४१ | अनताधिथि महाविहार | ६४९ |
| ४२. | नक विहार | ५०८ |
| ४३. | पुण्यकीर्त्तिमहाविहार | ७९६ |
| ४४. | निह्न निह्न विहार | ६२१ |
| ४५. | मञ्जुश्रीमहाविहार | ७३१ |
| ४६. | तव विहार | — |
| ४७. | जम्बुनद महाविहार | ७१७ |
| ४८. | ओं विहार | ७२५ |
| ४९. | हेमकर्णमहाविहार | ८१२ |
| ५०. | रत्नमण्डलमहाविहार | — |
| ५१. | कृष्णगुप्त महाविहार | ७३५ |
| ५२. | क्वाथ विहार | — |

| | नाम | प्रमाणको समय |
|---|---|---|
| ५३. | दत्तविहार | ६५८ |
| ५४. | श्रीकिण्डोलमा विहार | ६५६ |
| ५५. | धर्मचक्रमहाविहार | ६५६-७६६-८३५ |
| ५६. | श्रोन्ता विहार | ६६६ |
| ५७. | सिक्वं गुत्रीवन्त विहार | — |
| ५८. | मणिसंग महाविहार | ६०० |
| ५६. | बोधिप्रणिधि यट्ख बहार | ८२८ |
| ६०. | गुणाकर महाविहार | ७८८ |
| ६१. | करुणापुरी महाविहार | अ. ६०० |
| ६२. | श्रीबिजलंख महाविहार | अ. ८५० |
| ६३. | श्रीरत्नकीर्ति महाविहार | ८१६ |
| ६४. | राजगुर्व्विहार | ८२१ |
| ६५. | यम्पि विहार | ८१० |
| ६६. | दध वाहार | ८१० |
| ६७. | नक बाहार | ६३१,८१० |
| ६८. | चाखा बाहार | ८१० |
| ६६. | कारण्ड बाहार | ८०० |
| ७०. | वकु बाहार | ७८७ |
| ७१. | त्रिभय वाहार | ६१५ |
| ७२. | उद्योतकीर्ति विहार | ६३१ |
| ७३. | सूर्यचन्द्र महाविहार | ६३१ |
| ७४. | चक विहार | ६३१ |
| ७५. | मणिसंघ विहार | ६३१ |
| ७६. | निध्म विहार | — |
| ७७. | राजकीर्तिमहाविहार | ६४६ |
| ७८ | वु विहार | ६३६ |
| ७६. | गुस्तल महाविहार | ६३५ |
| ८०. | पिन्छ विहार | ६३५ |
| ८१. | ध्वाखा विहार | ७०१ |
| ८२, | गु वाहार | ८०१ |

| नाम | प्रमाणको समय |
|---|---|
| ८३. बलाछ्रु वाहार | ६८० |
| ८४. कुति वाहार | ८०६ |
| ८५. चलाछे वाहार | ६८४ |
| ८६. चैत्र वाहार | ८०६ |
| ८७. वष्न वाहार | ८५० |
| ८८. क्वतथु वाहार | ७६४ |
| ८९. वकन वाहार | ८२३ |
| ९०. चावुंग वाहाल | ८३६ |
| ९१. अतकि वाहार | अ. ८५० |
| ९२. चो वाहार | ७८४ |
| ९३. घुसा वाहार | ८०१ |
| ९४. कोमती विहार | ८१२ |
| ९५. चाक्र वाहार | अ. ८०२ |
| ९६ तव वाहार | ८१६ |
| ९७. पार वाहार | ८२२ |
| ९८. गाल वाहार | ८०० |
| ९९. वंगु वाहाल | ६७६ |
| १००. विथु वाहाल | ७६६ |
| १०१. क्व वाहार | ७८७ |
| १०२. गाड़ वाहार | अ. ८५० |
| १०३. गार वाहार | ८१० |
| १०४ श्रीवाहाल | ६७६ |
| १०५. पित वाहार | ७८६ |
| १०६. वतु वाहार | ७२५ |
| १०७. मस वाहार | ७७३ |
| १०८. मवश्रे वाहार | ७७३ |
| १०९. तरमलमहाविहार | ७८० |
| ११०. क्वाथ बाहाल | ७२५ |
| १११. वं वाहार | ७२५ |
| ११२. यितु (इतु) बहालः | ७२५ |

| नाम | प्रमाणको समय |
|---|---|
| ११३. जाम्बुनदवन्महाविहार | ७२५ |
| ११४. इतलंषु महाविहार | ८१५ |
| ११५. विद्याधरि विहार | ८१३ |
| ११६. ग्वार वाहार | ८१३ |
| ११७. आस्को बाहाल | ८३० |
| ११८. प्रसन खिरमहाविहार | अ. ८५० |
| ११९. जमलवाहार | ८३५ |
| १२०. प्रस्पति विहार | ६९६ |
| १२१. गुणकीर्तिमहाविहार | ८०८ |
| १२२. गुरु बहाल | ७०० |
| १२३. चोछे बहाल | ८०० |
| १२४. पशुपति महाविहार | ९१० |
| १२५. जेतवर्ण्ण महाविहार | ९६५ |
| १२६. चतुर्ब्रह्म विहार | ९६५ |
| १२७. पारावर्त महाविहार | ९६० |
| १२८. धव वाहार | ८३४ |



# हाल रहेका बौद्ध विहार

## काठमाण्डू

१. न्हेंका बहिल
२. विश्वकर्मा विहार
३. मिम्न बहाल
४. को बहाल
५. येंगु बहाल
६. हेमाकर विहार
७. मुसुं बहाल
८. मच्छिन्द्र बहाल
९. नक बहि
१०. तर बहाल
११. पिच्छे बहाल
१२. ओम बहाल
१३. ध्वाका बहाल
१४. नघ बहा
१५. चेकनमुगल वहार
१६. क्वाथ बहाल
१७. टे बहाल
१८. दौ बहाल
१९. दुग वहिल
२०. किनु विहार
२१. प्युखा बहाल
२२. तरञ् बहिल
२३. ओटु बहाल

## काठमाण्डू

२४. सिघ बहा
२५. सि बहा
२६. भोटे बहाल
२७. इटं बहाल
२८. यट्खा बहाल
२९. मुस्या बहाल
३०. थ बहिल
३१. गणबहाल
३२. स्येंगु बहाल
३३. विजेश्वरी बहाल
३४. जन बहा
३५. मखन बहा

## पाटन

१. इ बा बहि
२. पिम बहाल
३. वू व बहि
४. थम बहाल
५. मु बहाल
६. गा बहाल
७. न्हु बाहा
८. गुइत विहार
९. तुँ बहि
१०. हिरण्यवर्ण विहार

## पाटन

११. ख्वा बहि
१२. बु बहाल
१३. सु बहाल
१४. देगु बहाल
१५. पिथु बहि
१६. अकं बहाल
१७. दथु बहाल
१८. क्वथु बही
१९. बसु बहाल
२०. जैतवर्ण महाविहार
२१. वकुटोल बहाल (बनेपा)
२२. ओकु बहाल
२३. सि बहा
२४. कोन्ति बहि
२५. यं बहा
२६. बिच्छं बहा
२७. उ बहा
२८. गुजि बहा
२९. ज्य बहा
३०. तंग बहा
३१. त बहा
३२. सु बहा

## पाटन

३३. क्व बहा
३४. को बहाल
३५. पुल्चोक बहिल
३६. चाक बहाल
३७. नाग बहाल
३८. मिखा बहा
३९. यम्पि वहि
४०. चुक बहा
४१. वट्टि चा
४२. ल्हुग बहा

## भदगाउँ

१. पशु बहाल
२. गुरु बहाल
३. सवच्छे बहाल
४. थथु बहिल
५. क्वथु बहिल
६. देगु बहाल

## चापागाउँ

चोना
त बहा
दुरोख्यो बहा



१

# अशोक र नेपाल

नेपालका भाषा वंशावलिहरूमा अशोककी छोरी चारुमती र ज्वाईं देवपालबारे अनेक कथाहरू लेखिएका छन्। ती कथा अनुसार चाबहिल पनि चारुमतीको कार्यक्रमको केन्द्र थियो। यी कथामा ऐतिहासिकता कत्ति पनि छैन। यस्तै आर्को एक परम्परा धेरै इतिहासकारहरूले चलाइरहेका छन् कि पाटनमा रहेका चार स्तूप अशोकले बनाएका हुन्। अशोकले बनाएका भारतका स्तूपको स्वरूप र पाटनका स्तूपको स्वरूपको तुलना गर्दा कतै साम्य रहेको देखिंदैन यस। स्थितिमा यी स्तूपलाई अशोक निर्मित मान्ने कुनै आधारै छैन। अशोकले पाटनमा स्तूप बनाउन लगाएका भए निश्चय नै भारतका कारीगरहरू काम गर्दथे र त्यस स्थितिमा साँची र सारनाथका स्तूपसंग यहाँको स्तूपको केही न केही साम्य रूप देखिने थियो तर यो स्थिति छैन।

अशोक उपत्यका आएको कुनै ऐतिहासिक प्रमाण नभए पनि पूरा भारतवर्ष र एशियाका अनेक देशमा भएको क्रान्तिका नेता अशोकको प्रभाव नेपालमा परेन भन्ने सोच्नु अतिशयोक्ति हुन आउने छ तर उनको धार्मिक क्रान्तिको प्रभाव नेपालमा परेको मात्र उनको राजनीतिक प्रभाव नेपालमा परेको सिद्ध गर्न सक्दैन। तर भारतका बड़े बड़े विद्वान्हरू विनाप्रमाण यो कुरा मान्दछन्।

अशोकको धार्मिक क्रान्तिको नेपालमा कस्तो प्रभाव पर्‍यो ऐतिहासिक प्रमाण यस विषयमा पूर्णतया मौन छन्। यसैले हामी यस विषयमा धेरै विचार गर्ने स्थितिमा छैनौं।

# नेपालमा चैत्य निर्माण कला

नेपालमा विचित्र प्रकारका चैत्य बनेका देखिन्छन् जसबाट यहाँ चैत्यनिर्माण (वास्तु) कलाले मौलिकता प्राप्त गरेको देखिन्छ। प्रत्येक धार्मिक मूर्ति र चैत्यको निर्माणमा एक एक शास्त्र बनेको हुन्छ। त्यसरी नेपालमा चैत्य निर्माणबारे एक शास्त्र रहेको अनुमान गर्न सकिन्छ तर ती ग्रन्थहरू आज ज्ञात अवस्थामा छैनन्। मैले पाण्डुलिपिको अध्ययन गर्दा वीर पुस्तकालयमा सुरक्षित देवप्रतिमालक्षण ग्रन्थको हस्तलिखित प्रतिको अन्त्यमा ३ पृष्ठमा चैत्य बनाउने नियमहरूको वर्णन गरिएको देखें। यो कुन ग्रन्थको भाग हो र यसको लेखनकाल (मूल) बारे केही बताउन सकिंदैन। त्यस प्रतिको लिपि नेपाल संवत् ७०० तिरको छ। यहाँ मूल प्रति सारिएको छ शुद्धाशुद्धिको विचार गरिएको छैन।

## मूल

चैत्यन्तु कुम्भकनक धान्यराशिलताख्यभेदात् यथासंख्यं काराकृति चूडिका खगाण्डतिलसन्निभं। चतुरस्रे कृते क्षेत्रे द्वादशभाजिने एक सार्द्ध द्विकोणयोभागहरणवर्त्तनात्। बिम्ब स्यात्। बिम्बार्द्धे नेमिकान्वितां बिम्बार्द्ध पीठं तद्वन्धर्मिसहस्तकान्तं बिम्बायतंच्छत्र। तच्चैकत्रय पञ्चत्रयोदशं संबुद्धवज्रधराणां नवसप्त प्रत्य (त्ये) कश्रावकबुद्धयोः। अवीतरागधातुचैत्यपञ्चकलिकैव परं नान्यत्। तथा बिम्बाभेदेन यष्ट्यारोपणं कर्त्तव्यं चतुर्बुद्धासनं पुनर्वैरोचनप्रधानीकृतं। बिम्बार्द्धाध्य चतुर्भद्रे चतुर्बुद्ध विराजितं। कोणेस्तम्भार्पणं कुर्यात् बोधिसत्वादि भूषितं। च्छत्राकारन्तु यष्ट्योर्द्ध वर्षास्थालक संज्ञकं। हारार्द्ध हारघण्टादि किङ्किणीजाल भूषितं। तदूर्द्धश्च मणिः कार्य्यं पञ्चकलिकात्र केचित्। विधिना लक्षणोपेतं कारयेद्विधिकोविदः। इति चैत्यलक्षणविधिः। अधुना वज्रघण्टादि चिन्हलक्षणा-न्युच्यते। तालायानविस्तीर्णं द्वादशभाजिनं क्षेतं (त्रं) त्रिगुणायामो पूर्वापर

भागयोश्चतुर्षु कोणेषु शाद्ध कोष्टवत्तनेन ब्रह्मसूत्रमध्यवाम दक्षिणयोः । कोष्टकद्वयं द्वय परित्यागात् पूर्वा (प) रमोः कोष्ठान्तमध्ये ब्रह्मसूत्रान्तं सूत्रचतुष्टयपातनात् मध्यशूची । उभय शून्योः पार्श्वयो भागद्वयद्वयलोपात् भागद्वयद्वये न चतुःशुकं भागद्वया याममकरास्य निकूतं । भागद्वयमूलसिंहनासा सुशोभितं । शर्वद्विभागा यामचतुर्भाग खण्डिताद्धचन्द्राकारं । अष्टभागोच्छ्रयसुनामितत्रिभङ्ग । रश्मिच्छटात्रयविराजित । मध्यभागे तु ब्रह्मसूत्रमध्यात् चतुर्दिक्षुसूत्र द्वयद्वयं त्यक्त्वा वृत्तेत्रा (ऽ) मिते वरटकं । तदूद्ध भागाद्धेन मेखलां त्यक्त्वा भागद्वयेनोभय-विकसितं पद्म मेखलागुणस्याध उद्ध सूक्ष्मगुणद्वयं तल्लग्नं करणीयं । मेखलायां रत्नावली कर्तव्या भागार्द्धेन तत्केशरं । भागैकेन चन्द्रं निष्पाद्यशेषलोपात् भगवतः समयकुलिशं भवति । चतुरङ्गुलादारत्यधिशत्यङ्गुलं यावद्वज्रं करणीयं । विंशत्युद्धन्न कारयेदित्यागमात् । क्रोधानां तु क्रोणेषु भागैकहरणात् कलाल ॥ शुकद्वयहरणात् त्रिशुकं चतुः सुकं हरणात् । एकशुकं नागाक्षेपकरं । नवसूकन्तु कोनेषु चतुः सुकरणात् किन्तु मध्यसूची तस्य वर्तुला । द्वादशसूचिकं विश्ववज्रं तु वरटकस्य चतुर्दिक्षु त्रिशुककरणात्। तदेवपञ्चशुक करणाविंशतिशुकविश्ववज्रं। पुनस्तस्यैवाध उद्ध पञ्च पञ्च शुकदायात् त्रिंशच्छुकं विश्ववज्रमिति ॥ घण्टायास्तु पूर्वभाग पूर्ववत् मध्यताऽधभागार्द्धेन चन्द्रं । भागार्द्धेन केशरं । भागैकेन पद्मं चतुर्भागेन प्रशामुखं । चतुर्भागेन कलशं । भागद्वयेन कलशपीठं । अपरभागस्य कोणधोस्तत्रश्चतुर्भागहरणात् ।— ल पद्मकर्णिका केशरान्वितं । कर्णिकोपरिपीठा घस्त्रीवलीग्रीवारूपाकार्या । भागार्द्धकृतमेखलार्द्धयमध्ये वज्रावली विराजित भागैकं । मध्ये हारार्द्धहारविगतचतुर्भागं । पूर्ववदधो वज्रावलिविराजित भागैकं । समन्तान्निकुतनेनिकैकभागं । महावज्रधरस्य । अक्षोभ्यस्य तु किञ्चित् कराल । हारार्द्धहारमण्डितमध्यं । हारगर्भेषु दिक्षु चक्ररत्नपद्मविश्व वज्रस्थानिथकं वा वज्राणि वैरोचनादीना दिविक्षु लोचन बज्र समनालपद्ममुत्पलानि लोचनादीनां । अर्थ उद्ध वजा (ज्रा) वली द्वगस्थाने चक्ररत्नपद्मविश्ववज्रावलीति तथागतकुल-भेदाद्बोद्धव्याः । वैरोचनादीनां स्थाने अक्षो भ्यस्य चिन्हत्वं । इह घण्टाग्रीवातः प्रभृति शुद्धकांस्यमयी तदुद्ध भागद्वय कनकदिमयं बज्रं च । कापि घण्टा भनी गुन्योलदम्भोजमुखीकापि गोमुखी कापि पद्माकारा चेति विशेषः ॥

उक्त विवरण मध्यकालीन नेपालका चैत्यहरूको निर्माण सम्बन्धी आदर्श प्रस्तुत गर्दछ तर प्राचीन कालका चैत्यहरूबारे यस्ता प्रमाण पाइएको छैन। लिच्छविकालमा चैत्य प्रशस्त बनाइएका छन् तर तिनमध्ये एउटामा मात्र

तुलनीय स्वयम्भूका चैत्य चित्रफलक ६ क

शिलालेख छ जसको आधारमा त्यसको केही वर्णन गर्न सकिन्छ। पाटन त्यागलटोल नेर एउटा सानो चैत्यका चारैतिर शिलालेख उत्कीर्ण गरिएको छ। यसका सम्पादकहरूले यसलाई लिपिको आधारमा अंशुवर्मकालीन मानेका छन्।[१] अभिलेखले चैत्यसंग सम्बद्ध देवताहरूबारे पनि राम्रा विवरण प्रस्तुत गरेको छ। अभिलेखमा अक्षोभ्य, वज्रधर, मञ्जुश्री आदि महायानी बौद्ध देवताको उल्लेख गरिएको छ।

उपत्यकाका चैत्यहरू अनेक किसिमका छन्। यी चैत्यहरूको भेदोपभेदको अध्ययनको लागि एक अलग पुस्तकको रचना हुनु पर्दछ। स्वयम्भूमैं हामी अनेक किसिमका चैत्य देख्दछौं। उपत्यकामा अनेक ठाउँमा यस्ता असंख्य चैत्य देख्दछौं जो यहाँ बौद्धधर्मको लोकप्रियताको परिचायक हो।

---

[१] पूर्णिमा पूर्णाङ्क ५, पृ. ७३

# तिब्बत र नेपाल

नेपाल र तिब्बतको सांस्कृतिक सम्बन्ध निकै पुरानो छ। सांस्कृतिक रूपमा भन्ने हो भने तिब्बतको नेपालसंग जति घनिष्ठ सम्बन्ध रही आएको छ त्यति अरू देशसंग भएको छैन।

बौद्धधर्मको माध्यमले तिब्बत र नेपाल अधिक नजीकै आए। यस कुराको इतिहास अंशुवर्माको समयदेखि प्रारम्भ भएको मानिएको छ। यस विषयमा तिब्बती अनुश्रुतिमा अंशुवर्माले आफ्नी छोरी भृकुटीको बिहे तिब्बतका राजा स्रोंग चेन गम्पोसंग गरिदिएका थिए। यस अनुश्रुतिलाई ऐतिहासिक मान्यता दिने कुरामा हामीलाई शंका लाग्नु स्वाभाविक छ किनभने यस्ता अनुश्रुतिहरूलाई इतिहासमा स्थान दिन थाल्ने हो भने इतिहास इतिहास रहन सक्दैन उपन्यास हुन आउँछ। उक्त अनुश्रुतिलाई सांकेतिक रूपमा लिनु पर्दछ। अतः त्यसले त्यस वेलामा शुरू भएको तिब्बत-नेपालको सांस्कृतिक सम्बन्धतिर संकेत गरेको मान्न सकिने अनुमान गर्न सकिन्छ। यसै समयमा अनेक नेपाली विद्वान्हरू तिब्बतमा गई बौद्धग्रन्थका अनुवाद कार्यमा लागेका कुरा थाहा पाइएको छ। यस्तै कार्यले तिब्बतमा बौद्धधर्मले राम्रो प्रभाव र स्थान प्राप्त गर्न सकेको थियो भन्ने कुरामा शंका प्रकट गर्नु परोइन।

नेपालमा अनेक तिब्बती विद्यार्थीहरूले अध्ययन गरी आफ्नो देश फर्केर उहाँ बौद्ध साहित्यको प्रचारमा ठूलो काम गरेका थिए। मध्यकालमा, जब भारतमा मुसलमानी आक्रमणको प्रभावले नालन्दा र विक्रमशील विश्वविद्यालय बाँकी नरहेकाले तिब्बतका बौद्धहरूको विशेष अध्ययनको केन्द्र नेपाल हुन आएको थियो। तेन्हौं शताब्दीमा तिब्बतका भिक्षु चाग-लो त्सय वा अथवा धर्मस्वामिले नेपाल आई केही बौद्ध ग्रन्थको अध्ययन गरेका थिए। उनले लेखेको जीवनीमा तत्कालीन नेपालका अनेक कुराको विवरण लेखेका

छन् जसमा नेपालका केही आचार्यहरूसंग तिब्बतका अनेक छात्रहरू अध्ययन गरिरहेको कुरा पनि लेखेका छन्[१] जसबाट नेपाल उपत्यका शिक्षण केन्द्र रहेको कुरा स्पष्ट हुन्छ ।

तिब्बती कलाको विकासमा पनि नेपालको राम्रो सहयोग रहेको थियो। तिब्बतमा बनेका चैत्यहरूको निकटतम सम्बन्ध नेपालका चैत्यहरूसंग भएको कुरा विद्वान्हरूले मानेका छन् जो सत्य पनि हो । चौधौं शताब्दीमा अनिकोले (अरनिको ?) कुब्लाई खाँको प्रेरणाले फाग्स्पाको निमन्त्रणामा तिब्बत र चीन गई कलात्मक विकास गरेका थिए ।[२] तिब्बती चित्रकलामा पनि नेपालको निकै प्रभाव परेको देखिन्छ । तिब्बतको चित्रकलामा प्रख्यात टङ्का चित्रकलामा नेपालको चित्रकलाको पनि प्रभाव परेको देखिन्छ ।

नेपालमा तिब्बतको पनि केही प्रभाव परेको देखिन्छ । नेपालका मगर, गुरूंग भोटे आदि जनजातिहरू तिब्बतमा विकसित लामावादको प्रभावमा परेका ज्ञात हुन्छन । पश्चिमी नेपालका मध्यकालीन अभिलेखमा लामावादको प्रख्यात मन्त्र 'ॐमणि पद्मे हूँ' देखिएकोले उक्त वादले पश्चिमी नेपालमा निकै प्रभाव पारिसकेको कुरा स्पष्ट हुन्छ । पश्चिमका अनेक मल्ल राजाहरूले तिब्बतको पश्चिमी प्रदेशमा शासन गरेकाले लामावादले पश्चिमी नेपालमा प्रवेश गर्न सजिलो बाटो पाएको थाहा पाइन्छ । उपत्यकामा पनि अनेक चैत्यहरूमा लामावादको मन्त्र "ॐ मणिपद्मे हूँ" लेखिएको देखिएकोले उपत्यकामा पनि यसले केही स्थान पाएको थाहा पाइन्छ । उपत्यकामा सिम्भू, काठेसिम्भू र बौद्ध (चाबेलनेर) आज लामावादका अनुयायीहरूको प्रमुख केन्द्रको रूपमा रही आएको छ । आज पनि त्यहाँ प्राय: तिब्बतका लामाहरू निवास गर्दछन् ।

उक्त विवरणबाट नेपाल र तिब्बतको पारस्परिक सांस्कृतिक सम्बन्ध स्पष्ट भएको देखिन्छ ।

---

[१] Biography of Dharmaswamin–By. Dr. G. Roerich. P. 53–56 यसबारे बौद्ध विद्वान् र भिक्षु प्रकरणमा विशेष कुरा लेखिएको छ ।
[२] Medieval History of Nepal–L. Petech P. 99–101.

# अध्याय-४

## १

## शाक्त सम्प्रदाय

नेपाल एक शाक्त पीठको रूपमा पनि प्रख्यात भएको कुरा धेरै प्रमाणले सिद्ध गरेका छन् । शिलालेख आदिको आधारमा भने यस सम्प्रदायको त्यति राम्रो इतिहास-निर्माण गर्न सकिंदैन । प्रथमतः हामी शिलालेखहरूको आधारमा शाक्त सम्प्रदायबारे केही विचार गर्नेछौं ।

मानदेवकी पत्नी विजयस्वामिनीले पलान्चोकमा भगवती विजय श्री देवीको मूर्ति स्थापित गरी एक शिलालेख पनि राख्न लगाएकी थिइन् ।[१] यस विवरणबाट अरू विशेष कुरा थाहा पाउन नसके पनि त्यस समयमा शाक्त सम्प्रदाय लोकप्रिय अवस्थामा थियो भन्ने थाहा पाइन्छ । अंशुवर्माको हाँडीगाउँ अभिलेखमा 'षष्ठी देवीको मन्दिर' (षष्ठीदेवकुल) को लागि केही पैसा दिइएको वर्णन गरिएको छ ।[२] यी देवी सामान्य जनतामा अति लोकप्रिय रही आएको देखिएकोले तिनलाई अंशुवर्माले आर्थिक दान दिएका थिए । भारतमा पुरानो समयमा यी देवी मन्दिर र मूर्ति रहेको थाहा पाइँदैन तर नेपालमा यसको मन्दिर रहेको थाहा पाइन्छ । यो यहाँको विशेषता हो । लिच्छविकालका अरू शिलालेखमा शाक्त सम्प्रदाय सम्बन्धी उल्लेख परेको छैन ।

शिलालेखहरूमा उल्लेख भएको दृष्टिले मध्यकालपछि शाक्त सम्प्रदायले राम्रो स्थान पाएको देखिन्छ । नेपाल संवत् ३४६ को थौपाटन अभिलेख छ जसमा महागौरीको मूर्तिको स्थापना गरिएको कुरा लेखिएको छ ।[३] अभिलेख देवीको मूर्तिको पादपीठमा उत्कीर्ण भएको छ ।

मल्लकालमा शाक्त सम्प्रदायको खूब लोकप्रियता बढ्यो । यस बेलाका

[१] हिमवत्संस्कृति, १-१, पृ. ४

[२] नोली-पृ. ४६

[३] अ. सं. भाग-२, पृ. १४

राजाहरू प्रायः शैव र शाक्त सम्प्रदायका अनुयायी हुन्थे । मल्लकालका प्रतापी राजा स्थितिमल्ल मानेश्वरीका परम भक्त थिए । उनले 'श्रीमानेश्वरीवरलब्ध-प्रसाद' उपाधि लिएका थिए । यही उपाधि कुम्भेश्वर पाटनको अभिलेखमा लेखिएको छ ।[१] यस प्रसङ्गमा हामीलाई मानेश्वरीबारे केही प्रश्न उठ्नु स्वाभाविक छ । लिच्छविकालका अनेक अभिलेखमा मानेश्वर महादेवको उल्लेख पाइन्छ[२] तर मानेश्वरीको उल्लेख कतै पाउन सकिएको छैन । लिच्छविकालमै मानेश्वरको स्थापना भएकोले मानेश्वरी पनि त्यसै समयमा स्थापित भएको मान्नमा गाह्रारो नभए पनि यसको लागि केही प्रमाण छैन । भाषा वंशावलिहरूमा मानदेवले मानेश्वरीको स्थापना गरी स्तुति बनाएको भनी केही संस्कृत श्लोक उद्धृत गर्ने चलन छ । मानेश्वरीको स्थापना मानदेवले गरे भन्ने प्रमाण नपाइए पनि मानेश्वर झैं मानेश्वरी पनि लिच्छविकालमैं प्रख्यात भइसकेको मान्न सकिन्छ तैपनि अंशुवर्माको हाँडीगाउँ अभिलेखमा विशेष प्रख्यात मन्दिरहरूको उल्लेख गर्दा मानेश्वरीको उल्लेख नभएकोले यस विषयमा अरू विशेष केही विचार गर्न सकिंदैन ।

पूर्व मल्लकालका अरू दुई राजाहरूले मानेश्वरी देवीलाई विशेष मान्यता दिएका थिए । ज्योतिर्मल्ल पशुपतिका भक्त भए पनि 'श्रीमन्मानेश्वरी-वरलब्धप्रसादित' [३]उपाधि ग्रहण गरी आफूलाई शक्तिका उपासक सिद्ध गर्दथे । यक्षमल्ल पनि यसै परम्पराका पोशक थिए । उनले पनि 'श्रीमन्मानेश्वरीदेवी वरलब्ध', उपाधि ग्रहण गरेका थिए ।[४]

यसै ताक झंकेश्वरी भगवती पनि निकै प्रख्यात थिइन् । नेपाल संवत् ५२७ तिरका फर्पिङ् भेकका स्थानीय शासक जयजैत्रसिंहदेवको विशेषण 'श्रीश्रीझंकेश्वरी वरलब्ध प्रसाद' छ । [५]स्थानीय वा प्रान्तीय शासकहरूले पनि राजाको जस्तै कुनै विशेष देवताको आश्रय लिएको कुरा यस उदाहरणबाट स्पष्ट हुन्छ ।

---

[१] Medieval Nepal. III. P. 33

[२] अंशुवर्माको हाँडीगाउँ अभिलेख–नोली पृ. ५०–५१
नरेन्द्रदेवको लगनटोल अभिलेख–नोली पृ. ८८
नक्साल अभिलेख–नोली पृ. १२३

[३] पशुपति अभिलेख (ने. सं. ५३३)– Medieval Nepal– III. P. 49

[४] Medieval Nepal III. P. 61-62 (ठिमी अभिलेख)

[५] Medieval Nepal. III. P. 43

यस प्रसङ्गमा एक मनोरञ्जक र विशेष महत्त्वपूर्ण कुरा पनि थाहा पाइन्छ । पशुपतिनेर राजेश्वरीको मन्दिरमा नेपाल संवत ५२८ को एक शिलालेख छ जसका नायक श्रीराजभट्ट रहेका देखिन्छन् । यी राजभट्ट दक्षिण भारतबाट तीर्थ यात्रा गर्न नेपाल आएका थिए भन्ने अन्दाजी गर्न सकिन्छ किनभने त्यस शिलालेखको मध्यभागमा दक्षिणभारतीय (कन्नड या मलयालम् ?) लिपिमा आठ दश अक्षर लेखिएका छन् ।[१]

यसरी हेर्दा शिलालेखको माध्यमबाट नेपालमा शाक्त सम्प्रदायको त्यति महत्त्वपूर्ण स्थान देखिँदैन तर अरू साक्ष्यहरूको आधारमा भने नेपाल एक प्रख्यात शाक्त पीठ थियो भन्ने कुरा थाहा पाइन्छ । देवी भागवतमा 'नेपालमा गुह्यकालीको महास्थान प्रतिष्ठित छ' भनी लेखिएको छ ।[२] वायुपुराणमा पनि 'नेपालपीठ' को उल्लेख गरिएको छ[३] जो शाक्तपीठको रूपमा उल्लेख गरिएको हुन सक्दछ । तन्त्रग्रन्थहरूमा त ठाउँ ठाउँमा नेपालको महत्त्वको वर्णन पाइन्छ जो नेपाललाई एक प्रख्यात शाक्तपीठको रूपमा रहेको स्पष्ट गर्दछन् । तन्त्रग्रन्थहरूको रचनाकाल निश्चित गर्न सकिँदैन तर ती ग्रन्थहरूको संग्रह धेरै पछिसम्म भैरहेकोले ती ग्रन्थहरूको विशेष ऐतिहासिक महत्त्व मानिँदैन । पुराणहरूको निर्माणकाल अथवा तिनको अन्तिम स्वरूप गुप्तकाल (४०० ई. तिर) मा बनी सकेकोले पुराणहरूको कथन विशेष महत्त्वपूर्ण छ । त्यस प्रमाण अनुसार ४०० ई. तिर नेपालकी गुह्यकाली भगवती विशेष प्रख्यात भइ सकेको थाहा पाइन्छ । पुराणमा यसको उल्लेख हुनु पनि यसको लोकप्रियताको सङ्केतक हो । गुह्यकालीबारे यति पुरानो सन्दर्भ पाइन्छ तर त्यस मन्दिरमा त्यति पुरानो शिलालेख आदि ऐतिहासिक प्रमाण एक पनि छैन । प्रतापमल्लको अभिलेख यहाँको सबैभन्दा पुरानो शिलालेख हो अंशुवर्माले आफ्ना समयमा रहेका विशेष प्रख्यात मन्दिरहरूलाई केही आर्थिक सहायता दिएका थिए तर त्यस

---

[१] Medieval Nepal III पृष्ठ– ४५; तर रेग्मीज्यूले यस शिलालेखमा नेवारीभन्दा भिन्न लिपिको प्रयोग भएको कुनै उल्लेख गर्नु भएको छैन । मैले शिलालेखको निरीक्षण गर्दा उक्त कुरा थाहा पाएको हुँ ।

[२] गुह्यकाल्या महास्थानं
नेपाले यत्प्रतिष्ठितम् ॥(७, ३८, ११)
यही श्लोक स्कन्दपुराणमा पनि छ ।

[३] पौड्रवर्धननेपालपीठं नयनयोर्युगे
पीठम्पूर्णगिरिन्नाम ललाटे समदृश्यतः ॥ (४२,७६)

सूचीमा गुह्यकालीको उल्लेख भएको छैन । यस कुराको के रहस्य हो बुझ्न गाह्रो छ ।

माथि वर्णित विवरणको आधारमा नेपाल एक शाक्त पीठको रूपमा पनि प्रख्यात थियो भन्ने थाहा पाइन्छ । उत्तर मल्लकालमा त शाक्त सम्प्रदायकै विशेष लोकप्रियता थियो भन्नु अतिशयोक्ति होइन । आजसम्म शाक्त सम्प्रदाय नेपालमा लोकप्रिय छ तर अरू धर्महरूसग समन्वयवादी भएर ।



२

# सूर्यको पूजा

हिन्दू धर्ममा आज सूर्यको ठूलो महत्त्व मानिन्छ। धेरै प्राचीन समयमा सूर्यको पूजा गर्ने एक अलग्गै समूह थियो जसको नाम थियो 'सौर सम्प्रदाय।' वैदिक कालमा सूर्यको महत्त्वपूर्ण स्थान थियो। पछि आएर अनेक धर्म र सम्प्रदायका अनुयायीहरूले पनि सूर्यको पूजा गर्न थाले।

नेपालमा पनि सूर्यको पूजाआजा गरिन्थ्यो जसको प्रमाण उपत्यकामा प्रशस्त संख्यामा पाइने सूर्यमूर्ति छन्। ती सूर्यमूर्तिमध्ये ऐतिहासिक रूपले सबैभन्दा पुरानो मानदेवको पालाको टेबहाल सूर्यमूर्तिलाई मान्नु पर्दछ। त्यस सूर्यमूर्तिको पादपीठमा अभिलेख छ जस अनुसार व्यापारीहरूका नेता गुहमित्रले त्यो सूर्यमूर्ति स्थापित गरेका थिए।[१] त्यस अभिलेखमा सूर्यमूर्ति स्थापित गरेको कुरा बाहेक अरू विशेष नलेखिएकोले त्यस समयमा सौर सम्प्रदायको कस्तो प्रभाव थियो बुझ्न गाहारो छ।

लिच्छविकालमैं अंशुवर्माले आफ्नो एक किसिमको मुद्रामा सूर्यचक्काको चित्र अङ्कित गराएका छन्।[२] अंशुवर्मा पाशुपत सम्प्रदायका अनुयायी थिए तर उनले आफ्नो मुद्रामा सूर्यलाई स्थान दिनु शैव र सौर धर्ममा पारस्परिक सम्बन्ध भएको थाहा पाइन्छ। यही कुरा अनेक किसिमका पशुपति मुद्राहरूमा अंकित सूर्यचक्कामा लाग्दछ।[३]

पशुपति आर्यघाटनेर एउटा गोलाकार पत्थर छ जसको कम्मरमा एक सानो अभिलेख लेखिएको छ जस अनुसार 'ब्राह्मण पुण्यगोमीले आफ्नो धर्मको

---

[१]आषाढशुक्लस्य तिथौ पञ्चदशम्यां शुभार्थिना।
वणिजां सार्थवाहेन गुहमित्रेण भक्तितः॥
संस्थापितोऽत्र भगवानिन्द्रो नाम दिवाकरः॥ नोली-पृ. १०

[२]Coins of Ancient India–A. Cunninghum P. 117

[३]चित्रफलक ११ च

लागि ...... शिलास्थान ... ...[१] (बाँकी अभिलेख भग्न छ) यो पत्थरको गोलाकृति बनाएका थिए। यसको आकृतिको आधारमा यसलाई सूर्यबिम्ब (Solar disc) मान्नमा केही गाह्रो परोइन। यसैले यसको स्वरूप र शिलालेखबाट सूर्यपूजाको नवीन रूप यसमा देखिन्छ। सूर्यको यो रूपमा पूजा गर्ने चलन नेपालको आफ्नो विशेषता हो किनभने यस्तो विम्ब भारतमा पाइएको थाहा छैन।

मध्यकालमा पनि सूर्यपूजा पारस्परिक रूपले चलिरहेकै कुरा केही शिलालेखले बताएका छन्। नक्साल धारामा रहेको सूर्यमूर्ति नेपाल सम्वत् १७९ मा बनाइएको कुरा त्यसै मूर्तिको पादपीठमा लेखिएको शिलालेखबाट थाहा पाइन्छ।[२] हुन त यस शिलालेखमा सूर्यमूर्ति स्थापना गरेको उल्लेख गरिएको त छैन तर मूर्तिको मुनि शिलालेख रहेकोले शिलालेख र मूर्तिको सम्बन्ध छ भन्ने कुरा स्पष्ट हुन्छ। नेपाल सवत् १८५ मा पनि प्रद्युम्नदेव राजाको पालामा रत्नाकर स्वामि नामक व्यक्तिले एक सूर्य मूर्तिको स्थापना गरेका थिए र त्यसै मूर्तिको पादपीठमा आफ्नो नाम राखी शिलालेख लेखाएका थिए।[३] यसको अलि पछि नेपाल संवत् २०३ मा बाणदेवले एक सूर्यमूर्तिको स्थापना गरी त्यसको पाउमुनिको भागमा संस्मरणको लागि शिलालेख पनि लेखाउन लगाएका थिए।[४]

मल्लकालमा पनि यही परम्परा थियो। यस समयका जम्मा चार शिलालेख त्यस कालमा सूर्यपूजा लोकप्रिय रहेको प्रमाण प्रस्तुत गर्दछन्। तिनै चार शिलालेख[५] मध्ये ने. सं. ५१४ को बनेपा अभिलेख विशेष महत्त्वपूर्ण छ किनभने त्यसमा सूर्यको स्तुति गरिएको छ। अभिलेखको प्रारम्भमैं "कर्माचार्य योगा:" लेखिएको छ। आज पनि नेपालमा विशेष गरेर उपत्यकाभित्र 'कर्माचार्य' उपाधि भएका (वा थर भएका) व्यक्तिहरू रहन्छन्। उपाधिको रूपमा प्रख्यात भएको कर्माचार्यको उक्त शिलालेखमा प्रयोग भएको कर्माचार्य शब्दको

[१] नोली पृष्ठ–१२६

[२] Medieval Nepal. III. P. 5.

[३] ऐजन ऐजन

[४] ऐजन ऐजन

[५] क. ने. सं. ५१४ को बनेपा अभिलेख, ऐ. पृ. ३५–६
ख. ने. सं. ५२७ को नाला अभिलेख, ऐ. पृ. ४१–२
ग. क्वथुटोल सूर्यमन्दिर अभिलेख ऐ. पृ. ५३
घ. ने. सं. ४७६ को बनेपा अभिलेख–ऐ. ७८

परस्परमा के सम्बन्ध छ स्पष्ट बताउन सकिँदैन । अनुमानतः कर्माचार्य उपाधि सूर्यपूजा गर्ने विशेष वर्गको सामूहिक नाम हुन सक्दछ। यस रूपमा सौर सम्प्रदायको नेपालमा आर्को विशेषताको रूपमा यो उदाहरण देखिन्छ । यस विषयमा विशेष अध्ययन बाँकी नै छ ।

## नेपालका सूर्यमूर्ति

नेपाल उपत्यकामा प्रशस्त सूर्यमूर्ति देखिन्छन् जसले यहाँ सूर्यपूजकहरूको राम्रो संख्या रहेको थाहा पाइन्छ । हुनत यहाँका कुनै शिलालेख अथवा ऐतिहासिक प्रमाणमा सूर्यको पूजा गर्ने मानिसहरूलाई भनिने "सौर" (सम्प्रदाय) शब्द कतै पनि भेटिँदैन ।

यहाँका सूर्यमूर्ति कति पुरानासम्म छन् भन्ने प्रश्न यस प्रसंगमा विशेष महत्त्वपूर्ण छ । मानदेवको पालामा एक व्यापारीका नेता गुहमित्रले सूर्यको मूर्ति स्थापित गरी त्यस अवसरमा शिलालेख पनि लेखाएका थिए । यस प्रमाणबाट मानदेवको पालामा शक संवत् ४०२ (वि. सं. ५३८) मा सूर्यमूर्ति बनेको कुरा थाहा पाउँछौं । हाल त्यो मूर्ति भुईंमा माडिएको हुनाले त्यसको वर्णन प्रस्तुत गर्न सकिएको छैन ।

सूर्य सम्बन्धी लिच्छविकालिक शिलालेख यही मात्र हो । मध्यकालमा चाहिं शिलालेख सूर्यमूर्तिकै पादपीठमा लेखिएका पाइन्छन् । जस्तो नक्सालको धारामा एक सूर्यमूर्ति छ (हाल राष्ट्रिय संग्रहालयमा सुरक्षित छ) जसको पाद–पीठमा नेपाल संवत् १७९ को शिलालेख छ ।[१] यस मूर्तिको विशेषता यसको गोडामा बनेको बूटमा देखिन्छ । उभिएका सूर्यमूर्तिमा मात्र बूट बनाइएको देखिन्छ । यस मूर्तिको लुगा पनि अभारतीय रूपको छ जसको समता कुषाण राजाहरूको लुगासंग गर्न सकिन्छ । यस कुरामा विद्वान्हरूले अनेक किसिमका कारण प्रस्तुत गर्दछन् ।

नेपाल संवत् १८५ (वि. सं. ११२३) मा पनि एक सुन्दर सूर्यमूर्ति पाटनमा स्थापित गरिएको थियो ।[२] यो मूर्ति पनि अति भव्य छ । यो मूर्ति उभिएको स्थितिमा रहेको भएर पनि यसको बूट छैन ।

बाणदेवले नेपाल संवत् २०३ मा एक मनोरम सूर्यमूर्ति स्थापित गरेर

---

१ Medieval Nepal III. P. 4-5

२ ऐजन पृ. ५

त्यसको पादपीठ भागमा शिलालेख पनि लेखाएका थिए।[१]

मल्लकालका तीन शिलालेख सूर्यमूर्तिसंग सम्बद्ध छन्।[२] यी शिलालेख तत्कालीन समाजमा सूर्यपूजाको परम्पराको क्रमिकताको साथ साथ सूर्यमूर्ति बनाउने परम्परा पनि क्रमिक रही रहेकै कुरा बताउँछन्।

उपत्यकामा सूर्य मूर्ति मुख्यतः दुइ किसिमका देखिन्छन्। पहिलो क्रम अन्तर्गत उभिएका र दोस्रो क्रम अन्तर्गत रथमा चढेका आउँछन्। पहिलो क्रमका मूर्ति प्रायः लिच्छविकाल र मध्यकालसम्मका पाइन्छन् तर मल्लकालमा चाहिं प्रायः रथमैं चढेका मूर्ति बनाउने परम्परा विशेष लोकप्रिय रहेको देखिन्छ। पुराना सूर्यमूर्ति पशुपति मन्दिरको दक्षिणपट्टि, पाटनका अनेक भागमा विशेष देखिन्छन्। मल्लकालका सूर्यमूर्ति उपत्यकाभरि जताततै प्रशस्त संख्यामा रहेका देखिन्छन्।



---

[१]श्री बाणदेवः कृतवान् प्रतिमासुप्रतिष्ठिता।
दिवाकरस्य या मात्रा पुरा संकल्पिता मुदा।
कर्तुस्तेनास्तु सततं तेजोवृद्धिरनन्तरा॥
Medieval Nepal III P. 5

[२]क. ने. सं. ५२७ को बनेपा अभिलेख–Medieval Nepal III. P. 41
ख. ने. सं. ५४२ को क्वथुटोल भदगाउँ अभिलेख–ऐजन पृ. ५३–५४
ग. ने. सं. ५१४ को बनेपा अभिलेख ऐजन–पृ. ३५–३६

३

# गणेश

हिन्दू धर्ममा गणेशको पूजा अति लोकप्रिय रूपमा चलिआएको छ जो शैव धर्मको प्रभावात्मक हो। गणेश शिवपरिवारका एक सदस्य हुन्। गणेशको पूजा आराधना गर्ने एक समूह पनि भारतमा थियो जो 'गाणपत्य' नामले प्रख्यात थियो। यो सम्प्रदाय स्वतन्त्र रूपमा नेपालमा चलेको कुरा कुनै प्रमाणबाट थाहा पाइँदैन तर गणेशका मूर्ति यहाँ प्रशस्त बनेका देखिन्छन् जो शिवपरिवारको एक सदस्यको रूपमा प्रख्यात र लोकप्रिय भएको अनुमान गर्न सकिन्छ।

गणेश सम्बन्धी अभिलेख नेपालमा कम पाइन्छन्। मध्यकालका दुइ अभिलेख छन् जो गणेशको मूर्ति स्थापित गरी त्यसको संस्मरणमा लेखाइएका छन्। यीमध्ये पहिलो चिकमबहिल पाटनको ५३६ ने. सं. को हो जसमा गणेशको स्तुति पनि लेखिएको छ।[१] अर्को अभिलेख सांगामा छ जो गणेशको पादपीठमा उत्कीर्ण भएको छ। यसमा नेपाल संवत् ५७३ छ र गणेशको मूर्तिको स्थापना गरिएको कुरा पनि लेखिएको छ।[२]

नेपाल उपत्यकामा गणेशका मूर्ति प्रशस्त छन् तर तिनमा धेरै पुराना कम छन्। गणेशको एक पुरानो मूर्ति पशुपति मन्दिरको पश्चिम ढोकानेर छ जो लिच्छविकालको जस्तो छ। यस मूर्तिको सूंड भांचिएको छ र मूर्ति उभिएको अवस्थामा छ। देब्रे पट्टिको एक हात पनि भांचिएको छ। मूर्ति राम्रो र कलात्मक छ ( चित्र संख्या ८ ग )।

---

[१] श्री श्री यंदुविनाय (क) देव स्थाप्नजुदिवश (स)-Medieval Nepal III. P. 53

[२] श्री श्रीगिरापुरीस्थाने जजमान भीमदत्त वर्म्मणेन स्वभार्या सहितनः श्री श्री श्री गणेश्वर [देव] थाप्न कृतः-ऐजन-पृ. ७१

गणेशको मूर्ति शिव परिवार फलकमा पनि बनेको देखिन्छ जसमा उनी नृत्य मुद्रामा पनि कताकतै बनेको देखिन्छ ।

नेपालका गणेश मूर्तिहरूको आर्को विशेषता असंख्य प्रकार भएकोमा छ । दुइ हात, चार हात, बत्तीस हात र अझ बढ्ता हात भएका गणेश मूर्ति उपत्यकामा, नुवाकोट आदि स्थानहरूमा देखिन्छन् ।



# चन्द्रमाको पूजा

वैदिक कालमा सोमको रूपमा चन्द्रमाको मान्यता थियो। पछि पछि अरू धर्म र सम्प्रदायका अनुयायीहरूले पनि चन्द्रमाको पूजा गर्न थालेका थिए जस्तो सोम-सिद्धान्त सम्प्रदाय। यस सम्प्रदायको मूल भावनाहरूमध्ये एक शिवसंग चन्द्रमाको घनिष्ठ सम्बन्ध देखाउनु हो। स्वतन्त्र रूपमा एक लोकपालको रूपमा चन्द्रमाको पूजा हिन्दू धर्ममा गरिन्छ। आर्को शब्दमा भनौं भने चन्द्रमाको पूजा गर्ने एक विशेष वर्गको संघटन भएको थिएन। तर मध्यकालीन नेपालमा चन्द्रमाको मूर्ति स्थापित गर्ने परम्परा चलेको थियो। लिच्छविकालमा यस्तो परम्परा थिएन। त्यस कालका मूर्ति फलकमा सूर्यको साथ साथ चन्द्रविम्ब पनि बनेको देखिन्छ। तर चन्द्रमाको स्वतन्त्र मूर्ति लिच्छविकालमा बनेको थाहा पाइएको छैन।

नेपाल संवत् ५४७ मा एक चन्द्रमाको मूर्ति बनाई स्थापित गरिएको थियो पाटन भण्डारखालमा जसको पादपीठमा शिलालेख लेखिएको छ।[१] स्वतन्त्र रूपमा चन्द्रमाको यो सबैभन्दा पुरानो मूर्ति हो। यसैले यसको विशेषता पनि थाहा पाइन्छ। यस्तै दुइ चन्द्रमाको मूर्ति नेपाल सम्वत् ५८३ मा काठमाडौं टेबहालमा स्थापित गरिएको थियो र मूर्ति स्थापनाको शुभ अवसरमा शिलालेख पनि लेखाइएका छन्।[२] यी विवरणबाट मध्यकालीन नेपालमा चन्द्रमाको पूजा आजाको राम्रो स्थान रहेको थाहा पाइन्छ। ती मूर्तिसंग सम्बद्ध शिलालेखको आधारमा चन्द्रमाको पूजा अरू कुनै धर्म वा सम्प्रदायको अँगको रूपमा रहेको त थाहा पाइँदैन अतः यस कुराको आधारमा त्यस कालमा चन्द्रमाको पूजा गर्ने एक विशेष वर्ग रहेको अन्दाजी गर्न सकिन्छ जसको कुनै न कुनै सम्बन्ध प्राचीन

---

१ Medieval Nepal-III. P. 55.

२.क Medieval Nepal. III-P. 78

ख. ऐजन ऐजन-पृ-७६

परम्परासंग रहेको हुन् सक्दछ । यस विषयमा धेरै कुराको विचार गर्न हामीसंग विशेष प्रमाण छैन । भारतमा चन्द्रमाको मूर्ति बनेको पाइँदैन र यसरी चन्द्रमासंग सम्बद्ध शिलालेख त छंदै छैन । यसरी स्पष्ट हुन्छ कि चन्द्रमाको मूर्ति बनाउने कला (Iconography) र धार्मिक स्वरूप नेपालमै विशेष रूपले संघटित भएको थाहा पाइन्छ जो नेपालको एक विशेषता हो ।



# ब्रह्माको पूजा

हिन्दू धर्ममा त्रिमूर्तिको आराधना महत्त्वपूर्ण मानिन्छ तर त्रिमूर्ति (ब्रह्मा, विष्णु र महेश्वर) मध्ये ब्रह्माको स्वतन्त्र रूपमा पूजा आजा गर्ने परम्परा त्यति लोकप्रिय छैन । भारतमा र नेपालमा ब्रह्माको स्वतन्त्र मूर्ति र मन्दिर छैन-प्राचीन कालको । पौराणिक आख्यान अनुसार ब्रह्माको मूर्ति बनाउनु हुँदैन भन्ने कुरा यस कुराको पृष्ठभूमि रहेको मानिन्छ ।

पशुपतिनेर ब्रह्माको एक मूर्ति छ जसलाई विद्वान्हरूले ४०० ई. तिरको भएको मानेका छन् (चित्र संख्या-८ घ) । चापागाउँ वकुटोलमा ब्रह्माको मूर्ति छ जसको आसनमुनि मूर्ति बनाउने अथवा बनाउन लगाउने भक्तका नाम कुबेरगुप्त र अनीकगुप्त दिइएका छन् ।[१] नेपालमा ब्रह्मा सम्बन्धी शिलालेख छैनन् ।



---

[१] अ. सं. भाग-६. पृ. २०

# सरस्वती

विद्याकी अधिष्ठातृ देवीको रूपमा सरस्वतीको हिन्दू धर्म अन्तर्गत धेरै सम्प्रदाय र धर्ममा पूजा गर्ने परम्परा प्राचीन समयदेखि चलिआएको छ। नेपालमा पनि सरस्वतीको पूजा आजा निकै गरिन्छ तर प्राचीन समयमा यसको कस्तो स्थिति थियो प्रमाण नपाइएकोले केही भन्न सकिंदैन। नेपालमा ऐतिहासिक प्रमाणको आधारमा सरस्वतीको सर्व प्राचीन मूर्ति ने. सं ४३४ को हो। पाटन समुखेलमा सरस्वतीको मन्दिर छ जसमा ने. सं. ४३४ को शिलालेख छ।[१] यसपछि ने. सं. ५६७ को यक्षमल्लको पालाको समुखेल पाटनकै शिलालेख छ जसमा सरस्वतीको स्तुति पनि लेखिएको छ।[२] त्यस शिलालेखमा सरस्वतीको मूर्ति स्थापना गरेको कुरा लेखिएको छ। मल्लकाल र पछि पछिका सरस्वती मूर्ति नेपाल उपत्यकामा प्रशस्त पाइन्छन् जो सरस्वतीको लोकप्रियताका प्रतीक हुन्।



[१] Medieval Nepal III. P. 16–17

[२] ऐजन पृ. ६७

अध्याय–५

# नेपालमा सर्वधर्म समन्वयको आदर्श

नेपाल यस्तो देश हो जहाँ अनेक धर्महरूको परस्परमा मीठो मैत्री रही आएको देखिन्छ। अनेक धर्महरूमा आजसम्म पनि झगडा आदि भएर लाखौं मानिसको संहार गरिन्छ। मध्यकालीन भारत र यूरोपमा धर्मको नाममा जब जन समूहको संहार हुन्थ्यो त्यस बेलामा नेपालमा सर्वधर्म समन्वयको मीठो दर्शन विस्तारै विस्तारै उठिरहेको थियो।

लिच्छविकालमैं धार्मिक एकताबारे विद्वान् र अनुभवी मानिसहरूले कति राम्रो भावना बनाइसकेका रहेछन् यो कुरा गणदेवको पालाको पशुपति अभिलेखमा स्पष्टिएको छ। त्यस शिलालेखमा:

पक्षमाह भूमितमनसां पक्षविच्छित्तिहेतोः

उद्देश्य लिएर शैव र वैष्णव धर्मलाई एक रूप दिइएको छ। यसभन्दा पहिले मानदेवको पालामैं धर्महरूमा पारस्परिक मैत्रीको उदाहरण देखिन्छ। एकै परिवारमा, अझ पति पत्नीमा भिन्न भिन्न धर्म वा सम्प्रदाय ग्रहण गर्ने सुविधा भएको कुरा आश्चर्यलाग्दो छ। आजको आणविक युगमा पनि यस्तो उदाहरण सहसा देख्न पाइँदैन।

सर्वधर्म समन्वयको आदर्श अंशुवर्माको समयमा विशेष रूपमा स्पष्टियो। उनले आफ्नो शासन प्रारम्भ हुने वित्तिकै सबै धर्महरूको समन्वय गर्ने आन्दोलन चलाएका थिए। यो कुरा हामी बुंगमती अभिलेखबाट थाहा पाउँछौं। लिच्छवि-कालका यस्ता प्रशस्त उदाहरण दिन सक्दछौं जसमा धर्महरूका अनुयायीहरूमा प्रेम र सद्भाव रहन्थ्यो।

आज नेपालमा हामी देख्दछौं कि यहाँ अनेक धर्म र सम्प्रदायहरूमा बिभिन्नताको भावना छैन। हिन्दू धर्मका वैष्णव र शैव आदि सम्प्रदायमा एकता हुनु त कुनै महान् आश्चर्य छैन तर बौद्ध र शैव वैष्णव धर्महरूमा सामञ्जस्यको

प्रवृत्ति विशेष उल्लेखनीय छ । शिव र बुद्धमा एकत्व ल्याउन खोज्ने सम्प्रदायको विकास यहीं भयो । अंशुवर्माको समयमा नै यो आदर्श प्रस्फुटित भैसकेको कुरा हामीले माथि नै विचार गरिसकेका छौं ।

आज नेपालमा पशुपतिनाथको लिंगमा वर्षेनी बुद्धमुकुट लगाएर छाँया दर्शन गर्ने र गराउने चलन छ । यो घटनाले स्पष्ट गर्दछ कि यसो गरिएको उद्देश्य दुई धर्ममा रहेका विभिन्नताबाट उब्जिन सक्ने कटुतालाई सिद्धयाउनु हो । यस रूपमा शिव र बुद्धमा भक्तहरू कुनै भेद देख्दैनन् ।

नेपालमा रहेका शैव वैष्णव बौद्ध सबै मन्दिरमा सबै धर्मसंग सम्बद्ध देवमूर्ति स्थापित गरिएका देखिन्छन् । बौद्ध चैत्य भएका ठाउँमा शिवको विष्णुको मूर्ति, शिवको मन्दिरमा बुद्धको मूर्ति राख्नाको कारण पनि धर्महरूमा सामञ्जस्य ल्याउने उद्देश्य राखी राखिएको देखिन्छ । पशुपति मन्दिरको दक्षिणी भित्तामा बुद्धको मूर्ति बनाउनु, पशुपतिको अगाडिपट्टि रहेको नृत्येश्वर महादेवको मन्दिरको दक्षिणी भित्तामा बनेको खोपामा बुद्धको मूर्ति राख्नु एक विशेषता हो ।

वैष्णव मन्दिरमा शिवमूर्ति र शिव मन्दिरमा वैष्णव मूर्ति राख्ने परम्परा त अति लोकप्रिय हो । सत्यनारायण स्थान हाँडीगाउँमा दुइ शिवलिंग स्थापित गरिएका छन् । चांगु नारायणमा पनि यही कुरा थाहा पाइन्छ । यस्ता असंख्य उदाहरण प्रस्तुत गर्न सकिन्छ । यस किसिमका कार्य पनि नेपालमा सर्वधर्म समन्वयको लोकप्रियता ल्याउन समर्थ भएको थियो । यो विशेषता नेपालको मात्र हो । संसारका अरू देशमा यस्तो उदाहरण कतै देखिंदैन ।

सर्वधर्म समन्वय भएर पनि ती धर्महरूले आफ्नो आफ्नो रूपमा मौलिक स्वरूप नष्ट गरेका छैनन् । सबै धर्म नेपालमा एक किसिमको मिश्रित अवस्थामा रहेर पनि तिनीहरूको अलग अलग स्वरूप अझ पनि मूल रूपमै चली आइरहेको छ । यो नेपाली धर्म परम्पराको आर्को विशेषता हो जसमा बाहिरी रूपबाट झट्ट हेर्दा यस कुराको विश्वास सामान्य जनतालाई पर्न सकोइन ।



*नेपालमा सर्वधर्म समन्वयको ऐतिहासिक क्रम बुझन आर्को पत्रमा एउटा ग्राफ बनाइएको छ ।

छ जसको परिचय अज्ञात छ ।

उत्तर मल्लकालका केही अभिलेखमा केही यात्राका नामको उल्लेख गरिएको छ । प्रतापमल्लका केही अभिलेखमा सप्तपुरी जात्राको उल्लेख गरिएको छ ।[१] यसबारे पनि हामीलाई विशेष ज्ञान छैन । प्रतापमल्लकै हनुमान ढोका विश्वरूपको अभिलेखमा नेगुलियात्रा (?) को उल्लेख गरिएको छ ।[२] थिनैका केही अभिलेखमा सद्धर्म यात्राको पनि उल्लेख गरिएको छ । एक ठ्यासफुमा त ओ यात्राको उल्लेख गरिएको छ ।[३] यी बाहेक हामीले माथि प्रासङ्गिक रूपमा पशुपति यात्रा, वराहयात्रा र हरिशंकरी यात्राको[४] परिचय त माथिनै लेखिइसकेको छ ।

आज चलिरहेका जात्राहरूबारे अध्ययन गर्नाको लागि हामीले तत्तद् यात्रासंग सम्बद्ध व्यक्तिहरूसंग रहेका प्राचीन पाण्डुलिपिहरूको अध्ययन गर्नु पर्दछ । शिलालेखमा नभएकोले नै हाम्रा महत्त्वपूर्ण यात्राहरूको प्राचीनताबारे शङ्का प्रकट गर्नु उचित होइन । हामीले यी यात्राहरूको विशेष वर्णन पाउन धेरै काम गर्नु पर्दछ जस्तो प्राचीन स्थलका उत्खनन र प्राचीन हस्तलिखित ग्रन्थहरूको अध्ययन ।

नेपालमा आज जति जात्रा चल्दछन् त्यति संसारका अरू देशमा चल्दैनन् यो नेपाली संस्कृतिको विशेषता हो । यिनै यात्राको रूपमा प्राचीन समयका गीत नृत्य र अरू धार्मिक परम्परा आज पनि नेपालमा जीवित रहेको छ । यी पनि नेपाली संस्कृतिका महत्त्वपूर्ण अङ्गको रूपमा सधैं जीवित रहने छन् ।

---

हनुमान ढोका विश्वरूपको अभिलेख ( अ. सं भाग-३ पृ. १६ ) मा पनि इन्द्रजात्राको उल्लेख गरिएको छ । ठ्यासफुहरूमा पनि यसको उल्लेख पाइन्छ–Medieval Nepal III. P.–54 66

[१]क. रानीपोखरी अभिलेख–अ. सं. ३, पृ. २५.

ख. भक्तपुर महाकाली अभिलेख अ. सं. भाग ३, पृ. २१

[२]अ. सं. भाग–३, पृ. २०

[३]Medieval Nepal III. P. 101

[४]एक ठ्यासफुमा हरिशंकर यात्राको उल्लेख गरिएको छ–Medieval Nepal III. P.. 123

# नेपालका बौद्ध शिलालेख

शुरुदेखि नै नेपालमा बौद्ध धर्म लोकप्रिय रहिआएकोले यहाँ त्यस धर्म सम्बन्धी केही शिलालेख पनि पाइएका छन् बसको आधारमा हामी यसको इतिहास तयार पार्दछौं।

नेपालका बौद्ध शिलालेख यद्यपि संख्यामा थोरै छन् तर ती थोरै भए पनि विशेष महत्त्वपूर्ण छन्। भारतमा बौद्ध शिलालेख त छन् तर यहाँका शिलालेखले झै महायान र यसका देवताहरूको कम उल्लेख गर्दछन्। जस्तो लिच्छविकालका शिलालेखहरूमध्ये हाल भण्डारखालमा रहेको ४३ संवत्को अभिलेख पनि छ जसमा "शस्तिुश्च कुमार विजयिन:" को उल्लेख गरिएको छ।[१] केही विद्वान् मञ्जुश्रीलाई कुमार भनिन्थ्यो भन्दछन् तर फेरि त्यसै ताकको पाटन त्यागलटोलको चैत्यको अभिलेखमा मञ्जुश्रीकै उल्लेख गरिएको छ।[२] यस प्रमाणबाट तत्कालीन नेपालमा मञ्जुश्री र कुमार एकै अर्थमा प्रयुक्त हुँदा रहेनछन् भन्ने स्पष्ट हुन्छ अनि यो कुरा पनि स्पष्ट हुन्छ कि त्यस कालमा नेपाली बौद्ध धर्ममा एक देवताको उद्भावना पनि भैसकेको थाहा पाइन्छ। उक्त नामको कुनै देवता भारतीय स्रोतबाट ज्ञात भएको छैन। माथि उल्लिखित पाटन त्यागलटोलको चैत्याभिलेखको आर्को विशेषता यो छ कि अक्षोभ्य, समन्तभद्र, वज्रधर र मञ्जुश्रीको उल्लेख गर्ने यो पहिलो अभिलेख हो।

मध्यकालीन नेपालका बौद्ध शिलालेख त बौद्धधर्मको दृष्टिबाट अत्यन्त महत्त्वपूर्ण छन्। त्यस कालमा भारतमा बौद्धधर्म लुप्त भैसकेको हुनाले त्यहाँ त्यस्ता शिलालेख राख्ने प्रश्नै उठ्दैन। यस समयका बौद्ध शिलालेख मात्र तत्कालीन बौद्धधर्मको लोकप्रियताका प्रमाण हुन्। यस समयका अति महत्त्वपूर्ण बौद्ध शिलालेखमध्ये एक स्थितिमल्लको पालाको कीर्तिपुण्यविहारको ताम्रपत्र हो जसमा बौद्ध (महायान) धर्मका अनेक देवताहरूको उल्लेख छ।[३] अरू शिलालेखमा यी देवताको उल्लेख कम पाइन्छ। यस रूपमा नेपाली बौद्ध धर्मको विशेषता पनि थाहा पाइन्छ। उत्तरमल्लकालका शिलालेखहरूको पनि यस्तै महत्त्व छ।

---

[१] पूर्णिमा पूर्णाङ्क ६, पृ. ५

[२] ऐजन पूर्णाङ्क- ५, पृ. ७३

[३] Medieval Nepal III. P. 30-31, यसमा कोष्ठपाल, यामलक, गांधलि भट्टारक आदि बौद्ध देवताको उल्लेख गरिएको छ।

# अन्तिम पृष्ठ

यसरी हामी प्राचीन र मध्यकालीन नेपालमा कुन कुन धर्म वा सम्प्रदाय लोकप्रिय थिए भन्ने कुरा थाहा पाउँछौं। त्यसवेलादेखि आजसम्मको अवधिमा धार्मिक विचार र परम्पराहरूमा धेरै परिवर्तन पनि आइसकेको देखिन्छ। आज नेपालमा कुनै धर्म र सम्प्रदाय पुरानो र विशुद्ध रूपमा वर्तमान छैन तर यस कुराको मतलब यो होइन कि आज नेपालमा त्यति लामो धार्मिक पृष्ठभूमिको केही पनि छैन बरू सबै धर्मका आदर्शहरूको संग्रह गरेर बनेको हो—आजको वर्तमान धार्मिक परम्परा। हुन त धेरै पुरानो समयमा पनि अनेक धर्महरूमा सामञ्जस्य ल्याउन नखोजिएको हैन तर त्यस्ता उद्देश्य आंशिक मात्रामा मात्र सफल भएका देखिन्छन्। जस्तो हामी देख्दछौं कि गणदेवको पालामैं वैष्णव र शैव सम्प्रदायको एकपक्ष सामञ्जस्यवादी थियो भन्ने कुरा थाहा पाउँछौं तैपनि वैष्णव र शैव धर्महरू पछिसम्म पनि स्वतन्त्र रूपमा चलिरहेका छन्। यस रूपमा पनि नेपाली संस्कृतिको विशेषता स्पष्टिन्छ।

माथिका अध्यायहरू पढ्दा प्रमुख कुरा हाम्रो मनमा लाग्दछ कि नेपालमा सम्प्रदाय र धर्महरूको बिलकुल भिन्न भिन्न सीमा रहेको देखिदैन। व्यक्तिगत धर्म जे होस् राजाहरू जनताका धर्मको पनि सम्मान गर्दथे भन्ने मूल कुरा नेपालको धार्मिक इतिहासका महत्त्वपूर्ण आदर्श रहिआएका देखिन्छन्।

नेपालको राजनीतिक इतिहासमा धर्मको विशेष प्रभावपूर्ण स्थान नरहेको कुरा बुझिन्छ। यसैले यहाँका राजाहरू आफ्नो परिवार र जनतालाई पनि पूर्ण धार्मिक स्वतन्त्रता दिन्थे। तर सांस्कृतिक इतिहासमा उक्त धर्महरूको महत्त्वपूर्ण स्थान रहिआएको छ। धर्मसंग सम्बद्ध मन्दिर, मूर्ति, चित्र र जात्राहरू नै नेपाली संस्कृतिको गौरवपूर्ण इतिहासका साक्षीको रूपमा आज विद्यमान छन्। अतः नेपाली संस्कृतिको निर्माण र सुरक्षामा यी धर्महरूले कति सहयोग गरेका रहेछन् स्पष्ट थाहा पाइन्छ।

नेपाली संस्कृतिको निर्माणमा शैव, वैष्णव, बौद्ध आदि सबै धर्म र सम्प्रदायको समान देन छ। शैव धर्मले शक्ति (अथवा सैनिक शक्ति) को विकासमा ठूलो देन दिएको मान्ने हो भने वैष्णवले यावत् जीवमाथि प्रेम गर्न सिकायो अनि बौद्ध धर्मले सबैलाई समान देख्न सिकायो। यी तीन आदर्शहरूको सम्मिश्रण हाम्रो संस्कृतिमा विद्यमान छ।



# सहायक ग्रन्थ-सूची


यो किताब लेख्नमा निम्न ग्रन्थहरूको सहायता लिइएको छ ।

१. नेपाल माहात्म्य

२. नेपालको संक्षिप्त इतिहास : प्रेम बहादुर लिम्बू

३. शैवमत ( हिन्दी ): डा. यदुवंशी

४. हिमवत्खण्ड

५. महाभारत

६. अभिलेख संग्रह १२ भाग ( संशोधन मण्डल )

७. संस्कृत सन्देश ( पत्रिका )

८. नेपाली ( त्रैमासिक पत्रिका–सम्पादक कमलमणि आदि )

९. Medieval Nepal. vol. I, II, III– D. R. Regmi.

१०. Nepalese Inscriptions in Gupta Characters.–R. Gnali.

११. Coins of Ancient India.– A. Cunninghum. (New-edition).

१२. पुरातत्त्व पत्र संग्रह भाग–२

१३. नेपाल ( पत्रिका ) त्रि. वि.

१४. पञ्चायत बाटो ( पत्रिका ) ( १–९ संख्या )

१५. हिमवत्संस्कृति पहिलो अङ्क

१६. गोरखापत्रका केही अङ्क

१७. शिव धर्म शास्त्र ( अप्रकाशित ) का केही भाग

१८. हर्षचरित ( निर्णय सागर संस्करण ) को केही अंश

१९. Saiva Cults in Northern India–V. S. Pathak

२०. नेपाल उपत्यकाको मध्यकालीन इतिहासः श्री सूर्य विक्रम ज्ञवाली

२१. India and China–P. C. Bagchi

२२. Journal Asiatique (1894)
२३. Life of Hiuantsang–Hwuili–Translated by S. Beal. Vol I
२४. Indian Antiquery vol IX, 1892,
२५. Epigraphia Indico-vol. XXI, I, II, XIV, XV,
२६. Archaeological Survey of India–1906–7
२७. Annual Report of the Archaeological Survey of India (New Series) 1930–34- J. Marshall.
२८. Development of Hindu Iconography–J. N. Banerjee
२९. सर्वदर्शन संग्रह (भण्डारकर ओरियन्टल सोसाइटी संस्करण)
३०. Vaisnavism Saivism and other Minor Religious systems–R. G. Bhandarkar
३१. Medieval History of Nepal-L. Petech.
३२. History of North Eastern India–R. G. Basak.
३३. Elements of Hindu Iconography. T. A. G. Rao. vol. II.
३४. Bhavnagar Inscriptions.
३५. Lahore Museum Catalogue of Coins–Whitehead.
३६. Catalogue of Palm leaf and Selected Paper Manuscripts belonging to the Durbar Library (Nepal) VOL. II.-H. P. Shastri
३७. Le Nepal.-S. Levi. Vol II, III,
३८. Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library (Cambridge)–C. Bendall.
३९. Journal of the Bihar and Orissa Research Society (Patna) Vol. XXII & XXIII
४०. इतिहास प्रकाश ( १–१ )
४१. बृहत्सूचीपत्र ( वीर पुस्तकालय )

४२. Ancient Nepal-D. R. Regmi.
४३. इतिहास संशोधनको प्रमाण प्रमेय ( संशोधन मण्डल )
४४. Missions of Wang-Fragment II and III ( Drawn from Fa-youen-tchou-lin ).
४५. Introduction to the Pancharatra and the Ahirbudhnya Samhita- F. Olto Shroder
४६. वराहपुराण
४७. शक्तिसङ्गमतन्त्र
४८. Geography of Ancient and Medieval India-D. C. Sircar
४९. वायुपुराण
५०. लिंग पुराण
५१. Catalogue of Coins of Ancient India in the British Museum- J. Allan.
५२. नेपाली राष्ट्रिय मुद्रा–सत्यमोहन जोशी
५३. भक्तपुर अभिलेख सूची
५४. Indian Culture-No. IV.
५५. Indian Epigraphy-D. C. Sircar
५६. The Philosophy of Vaisnava Religion-G. N. Mallik
५७. The Gupta Empire-R. K. Mukerjee.
५८. Indian Historical Quarterly
५९. Journal of the Royal Asiatic Society-1898, ( Buhler ).
६०. The age of Imperial Unity ( Bharatiya Vidya Bhaban ).
६१. Twentyfive hundred years of Buddhism-R. R. Diwakar.
६२. Biography of Dharmaswami- D. Roerich.
६३. Journal of the Bombay Branch of Royal Asiatic Society-vol. XVI.

६४. Takakusu's Records of the Buddhist Religion by Itsing.

६५. Descriptive Catalogue of Sanskrit Manuscripts-H. P. Shastri.

६६. The Gods of Northern Buddhism-A. Getty.

६७. An Introduction to Buddhist Esoterism-B. Bhattacharya.

६८. तिब्बतमें बौद्ध धर्म–राहुल सांकृत्यायन

६९. Mystic Tales of Lama Taranath–B. N. Batta.

७०. पूर्णिमा पत्रिका

७१. स्कन्दपुराण

## यस ग्रन्थमा प्रयुक्त संक्षेपीकरणका पूर्णरूप

नोली– Nepalese Inscriptions in Gupta Characters-R. Gnali

अ. सं.–अभिलेख संग्रह

सं. स– संस्कृत सन्देश

चित्रफलक—१



क. सुविख्यात
पशुपति मन्दिर



ख. मूलपशुपतिको लिङ्गः
हाल पशुपतिको
पश्चिम ढोका अगाडि
राखिएको छ ।

चित्र फलक—२



क विरुपाक्ष: पशुपति



ख. त्रिविक्रम: चाँगु

चित्र फलक—२



ग. गरुड नारायण: चाँगु

चित्र फलक —२



क. धुम्बाराही ( वराह अवतार )



ख. बुढानीलकण्ठः चपलीगाउँ

चित्र फलक— ३



ग. कालीयदमन कृष्ण हनुमान ढोका

चित्र फलक—४



क. शृंखला र मुराड-शृंखला लगाएको भैरव मूर्ति (मल्लकाल). भक्तपुर दरवार



ख. शृंखला लगाएको आकाश भैरव: हनुमानढोका

चित्र फलक—५



क. शृंखला लगाएको गणेश (मल्लकाल)
यो माटाको बनेको छ: हाल म्यूजियम



ख. छत्रचण्डेश्वर: भीमसेन स्थान

चित्र फलक—६



क हरगौरी फलक (लिच्छविकाल)
पशुपति राजेश्वरी घाट



ख, कालभैरवः हनुमानढोका

चित्र फलक—७



क. मुण्डश्रृंखला लगाएका शिवः किलागल



ख. लिच्छविकालको शिवलिङ्गः लाजिम्पाट



ग. मुण्डश्रृंखला लगाएका महादेवः इन्द्रचोक



घ. हरिहरः नक्साल

चित्र फलक—८



क[१]. भैरवको शिरोभाग:
राष्ट्रिय संग्रहालय



क. हरिहर (मल्लकाल)
आर्ट्स ग्यालरी: भक्तपुर



ए. मुण्डशृंखला लगाएको शिवको
सुखासन मूर्ति: वीर पुस्तकालय

चित्र फलक—८



ग. गणेशः पशुपति



घ. ब्रह्माः पशुपति

चित्र फलक — ६



क. बौद्ध चैत्य र पद्मपाणि
अवलोकितेश्वरःमूर्ति सिम्भू



ख. शिव बुद्ध सम्प्रदायको प्रतीक
चैत्यः सिम्भू



ग. एक भग्न हरगौरी
फलकः किलागल



घ. शिवलिङ्गलाई आदर्श
मानेर बनेको बुद्ध मूर्ति
(चतुर्मुखी) सिम्भू

चित्र फलक—१०



क. पृथ्वीमल्लको जुम्ला स्तम्भाभिलेखः
टाढाबाट



ख. ऐजन: नजीकबाट



ग. बौद्ध चैत्यः सिम्भू
जसमा शिव बुद्ध धर्मको
एकत्व देखिन्छ

चित्र फलक १०



ग. ऐजन: नजिकैबाट समग्र



ङ. ऐजन: द्रष्टव्य यसको
शीर्षभागकोचैत्य चित्र

चित्र फलक—११



क. पशुपति मुद्रा



ख. मानाङ्क मुद्रा



ग. पशुपति मुद्रा



घ१. पशुपति मुद्रा

चित्र फलक—१२



च. अंशुवर्माको मुद्रा





घ २ पशुपति मुद्रा





ङ. पशुपति मुद्रा